# हनूमान्ढोका राजदरबार

गौतमवज्र वज्राचार्य



नेपाल र एशियाली अध्ययन संस्थान
त्रिभुवन-विश्वविद्यालय
कीर्तिपुर

ऐ. शि. बाबुराम आचार्यज्यूको संझनामा
सादर समर्पित

# भूमिका

नेपाल उपत्यकामा यहाँका प्राचीन दरबार क्षेत्रको महत्त्व र भूमिका बडो टड्कारो रूपले सबैको सामू उभिन्छ। यसले चर्चेको क्षेत्रमा चाहे त्यो काठमाडौं, पाटन अथवा भादगाउँ जहाँसुकै होस्, यसका प्राचीर, मन्दिर र अनेकौं ऐतिहासिक अवशेषहरूको घुइँचोले, दरबारभित्र अवस्थित नाना इतिहास दर्शाउने चोकहरूले र ती क्षेत्रहरूको स्थानीय सांस्कृतिक जनजीवनमा अझै पनि विद्यमान प्रभुत्व इत्यादि कुराले एउटा अतीतको अविच्छिन्न आभा छरिरहेको भान यहां घुम्न जाने पर्यटक होस् अथवा रैथाने दुवैलाई एकनासले हुन्छ। नेपाली इतिहासको अखण्डित सिलसिला घनीभूत र एकत्रित भएर बसेका ठाउँ यिनै दरबारहरू हुन् र कोटचाउन सकुन्जेल इतिहासको पत्रैपत्र यहांबाट फेलापर्न सक्दछ। यही महत्त्वलाई दृष्टिमा राखेर संस्थानले श्री ५ महाराजाधिराज वीरेन्द्रवीरविक्रम शाहदेव सरकारको शुभ-राज्याभिषेकसम्ममा समाप्त हुने गरी ऐतिहासिक हनुमान्ढोका दरबारको एउटा गहकीलो अध्ययन सम्पन्न गराउन खोजेको थियो र यस प्रोजेक्टको जिम्मा श्रीगौतमवज्र वज्राचार्यलाई दिएको थियो। तर कतिपय कारणहरूले गर्दा शुभ-राज्याभिषेक समारोहका समयमा यसको अंग्रेजी सारांश मात्र तयार पार्न सकिएको थियो र अध्ययनको मूल प्रतिवेदन प्रकाशनमा ल्याउन अहिले मात्र सम्भव भयो।

प्रस्तुत अध्ययनमा हनुमान्ढोकाको प्राचीनतालाई लिएर एउटा छोट्करी ऐतिहासिक पृष्ठभूमि दिइएको छ। अध्ययनको मूल उद्देश्य यस दरबारका विभिन्न भागहरूको विस्तृत वर्णन र त्यहां र त्यस वरिपरिका क्षेत्रमा गरिने सांस्कृतिक क्रियाकलापको सकेसम्म पूर्ण इतिवृत्त प्रस्तुत गर्नु थियो। हुन त संस्थान यस्तो प्रोजेक्टलाई एउटा बहुविषयी अध्ययन बनाई यस दरबारको कला र वास्तुकलाको समेत अधिकारपूर्ण वर्णन यसभित्र होस् भन्ने चाहन्थ्यो। त्यस मानेमा यो अध्ययन अपूरो छ र यहां मुख्यतः ऐतिहासिक र सांस्कृतिक पक्ष मात्र उद्घाटित भएको छ। तर यिनीहरूको क्षतिपूर्ति भविष्यमा होला भन्ने आशा यहां लिइन्छ। परिशिष्टमा हनुमान्ढोकाबाट प्राप्त महत्त्वपूर्ण मूल सामग्रीहरूको पाठ प्रस्तुत गरिएको छ, जसमा विशेषज्ञहरूलाई अभिरुचि हुन सक्दछ। श्रीगौतमवज्रको अन्वेषणको अनुभव, विद्वत्ता र मिहिनेत यस प्रतिवेदनमा भिजेको छ र अवश्य नै उहां सह्रानीको पात्र हुनुहुन्छ।

**डा. प्रयागराज शर्मा**
डीन
ने. ए. अ. सं.

**बैशाख** ३०, २०३३

# विषय-सूची

# विषय-सूची

# प्राचीनता

हनूमान्ढोका राजदरवार काठमाडौंका मल्ल राजाहरूले बनाएर गएको राजकीय वासस्थानको रूपमा प्रसिद्ध छ। यहाँ हाल रहेका भवनहरू केही मल्लकालमा, केही शाहकालमा वनेका छन्। मल्लकालभन्दा पुरानो कुनै भवन यस दरवारभित्र देखिएको छैन[1]। 'हनूमान्ढोका' भन्ने नामकरण पनि विक्रमको अठाह्रौं शताब्दीको पूर्वार्द्धमा मात्र भएको थियो[2]। यस कारण यस राजदरवारलाई मल्लकालिक राजभवन भनेको खण्डमा साधारणतया कुनै आपत्ति छैन। तर यस भेकमा प्राचीनकालदेखि नै प्रसिद्ध राजकुल (राजदरवार) रहेको थियो भन्ने कुरो हालैको अन्वेषणकार्यबाट ज्ञात भएको छ। लिच्छविकालका ऐतिहासिक सामग्री केलाएर हेर्‍यौं भने यस दरवारको प्राचीनताबारे निकै प्रकाश पर्छ। यसैले अब यस विषयमा केही विचार गर्नुपरेको छ।

लिच्छविकालमा नेपाल उपत्यकाको विभिन्न भागमा निकै बस्ती बसिसकेका थिए। उपत्यकाका छेउ–छेउमा रहेका प्रदेश लिच्छविहरूको समयदेखि नै आवाद भइसकेको देखिन्छ। अनन्तलिङ्गेश्वर, चापागाउँ, थानकोट, बूढानीलकण्ठ, गोकर्ण, साँखु आदि उपत्यकाका चारैतिरका गाउँमा पाइएका अभिलेखहरूबाट यो कुरो विदित हुन्छ। काठमाडौं, पाटन, भादगाउँमा पनि त्यस वेला प्रशस्त बस्ती थिए। तर अहिले जस्तै तीन ठूला शहरका रूपमा ती परिणत भइसकेका थिएनन्। यसो हो तापनि अरू बस्तीको अपेक्षा पाटनमा निकै घना बस्ती बसिसकेको थियो[3]। काठमाडौंले पनि शासनव्यवस्थाको दृष्टिले केन्द्रको रूप लिइसकेको थियो। भक्तपुरको भने त्यस वेला त्यति ठूलो उल्लेखनीय स्थान देखिंदैन।

काठमाडौं शहर लिच्छविहरूको समयमा दक्षिणकोलिग्राम तथा कोलिग्राम नामले दुइ भागमा विभक्त थियो। वर्तमान काठमाडौं शहरको दक्षिणी भाग अर्थात् आजभोलिको लगन, यङ्गालटोल, ब्रह्मटोल आदि प्रदेश दक्षिणकोलिग्राम नामले प्रसिद्ध थियो। यो कुरो त्यतातिर

---

१. हनूमान्ढोकाको प्रांगणमा रहेको सबभन्दा पुरानो भवन मरुसत्तल हो। जसको पहिलो उल्लेख वि.सं. १२०० मा सारिएको हस्तलिखित ग्रन्थमा देखिएको छ (इतिहास-संशोधनको प्रमाण–प्रमेय ११० पृ.)। परन्तु यस दरवारको भित्री इलाकामा राजा महेन्द्रमल्लले वि.सं. १६२० माघमा बनाएको तलेजुको मन्दिरभन्दा पुरानो कुनै अर्को भवन देखापरेको छैन।

२. परिशिष्ट, ३३ संख्याको अभिलेख

३. धनवज्र वज्राचार्य, "लिच्छविकालिक बस्ती" पूर्णिमा (काठमाडौं, संशोधनमण्डल, वि.सं. २०२५ साउन) ५ वर्ष, २ अंक, ८७ पृ.

पाइएका लिच्छविकालका अभिलेखहरूबाट थाहा पाइन्छ[1]। काठमाडौंको दक्षिणी भागको पुछारमा रहेको मीननारायणस्थानदेखि यङ्गालहिटीसम्मका लिच्छवि अभिलेखमा त्यतातिरको प्रदेशलाई बुझाउन दक्षिणकोलिग्राम भनिएको छ[2]। आजभोलिको इटुम्बहाल, मत्स्येन्द्रनाथतिरको ठाउँचाहिं उस बेला कोलिग्राम नामले प्रसिद्ध थियो। पछिसम्म पनि यस भेकलाई कोलिग्राम भन्ने चलन हराइसकेको थिएन। प्रतिवर्ष श्रावण महीनामा हुने, 'बहिबोय्' भनी प्रसिद्ध विहारमा संचित वस्तुहरूको प्रदर्शनी देखाउने बेलामा इटुम्बहालमा प्रदर्शित गरिने हस्तलिखित ग्रन्थको अन्त्यमा लेखिएको पुष्पिकावाक्यबाट इटुम्बहाल कोलिग्रामभित्र पर्दथ्यो भन्ने बुझिन्छ[3]। यक्षमल्लको पालामा सारिएको एउटा हस्तलिखित ग्रन्थमा पनि कोलिग्रामको उल्लेख आएको छ। त्यस उल्लेखअनुसार जमलगण्ठि (मछिन्द्रबहाल) कोलिग्रामभित्र पर्दथ्यो[4]। लिच्छविकालकै अभिलेखमा चाहिं कोलिग्रामको चर्चा पाइएको छैन। परन्तु शहरको दक्षिणपट्टिको भागलाई दक्षिणकोलिग्राम भन्ने तात्कालिक उल्लेख पाइएको हुनाले इटुम्बहाल, सेतो मत्स्येन्द्रनाथ आदि वर्तमान शहरको मध्यभाग लिच्छविकालदेखि नै कोलिग्राम नामले प्रसिद्ध थियो भन्ने देखिन आउँछ।

लिच्छविकालका अभिलेखमा पाइने ठाउँलाई बुझाउने नाम दुइ किसिमका छन्। दोलाद्रि नवगृह यूपग्राम आदि एक थरि नाम संस्कृत शब्दबाट बनेका छन्। माखोपृङ, ह्यस्प्रिङ्ग, पुठम्प्रिङ्ग आदि अर्का थरि नाम संस्कृतेतर भाषासंग सम्बद्ध छन्। लिच्छविकालमा सबै सरकारी कामकाज संस्कृतमा गरिन्थे। अहिलेसम्म पाइएका त्यस बेलाका सबै अभिलेख संस्कृत भाषामै लेखिएका छन्। यस कारण लिच्छविहरूले संस्कृत शब्दबाट बनेका नाम बढी रुचाउनु स्वाभाविक छ। परन्तु संस्कृतमा दोलाद्रि, यूपग्राम, नवगृह आदि नामको व्यवहार गरिए पनि साधारण जनताको बोलचालीको भाषामा बेग्लैनाम प्रयोग गर्ने चलन थियो भन्ने देखिन्छ। पाटनका लिच्छवि शिलालेखमा उल्लिखित यूपग्राम वर्तमान पाटन शहरको पूर्वरूप थियो। मौलोलाई बुझाउने संस्कृत यूप शब्दबाट त्यस प्रदेशको नामकरण भएको छ। पुरानो नेवारी टीका भएको अमरकोशअनुसार यूपलाई बुझाउने नेवारी शब्द यलसिं हो। पाटनलाई नेवारी भाषामा यल भनिन्छ। यस कारण लिच्छविहरूले 'यल' लाई संस्कृतीकरण गरी यूपग्राम भनी नाम राखेका हुन् कि भन्ने

---

१. सोही ६३–६५

२. धनवज्र वज्राचार्य, "लिच्छविकालका अभिलेख" (काठमाडौं, नेपाल र एशियाली अध्ययनसंस्थान त्रिभुवनविश्वविद्यालय) १०७, १११, ११७, १२४ संख्याको शिलालेख, ४०७–४०८, ४२३–४२४, ४४२–४४३, ४६३–४६४ पृ.

३. सो पुष्पिकावाक्यमा यस्तो लेखिएको छ–

"सम्वत् ४७८ भाद्रवशुद्धि १० लक्षाभगवती संपूर्ण दिवस... महायानयायिनः परमधार्मिकः परमसर्वज्ञशासनिक श्रीकोलिग्रामीय श्रीभास्करदेवसंस्कारित इति श्रीकेशवचन्द्रकृतमहाविराधिवासिन शाक्यभिक्षु वुद्धाचार्य श्रीराजव्रह्म श्रीनामा"

४. वज्राचार्य, "लिच्छविकालिक बस्ती" पूर्णिमा, ५ वर्ष, २ अंक, १८ पूर्णांक ६३ पृ.

देखिन्छ१। लिच्छविकालको अन्त्यपछि संस्कृत भाषाको पठनपाठन कम हुँदै गएको हुनाले संस्कृत शब्दबाट बनेका ठाउँका नाउँभन्दा लोकभाषासंग सम्बद्ध भएका ठाउँका नामको बढी प्रचार भयो। लिच्छविकालमा दोलाद्रि भनी प्रसिद्ध चांगुडाँडा मध्यकालमा चँगु भनी बढी प्रसिद्ध भयो। देउपाटनलाई संस्कृतमा नवगृह भनी कतै कतै लेखिए पनि यसको चल्तीको नाउँ ग्वल थियो[2]। यसै गरी लिच्छविकालपछि काठमाडौंको दक्षिणी भागलाई बुझाउन दक्षिणकोलिग्राम भन्नाको सट्टा यङ्गल भन्न थालियो। उत्तरी भागलाई कोलिग्राम भन्नाको सट्टा यम्बु भन्ने चलन बढी चल्यो। यङ्गल भन्नाले त्यस बेला पूर्वमा आजभोलिको टेबहालको सीमानासम्म, दक्षिणमा लगनटोलभन्दा पर, पश्चिममा भीमसेनस्थानसम्म र दक्षिणमा मखनटोलको सिंहढोकासम्मको प्रदेशलाई बुझाउँथ्यो। यसै गरी मखनदेखि ठहिटीसम्मको प्रदेशलाई यम्बु भनिन्थ्यो। हनूमानढोकाबाट मखनटोल भएर इन्द्रचोक निस्कने बाटोमा उभिएका ढुङ्गाका दुइ सिंह यम्बु पस्ने ढोकाका अवशेषका रूपमा रहेकै छन्। हस्तलिखित प्राचीन ग्रन्थ, घर जग्गा सुकीविक्री गर्दा प्रामाणिक सरकारी कागतको रूपमा लेखिने पुराना ताडपत्र, तात्कालिक चित्र र तत्तत्स्थानका शिलापत्रहरूबाट हामी यो कुरा थाहा थाहा पाउँदछौं[3]।

यङ्गल र यम्बु यी दुइ नाम यं शब्दमा गल तथा बु जोडेर बनेका छन्। यसको मूल शब्द त यं मात्र हो। यं भन्नाले यङ्गल र यम्बु यी दुबै इलाकाभित्र पर्ने प्रदेशलाई बुझाउँछ। नेवारीमा काठमाडौंलाई यं भन्ने चलन अझ हराएको छैन।

'गल' शब्द 'ग्वल' शब्दको अपभ्रंश हो भन्ने देखिएको छ। प्राचीन नेवारी भाषामा ग्वल शब्दले टोल जस्तो कुनै सानो ठूलो विस्तार निश्चित नभएको प्रदेशलाई बुझाउँछ। ग्वल शब्द अन्त्यमा हुने ठाउँका नाउँ लिच्छविकालका अभिलेखमा प्रशस्त पाइन्छन्। यसको उदाहरणको लागि पाटन मीननाथको लिच्छवि अभिलेखलाई प्रस्तुत गर्न सकिन्छ। त्यहाँ गीग्वल, तेग्वल, यूग्वल आदि प्रदेशका पाञ्चालिकहरूको उल्लेख आएको छ[4]। लिच्छविकालपछिको ने. सं. १३२ (वि.सं. १०६९)को पाटनकै शिलालेखमा तेग्वलनामक ठाउँको चर्चा परेको छ[5]। आजभोलि चाहिं त्यस ठाउँलाई त्यागल भन्दछन्। यसै गरी काठमाडौं जैसीदेवलनजीकै लिच्छवि अभिलेख-

---

१. सोही ६१–६३ पृ.

२. सोही ६५–६६ पृ.

३. गौतमवज्र वज्राचार्य, "यङ्गल यम्बु" कन्ट्रिब्युसन्स टु नेपालीज् स्टडीज् (काठमाडौं, नेपाल र एशियाली अध्ययनसंस्थान, त्रिभुवनविश्वविद्यालय वि.सं. २०३१ आषाढ) १ वर्ष, २ अंक ६०–६८ पृ.

४. वज्राचार्य, "लिच्छविकालका अभिलेख" १४६ संख्या, ५४३–५४४ पृ.

५. रामजी तेवारी र अरू, "अभिलेख–संग्रह" (काठमाडौं २०२० वैशाख) ६ भाग, २४–२५ पृ.

मा उल्लेख आएको लङःजग्वल[1] मल्लकालको त्यहींनिरको अभिलेखमा लुंजग्लको[2] रूपमा देखापरेको छ। यसरी लिच्छविकालको 'ग्वल' पछि आएर गल आदि रूपमा परिवर्तित भएको देखिन्छ। यङःगल पनि लिच्छविकालमा यङःग्वलको रूपमा स्थानीय जनभाषामा प्रचलित हुन नसक्ने देखिंदैन। बु शब्द अन्त्यमा हुने ठाउँका नाम पनि लिच्छविकालमा पाइन्छन्। ध्रुवदेव र जिष्णुगुप्तको पाटन छिन्नमस्तानिरको अभिलेखमा लेखिएको थम्बु ग्राम[3] तथा बलम्बुको द्वितीय शिवदेवको अभिलेखमा उल्लिखित सलम्बु[4] उदाहरणको लागि प्रस्तुत गर्न सकिन्छन्। यसरी संस्कृतमा दक्षिणकोलिग्राम तथा कोलिग्राम लेखिए तापनि लौकिक भाषामा लिच्छविकालमै पनि यङ्गल, यम्बु भन्ने चलन चलेको अनुमान हुन्छ।

आजभोलि गाउँ अथवा ग्राम भन्नाले थोरै घर भएको बस्तीलाई बुझाउँछ। यस कारण दक्षिणकोलिग्राम लिच्छविकालको कुनै सानो गाउँ हो कि त भन्ने जस्तो हामीलाई लाग्नु स्वाभाविक छ। परन्तु प्राचीन परिभाषानुसार विकसित बस्तीलाई बुझाउन पनि ग्राम शब्दको प्रयोग हुन्थ्यो। संस्कृतका प्रसिद्ध कवि भासले बनाएको स्वप्नवासवदत्त नामक नाटकमा राजदरवारसमेतको समृद्ध बस्तीलाई 'ग्राम' संज्ञा दिइएको छ । दक्षिणकोलिग्राम पनि थोरै आवादी भएको सानो बस्ती नभएर लिच्छविकालको एउटा समृद्ध बस्ती थियो। ठूलो बस्ती भएको हुनाले नै यसले दक्षिणकोलिग्राम द्रङ्ग भन्ने संज्ञा पाएको थियो। त्यस वेला एउटा द्रङ्गभित्र अनेक तल र गाउँहरू हुन्थे भन्ने कुरा लिच्छवि अभिलेखहरूबाट थाहा पाइन्छ[6]। एउटा चाखलाग्दो कुरा के छ भने थानकोटतिरका बासिन्दाहरूलाई कर तिर्न दक्षिणकोलिग्राममा जानुपर्दथ्यो[7]। यताबाट दक्षिण-कोलिग्राम प्रशासनको केन्द्रको रूपमा रहेको थियो कि त भन्ने आभास हाम्रो मनमा पर्छ। वास्तवमा लिच्छविकालमा दक्षिणकोलिग्राम वा यङ्गलको सीमाभित्र एउटा राजकुल (राजदरवार) बनेको थियो। दक्षिणपट्टिको कोलिग्राम अर्थात् दक्षिणकोलिग्राममा बनेको सो राजकुल दक्षिणराजकुल भनी प्रसिद्ध थियो। यो कुरा जैसीदेवलबाट लगन जाने बाटोमा घरको भित्तामा ठड्याएर राखिएको संवत् ५३५ (वि. सं. ६७०) को अभिलेखबाट बुझिन्छ। त्यहाँ यस्तो लेखिएको छ–

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" १४७ संख्या, ५४७ पृ.

२. जैसीदेवलनजीकै रहेको ल्हुगबहालभित्र भित्तामा टांगिएको अप्रकाशित ताम्रपत्रमा यस्तो लेखिएको छ– "श्रीकाष्ठमण्डपमहानगरे दक्षिणदिश लुंजग्लत्वर ... श्रीश्रीशिवसिंहदेव ठाकुलस विजयराज्ये

३. वज्राचार्य, "लिच्छविकालका अभिलेख" १०५ संख्या, ४०१–४०२ पृ.

४. सोही १४३ संख्या, ५३०–५३२ पृ.

५. वज्राचार्य, "लिच्छविकालिक बस्ती" पूर्णिमा ५ वर्ष, २ अंक ९७–९८ पृ.

६. धनवज्र बज्राचार्य, "लिच्छविकालका शासनसम्बन्धी पारिभाषिक शब्दको व्याख्या" पूर्णिमा (वि.सं. २०२३ श्रावण) ३ वर्ष, २ अंक १३–१७ पृ.

७. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ११५ संख्या ४३३–४३४ पृ. "दक्षिणकोलिग्रामे गोयुद्धे गोहले गोहले यद्देयमासीत्तस्यार्धम्प्रतिमुक्त"

"... वः प्रसादीकृ (तः) ,.. नुज्ञः फृथुलक्षेत्रम्पूर्वं ... मङ्गलस्य क्षेत्रम् ततो भरताश्र (म)... तुलक्षेत्रम् ततस्तेग्वल्प्रा ... आदित्यगुप्तस्य क्षेत्रम् पूर्वद...ट्राक्षेत्रम् ततस्तेग्वलनारायण . . . स्तेग्वलप्रदीपगौष्ठिकानाम् तस्या भूमेर्दक्षिण...मेर्दक्षिणराजकुलस्य दक्षिणपश्चिमेन...लीपाञ्चालिकानाम्पश्चिमेन पर्वत. . .पाञ्चालि. . .नाम् पश्चिमोत्तरेण पर्वतभूमिर्दक्षिणराजकुल (सीमा) परिक्षिप्तेयम्भूमिरित्यवगम्य न कैश्चिदस्मत्पादोपजीविभिरयम्प्रसादोन्यथा करणीयो. . .[1]"

(फृथुल भन्ने खेतदेखि पूर्वतिर ... मङ्गलको खेत, त्यसदेखि भरताश्रम .. तुल भन्ने खेत, त्यसदेखि तेग्वल ...आदित्यगुप्तको खेतदेखि पूर्वदक्षिणतिर . . . ट्रा भन्ने खेत त्यसदेखि तेग्वलनारायणस्थान ... तेग्वलको बत्ती बन्दोबस्त गर्ने गुठियारहरूको त्यस ठाउँदेखि दक्षिण ... दक्षिणराजकुलको दक्षिणपश्चिमतिर ... ली पाञ्चालिकहरूको इलाकादेखि पश्चिमतिर उकालो . . पाञ्चालि... को पश्चिम उत्तरतिर उकाली यति जमीन तिमीहरूलाई निगाह गरिदिइयो । दक्षिणराजकुलको सीमासंग जोडिएको यो जमीन हो भन्ने कुरा बुझेर हामीले दिएको खाएर जीविका चलाएका (सरकारी कर्मचारी)हरू कसैले यस निगाहालाई अन्यथा नगर्नू ।)

यो शिलालेख खण्डित भएको हुनाले सबै कुरा खुल्दैन तापनि यो शिलापत्र रहेको ठाउँको नगीचै रहेको प्रदेशको चार किल्ला छुटचाउँदा यहाँ दक्षिणराजकुलको दक्षिणपश्चिमतिर भन्ने स्पष्ट उल्लेख भएको छ । यताबाट उक्त अभिलेखमा सीमांकन गरिएको प्रदेशको पूर्वोत्तर कुना दक्षिणराजकुलको सीमासँग जोडिएको थियो भन्ने कुरा सजिलैसँग बुझ्दछौं । चार किल्ला छुटचाइएको सो जमीन दक्षिणराजकुलको सीमासँग जोडिएको हुनाले बढी होशियार हुनू भन्ने भाव पनि यसमा परेको छ ।

लिच्छविकालमा जग्गा कुलोसम्बन्धी यस्ता सनद शिलालेख राख्दा सम्बद्ध ठाउँको नगीचै सबैले देख्ने ठाउँमा राखिन्थे । उदाहरणको लागि शिवदेव र अंशुवर्माको चाँगुको अभिलेखलाई देखाउन सकिन्छ । चाँगुको नगीचै पूर्वोत्तर कुनामा रहेको गुङदीमक गाउँका बासिन्दाहरूलाई संबोधन गरेर लेखिएको सो शिलापत्र चाँगुनारायणस्थानमा राखिएको छ[2] । देवताको दर्शन गर्न आउँदा सबैले सजिलैसँग देख्ने हुनाले यसो गरिएको हो भन्ने कुरा यताबाट खुल्न आउँछ । यसै गरी पाटन छिन्नमस्ताको ध्रुवदेव र जिष्णुगुप्तको अभिलेखमा थम्बू गाङशूल आदि गाउँको लागि कुलोको बन्दोबस्त गरिदिएको कुरो परेको छ[3] । त्यहाँ उल्लेख गरिएको थम्बु त्यो अभिलेख

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ८० संख्या ३४२–३४३ पृ. । राष्ट्रिय अभिलेखालयमा रहेको शिलालेखको प्रतिलिपिको आधारमा यहाँ केही अक्षर थपिएका छन् ।

२. सोही ५८ संख्या ,२३३–२३४ पृ.
". . .भट्टारकमहाराज श्रीशिवदेवः कुशली गुङदीमकग्रामनिवासिनः... समाज्ञापयति ...कोट्टसीमा च ग्रामस्य पश्चिमतो दक्षिणतश्च दोलाशिखराटवीपर्य्यन्तश्च"
यताबाट चाँगुको पूर्वोत्तर कुनामा गुङदीमक ग्राम थियो भन्ने बुझिन्छ ।

३. सोही, १०५ संख्या, ४०१–४०२ पृ.

रहेको ठाउँभन्दा ३ सय गज जति पर दक्षिण पश्चिम कुनामा पर्दछ ।

यसैले जैसीदेवलबाट लगन जाने बाटोको यो अभिलेख पनि सीमाविभाजन गरिएकै ठाउँबाट केही पर सबैले देखिने ठाउँमा राखिएको हुनुपर्दछ । जैसीदेवलको पश्चिमतिर नारायण-स्थानमा रहेको लक्ष्मीनरसिंह र प्रतापमल्लको वि. सं. १६६३ को अभिलेखमा टेंगुडिनामक टोलको उल्लेख आएको छ । त्यहाँ रहेका शाहकालका शिलालेखमा पनि त्यस ठाउँको नारायणलाई 'टेमगुडि नारायण' भनिएको छ । माथि चर्चा गरिएको लिच्छवि शिलालेखमा उल्लेख आएको टेग्वलनारायण टेंगुडिनारायण नै हो कि भन्ने देखिन आउँछ ।

यसरी माथि उद्धृत शिलालेखमा सीमाविभाजन गरिएको प्रदेश वर्तमान जैसीदेवलकै आसपासमा रहेको बुझिन्छ । यस कारण त्यसमा दिइएको हुलियाअनुसार जैसीदेवलनिरको त्यस प्रदेशको पूर्वोत्तर कुनासँग दक्षिणराजकुलको दक्षिण पश्चिम कुना जोडिएको रहेछ भन्ने कुरा खुल्न आउँछ । यो एक महत्त्वपूर्ण उपलब्धि हो । यसको आधारमा अरू पनि निकै कुरा पत्ता लाउन सजिलो भएको छ ।

दक्षिणराजकुलको उल्लेख अरू लिच्छवि अभिलेखमा पनि आएको छ । यस राजकुलको पहिलो उल्लेख चाँगुको शिवदेव र अंशुवर्माको अभिलेखमा देखिएको छ । त्यहाँ दक्षिणराजकुलमा बाली बुझाउनुपर्ने खेतको चर्चा परेको छ[1] । ज्ञानेश्वरको लिच्छवि अभिलेखमा पनि दक्षिण-राजकुलसँग सम्बद्ध केही कुरा परेका छन् । त्यस अभिलेखमा न्यायव्यवस्थाको सम्बन्धमा दक्षिण-राजकुलमा रहेको पूर्वाधिकरण नामको अड्डाको उल्लेख आएको छ तथा पाञ्चालिकहरूले अप-राधीहरूलाई समातेर राजकुलमा बुझाउने कुरा परेको छ[2] । पूर्वाधिकरण यो नाम दिशावाचक शब्दबाट बनेको देखिनाले पाटन नःबहिलको अंशुवर्माको अभिलेखमा[3] र अन्त पनि उल्लेख आउने पश्चिमाधिकरण पनि दक्षिणराजकुलमै थियो भन्ने बुझिन्छ । लिच्छविकालमा सरकारसंग सम्बन्ध भएको काम कुरो मिलाउन दुनियाँदारहरू राजाको ढोकामा जान्थे[4] । यस कारण पूर्वा-धिकरण पश्चिमाधिकरणको मतलब दक्षिणराजकुलको पूर्वद्वारमा रहेको अड्डा पश्चिमद्वारमा रहेको अड्डा भन्ने बुझिन्छ ।

सौभाग्यवश दक्षिणराजकुल कहाँसम्म फैलिएको थियो भन्ने कुरो बुझ्ने साधन प्राप्त भएको छ । हालै हनूमान्ढोका देगुतलेको देवलमुनि लिच्छविकालको एउटा शिलालेख पाइएको छ । सो शिलालेखका धेरैजसा कुरा सदाको लागि लुप्त भइसकेका छन् तापनि विचारपूर्वक यसको अध्ययन गर्‍यौं भने अझ पनि निकै महत्त्वपूर्ण कुरा प्रकाशमा आउँछन् ।

---

१. सोही, ५८ संख्या, २३३–२३४ पृ.

२. सोही, १५० संख्या, ५७३–५७४ पृ.

३. सोही, ८१ संख्या, ३४५–३४६ पृ.

४. सोही, ६८ संख्या, २७४–२७५ पृ. "सर्व्वकार्येषु चैकमेव वो द्वारं"

तीन हात एक भित्ता लम्बा एघार अंगुल चौडा शिलामा कुँदिएको सो अभिलेखको पढ्न सकिने मूल पाठ यस प्रकार छ–

"...विविधशकुन्तपशु ...ङकृतवृद्धरुहः...ककिरातवेषधर ... करः यः चिरन्तनं लिच्छविराजकारितं पुरातनैव्वृत्तिभटैरुपेक्षि(तं) . . . रुहः ... क्षेत्रम् भग्नक ... पुनः पुनर्व्वसुः ॥[1] "

(... नानाथरी चरा र पशु... बढेका रूखहरू ... किरातका वेष धारणा गर्ने ... अघिका लिच्छवि राजाहरूले बनाएको पुराना वृत्ति (जागीर) खुवाएर राखेका सिपाहीहरू बस्न छोडेको... रूखहरू ... खेत भत्केको ... फेरि पुनर्वसु नक्षत्र ।)

यस अभिलेखको लिपि अंशुवर्माका अरू शिलापत्रसंग दुरुस्त मिल्दछ । ध्यानपूर्वक विचार गरी हेर्दा यसमा कुँदिएका अक्षर अंशुवर्माका हाँडिगाउँका अभिलेखका अक्षरका बान्कोसंग मिल्दा जुल्दा देखिन आउँछन् । यस कारण अंशुवर्माको समयको शिलापत्र यो हो भन्ने कुराको निर्णय हुन्छ ।

राजा अंशुवर्माले आफूभन्दा अघिका लिच्छवि राजाहरूले बनाएर गएको पुरानो दरवारको पुर्नानिर्माण गरेर त्यसैको उपलक्ष्यमा यो शिलापत्र राख्न लगाएका थिए। यो कुरा यस अभिलेखको वर्णनशैलीबाट हामी बुझ्न सक्तछौं ।

संस्कृत साहित्यका प्रसिद्ध कवि कालिदासको रघुवंश महाकाव्यको सोह्रौं सर्गमा मानिसहरू बस्न छोडेको हुनाले थोरै समयमै उजाडिएको पुरानो राजधानीको वर्णन गरिएको छ । त्यहाँ जताततै झारपात उम्रेको, रूखका हाँगाबिंगा बाँदरहरूले भाँचभुँच पारेको, स्याल आदि पशुहरू निस्फिक्रीसँग हिंड्न थालेको, पहिले बगैंचामा काइदासँग पालिएका मुजुरहरूले दुःख पाएको आदि वर्णन त्यहाँ परेको छ[2] । हनूमान्ढोकाको यस अभिलेखमा पनि विभिन्न चरा र पशुहरूको उल्लेख आएको छ तथा रूखहरू झ्यामिएर बढेको र भत्के बिग्रेको वर्णन परेको छ । यस कारण अभिलेखको यो वर्णन पनि त्यस्तै कुनै भग्नावशेषको वर्णन हो भन्ने देखिन्छ ।

अंशुवर्मा (वि. सं. ६६२–६७८ आ.)सामानकालिक उत्तर भारतका राजा हर्षवर्द्धनको समयमा भारतमा आएका चिनियाँ यात्री ह्वाङ्चवाङ्ले भारतका त्यस वेलाका राजदरवारको वर्णन गरेका छन् । यताबाट हाम्रो यतातिरको लिच्छविराजदरवारको सम्बन्धमा केही कुरा बुझ्न मद्दत पाइन्छ । उनको त्यस यात्रावृत्तान्तमा यस्तो लेखिएको छ –

"देशका मुख्य सैनिकहरू सबभन्दा बहादुर मानिसहरूबाट छानिएका हुन्छन् । छोराले

१. गौतमवज्र वज्राचार्य, "रिसेन्ट्ली डिस्कभर्ड इन्स्क्रिप्सन्ज् अफ् लिच्छवि नेपाल" कैलास (काठमाडौं, ई. सं. १९७३ (वि.सं. २०३०)) १ वर्ष, २ अंक, १२६ पृ.

२. रघुवंश १६ सर्ग, ६–२१ श्लोक

बाबुकै पेशाको अनुसरण गर्ने हुनाले तिनीहरू युद्धकलाको ज्ञान छिटै हासिल गर्दछन् । देशमा शान्ति रहेको वेला तिनीहरू राजदरवारवरिपरि सैनिक दलमा एकट्ठा भएर बस्छन् । तर हमला गर्न जाँदा तिनीहरू अग्रसर रक्षादलको रूपमा अगाडि अगाडि हिंड्छन् ।

सेनाले सीमानाको रक्षा गर्छन् र विरोधीहरूलाई दण्ड दिन बाहिर जान्छन् । सेनाले राती राजदरवारको पनि रक्षा गर्दछ । चाहिएको बेलामा दुनियाँदारहरूलाई सैन्यमा जबरदस्ती भर्ना गरिन्छन् र तिनीहरूलाई केही पैसा दिने कबोल गरिएको हुन्छ । बडाहाकिम, मन्त्री, फौजदारी मुद्दा हेर्ने मुख्य कर्मचारी र अरू अधिकारीहरूलाई उनीहरूको जीवनवृत्तिको लागि जग्गा छुट्याएर दिएको हुन्छ ।"

(साम्यूल बीलको "बुद्धिष्ट रिकर्डस् अफ् द वेस्टर्न वर्ल्ड (पश्चिमी संसारको बौद्धधर्मसंग सम्बन्ध राख्ने वृत्तान्त) का ८२, ८७–८८ पृष्ठबाट अनूदित)

यहाँ देशका मुख्य सैनिकहरू राजदरवारवरिपरि बस्छन्, लडाइंभिडाइ पर्दा मात्र बाहिर लड्न जान्छन्, चाहिएको बेलामा भर्ना गरिने एक थरी अस्थायी सेना पनि हुन्छन् तथा स्थायी अधिकारीहरूलाई जीवनवृत्तिको लागि जागीरको रूपमा जग्गा दिइएको हुन्छ भन्ने भावको कुरो परेको छ ।

प्राचीनकालमा यस किसिमको जागीरलाई वृत्ति भन्ने चलन थियो । हनूमान्ढोकाको अभिलेखमा पनि 'वृत्तिभटहरू बस्न छोडेको' भन्ने उल्लेख आएको छ । वृत्ति खाने व्यक्ति वार्त कहिन्थे । लिच्छविकालमा वार्त भन्नाले ठूलो अधिकारीलाई बुझाउँथ्यो[1] । यताबाट वृत्तिभट शब्दको अर्थ खुल्दछ । चाहिएको बेलामा भर्ना गरिने अस्थायी सैनिकभन्दा पृथक् स्थायी मुख्य सैनिक भन्ने अर्थ बुझाउन वृत्तिभट शब्दको यहाँ प्रयोग भएको छ । य्वाङ्च्वाङ्को वर्णनमा देशका मुख्यसैनिक राजदरवारको वरिपरि बस्छन् भनेर स्पष्ट लेखिएको हुनाले अघिका लिच्छवि राजाले बनाएको वृत्तिभटहरू बस्न छोडेको भनी यस खण्डित अभिलेखमा लेखिएको कुरो पुरानो राजदरवारकै वर्णन हो भन्ने कुरा प्रामाणिक रूपमा सिद्ध हुन्छ ।

अभिलेखको अन्त्यमा यहाँ पुनर्वसु नक्षत्रको उल्लेख आएको छ । मुहूर्तचिन्तामणि नामक प्रसिद्ध ज्योतिषी ग्रन्थअनुसार पुनर्वसु घर प्रतिष्ठा गर्नाको लागि असल नक्षत्र मानिएको छ । माथि दिइएका यी कुराको आधारमा राजा अंशुवर्माले नै यस राजकीय दरवारको पुनर्निर्माण र परिवर्द्धन गरी यो शिलापत्र राख्न लाएका हुन् भन्ने निष्कर्षमा हामी पुग्छौं ।

विक्रमको आठौं शताब्दीको उठानतिर लिच्छवि राजा नरेन्द्रदेवको पालामा वाङ्युङ्चे नामक चिनियाँ राजदूत भारत जान नेपालको बाटो पटक पटक गरी आएका थिए । उनले नेपालको राजदरवारको वर्णन लेखेर गएका छन् । यसै गरी यतातिर आएका अरू चिनियाँ

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ८७ पृ.

यात्रुहरूले पनि भ्रमणवृत्तान्तको रूपमा नेपालको तात्कालिक राजदरवारको वर्णन गरेका छन् । चिनियाँहरूको वंशावलीमा ती वृत्तान्त संगृहीत छन् । राजदरवारको आकारप्रकारको सम्बन्धमा ती वर्णनबाट हामी निकै महत्त्वपूर्ण कुरा बुझ्न सक्दछौं । चिनियाँहरूको सो वर्णनअनुसार उनीहरूले देखेको राजदरवार भव्य र विशाल थियो । यस विषयमा चिनियाँ वंशावलीमा यस्तो लेखिएको छ–

"नेपालको राजधानीमा एउटा भवन छ। अनेक तलामा विभक्त २०० च्यु अग्लो सो भवन ८० प्यूको घेरामा बनेको छ । यसको माथिल्लो भागमा दश हजार मानिस अटाउँछन् । तीन खण्डमा यो (दरवार) विभक्त छ तथा प्रत्येक खण्डमा साततले (घर) छन् । ढुङ्गा र बहुमूल्य रत्नहरूले ती सिंगारिएका छन् । ...

(के पि. जायस्वालको 'क्रोनोलोजी याँण्ड हिस्ट्री अफ् नेपाल (नेपालको तिथिमिथि र इतिहास) नामक ग्रन्थको ८७ पृष्ठबाट अनूदित)

"उनी (राजा नरेन्द्रदेव) सिंहासनमा बस्दछन् । सभा भवनको बीचमा फूल तथा वासना आउने पदार्थ छरिएको हुन्छ । भारादार, अधिकारीहरू र सबै धर्माधिकारीहरू राजाको दायाँपट्टि बस्छन्, बायाँपट्टि चाहिं राजाको नगीचै भूईंमा हतियार भिरेका सयौं सैनिकहरू पंक्तिबद्ध भएर बस्छन् ।

(सोही ग्रन्थको ८३ पृ. बाट अनूदित)

एक तलामा मात्रै दश हजार मान्छे अटाउने तीन खण्ड भएको लिच्छविकालको यो राजदरवार निकै विशाल थियो भन्ने कुरा हामी थाहा पाउँछौं । प्राचीन वास्तुशास्त्र तथा संस्कृत-साहित्यबाट पनि तात्कालिक राजदरवारको निर्माण विस्तृत भू-भागमा गरिएका हुन्थे भन्ने कुरा बुझ्न सकिन्छ । वास्तुशास्त्रसम्बन्धी ग्रन्थअनुसार राजधानीको तीन भागमा एक भाग अथवा चार भागको एक भागमा राजकुलको निर्माण हुन्थ्यो[1] । सो राजकुल विभिन्न कक्षा अर्थात् खण्डमा विभक्त हुन्थे[2] । राजपुत्रको लागि भिन्नै तथा बडामहारानीको लागि भिन्नै घर बनेका हुन्थे । त्यसै गरी देवकुल (मन्दिर), सभागृह, स्नानगृह, अन्तपुर, अरिष्टगृह (सुत्केरी हुँदा बस्ने घर) आदि छुट्टाछुट्टै बनेका हुन्थे[3] । राजकुलको बीचमा राजाको प्रमुख भवन बनेको हुन्थ्यो[4] ।

१. मयमत २९ अध्याय १ श्लोक; "अथ वक्ष्ये राजगृहं संक्षेपाद् वाह्यनगरशिविरयुतम् । त्रिचतुर्भागे नगरे प्राच्यां वाप्युक्तशालायाम् ॥"

२. डि. एन् शुक्ल डि. लिट्, "हिन्दु साइन्स अफ् आर्किटेक्चर्" (लखनौ वास्तुवाङमयप्रकाशन-माला वि. सं. २०१७) ३६३ पृ. "A specialnotice of the Royal palace is its distribution in several courts. These courts ranged from three to seven, Harsa's palace had three. Kadambari's Tarapida had seven courts (kakṣyās) in his palace, while Dsaratha five and Rama only three."

३. सोही, ३५८–३६६ पृ.

४. सोही, परिशिष्ट १७८ पृ. "मध्यभागे राजवेश्म नवसौधतलावधि"

संस्कृत साहित्यका ग्रन्थहरूबाट पनि प्राचीन राजदरवारको विषयमा हामी केही कुरा बुझ्न सक्छौं। विशेष गरेर अंशुवर्माका सामानकालिक उत्तर भारतका राजा हर्षका दरवारिया कवि बाणले लेखेको हर्षचरितमा गरिएको राजदरवारको वर्णन चाखलाग्दो छ। त्यस वर्णनअनुसार हर्षको राजकुल जम्मा तीन कक्षामा विभक्त थियो। राजकुलको मध्य-भागनिर धवलगृह नामक प्रमुख राजभवन थियो। गृहोद्यान (राजदरवारभित्रको बगैंचा), गृहदीर्घिका (राजदरवारभित्रको पोखरी), व्यायामभूमि, स्नानगृह, देवगृह, तोयकर्मान्त (पानी गोस्वारा), महानस (भान्छा-घर), आहारमण्डप आदि त्यस राजकुलभित्र थिए[1]।

यिनको आधारमा दक्षिणराजकुलको आकारप्रकारको सम्बन्धमा पनि हामी केही विचार गर्न सक्छौं। जैसीदेवलबाट लगन जाने बाटोको माथि उद्धृत अभिलेखबाट दक्षिणराज-कुलको सीमा त्यतातिरसम्म पुगेको थियो भन्ने बुझिनाले लिच्छवि दरवारको विशालतालाई ध्यानमा राखेर विचार गरचौं भने सो राजकुल वर्तमान हनूमान्ढोकाको सेरोफेरोसम्म पुग्नु असंभव देखिंदैन। हनूमान्ढोकाको अभिलेखमा राजदरवारकै पुर्ननिर्माणको कुरो परेको देखिनाले जैसीदेवलको हाराहारीसम्म पुगेको दक्षिणराजकुल नै अंशुवर्माले पुर्ननिर्माण गरेको राजकुल थियो भन्ने कुरा स्वतःसिद्ध हुन आउँछ[2]।

यसरी दक्षिणराजकुल जैसीदेवलदेखि हनूमान्ढोकासम्म फैलिएको थियो भन्ने बुझिनाले हनूमान्ढोका राजदरवारको प्राचीनताको सम्बन्धमा यताबाट महत्त्वपूर्ण कुरो प्रकाशमा आएको छ। अहिलेभन्दा १५० वर्ष जति अघिसम्म हनूमान्ढोकाको इलाका अहिलेभन्दा धेरै परसम्म फैलिएको थियो। त्यस वेला यस राजदरवारमा ३५ चोक र पटाङ्गिनी थिए[3]। तर आजभोलि १२ वटा जति चोकमात्र बाँकी रहेका छन्। भूगोलपार्कपछाडि आजभोलि 'नेपाल बैंक' रहेको

---

१. डा. वासुदेवशरण अग्रवाल, "हर्षचरित : एक सांस्कृतिक अध्ययन" (पटना, विहारराष्ट्र भाषा परिषद् वि. सं. २०२१) २०७–२१२ पृ.

२. राजा मानदेवले बनाएको लिच्छविकालको प्रसिद्ध राजभवन मानगृह र राजा अंशुवर्माले बनाएको कैलासकूटभवनको सम्बन्धमा हालै पत्ता लागेको महत्त्वपूर्ण कुरोको सूचना यहाँनिर पाठकहरूलाई दिनु आवश्यक संझेको छु। सबैजसा इतिहासकारहरूले अहिलेसम्म संझेर आए झैं मानगृह र कैलासकूलटभवन राजकुलको नाम नभएर राजकुलमा बनेका अनेकन भवनहरूमध्ये राजा बस्ने मुख्य भवनको नाउँ थियो। दक्षिणराजकुलको प्रमुख राजभवनको रूपमा कैलासकूटभवन बनेको थियो। यसै गरी मानगृह पनि भिन्नै अर्को राजकुलमा बनेको प्रमुख राजभवनको नाउँ थियो। यस विषयमा लिच्छविकालमा नेपाल आएका विदेशी यात्रुहरूको वर्णन, तात्कालिक अभिलेख तथा पछिसम्म पनि परम्परागत रूपमा रहेका सांस्कृतिक गतिविधि आदिको आधारमा "मानगृह र कैलासकूटभवन" नामक लेखमा लेखेको छु। उचित समयमा पाठकहरूसमक्ष सो लेख सप्रमाण प्रस्तुत गर्ने नै छु।

३. परिशिष्ट, "मन्दिर र चोकहरूको नापोसम्बन्धी पुराना कागतपत्र" (दोस्रो)

ठाउँसम्म पनि हनूमान्ढोका दरवारको इलाकाभित्र थियो भन्ने कुरो प्रत्यक्ष देख्नेहरू काठमाडौंमा अझ प्रशस्त छन् । वि. सं. १९९० को महाभूकम्पपछि जुद्धसडक बन्यो र त्यस बेलादेखि मात्र ती ठाउँ हनूमान्ढोका दरवारबाट छुट्टिए ।

हनूमान्ढोकासँग सम्बन्ध राख्ने अघिदेखि चलेर आएको सांस्कृतिक परम्पराको अध्ययनबाट पनि यस राजदरवारको प्राचीनताको बारे हामी केही बुझ्न सक्दछौं ।

चाँगुनारायण लिच्छवि राजा मानदेवको समयभन्दा पनि पुरानो देवता हुन् भन्ने कुरा उनको चाँगुको प्रसिद्ध स्तम्भलेखबाट बुझिन्छ । भक्तपुरबाट चाँगुको डाँडा धेरै नगीचमा पर्दछ । मल्लकालमा यो डाँडो प्रायः काठमाडौंकै अधीनमा रह्यो तापनि कहिले कहीं भक्तपुर र पाटनको अधीनमा पनि रहेथ्यो ।

वर्षको दुइपल्ट श्रावण शुक्ल द्वादशी र पौष शुक्ल पूर्णिमाको दिन चाँगुनारायण हनूमान्ढोका राजदरवार भित्रिने जात्रा धेरै अघिदेखि चलेर आएको छ[1] । परम्परादेखि चलेर आएको चाँगुनारायण राजदरवार भित्र्याउने यो जात्रा पाटन दरवारमा लगिदैन न त नगीचै रहेको भक्तपुर दरवारसंग यस जात्राको केही सम्बन्ध छ ।

पाटनका राजा श्रीनिवासले चाँगुनारायणको जात्रा आफ्नो दरवारमा पनि ल्याउने चलन चलाएका थिए । परन्तु परम्पराको अभावले गर्दा सो जात्रा पछि चलेन[2] ।

प्राचीनकालदेखि नै राजदरवारको रूपमा रहेर आएको हुनाले नै हनूमान्ढोकासँग सम्बन्ध राख्ने चाँगुनारायणको जात्रा प्राचीन संस्कृतिको परम्पराको रूपमा चलेर आएको

१. यस ग्रन्थको संस्कृतिसम्बन्धी अध्यायमा "चाँगुनारायणको जात्रा" शीर्षकमा यसबारे विस्तारपूर्वक लेखिएको छ ।

२. पाटनमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफुमा यस विषयमा यस्तो लेखिएको छ—
"श्री २ जयश्री निवासमल्लदेव ठाकुर ज्येष्ट जुस्यं स्वनगर उलाङ चोने स एव श्री २ ठाकुरस पुत्री मणिमती थकुनिस षुलाप्व स्वना दिन ॥ च्याला लाख चिंने प्यन्हु ह्लेव, वषनिम्ह श्रीहरिनाथ उपाध्या वषनवाहार सिद्धिराज राजजोसि प्रमाण स्वह्मं पंचामृत ओहो जोना दयकं श्री ३ चंगु गरुडनारायणपूजा याङन पिंथ्वगावरस विष्णुमण्डल याङ परिवार पूजा धुनकाव लिहावया वेलस मचा बुलो धकं कंङा हल. लिहा वयाव संति नित्यया कुमार प्वं पूजा धुनाकाव कुमारप्वं कुमार यातं दान विया. थ्वनंलि ग्वय सिन्धु छायाव नांदीमुख याङा. मोचा वुयाव देव विज्याचके मलाङाव षष्ठीयाग कुन्हु उथ्यं स्नान जोलन दयकं वाद्य दयकं स एव श्री ३ चंगुदेव काल वङाम्रो श्री ३ लक्ष्मीनारायणमूर्त्ति भोतलं ध्वाखान दुहा विज्याचका सिंध्रयात याङ मूलचोक ह्लवने निर्मनादि लं स्वस्ये वसाल लायाव खण्डकुठिस विज्याचका. . .थ्वन ह्ला ग्व वेलसं येलं विज्याचका ,मदु. थ्वदं निस्यं तुनि विज्याचकु जुरो.

भन्ने कुरा यताबाट स्पष्ट हुन्छ। श्री ५ पृथ्वीवीरविक्रम शाहको पालादेखि शाह राजाहरू नारायण-हिटी राजदरवारमा राज हुने हुन थालेको हो। परन्तु अघिदेखि चलेर आएका धार्मिक विधिविधान तथा राजदरवारको प्रांगणमा हुने जात्रा हनूमान्ढोकामै हुन्छ। यसै गरी मल्लकाल र त्योभन्दा अघिको इतिहासको लामो अवधिभित्र ठाउँ ठाउँमा अनेक राजदरवार बने पनि चाँगुनारायण राजदरवार भित्र्याउने जात्राचाहिं हनूमान्ढोकामै गर्ने चलन परम्परादेखि चलेर आएको देखि-न्छ। यो प्राचीन सांस्कृतिक परम्पराबाट पनि हनूमान्ढोका दरवार एक प्राचीन राजदरवार हो भन्ने कुराको पुष्टि हुन्छ।

हनूमान्ढोकाको प्रांगणमा रहेको पुलिस थानाको घर बनाउन जग खन्दा दुइवटा महत्त्वपूर्ण प्रस्तरमूर्ति फेला परेका छन्। तिनमध्ये एउटामा शिवपार्वतीको मूर्ति कुँदिएको छ। दोस्रोमा चाहिं शंखको दायाँ बायाँ दुइवटा किन्नरको आकृति कुँदिएका छन्। शैलीको आधारमा ती दुवै प्रस्तर मूर्ति लिच्छविकालका हुन् भन्ने देखिएको छ[1]। दक्षिणराजकुलको जीर्णोद्धारसम्बन्धी कुरा लेखिएको देगुतलेजुको मुनि रहेको लिच्छवि शिलालेखबाट ५० गज जति पर ती मूर्ति पाइएका हुन्। यस कारण दक्षिणराजकुलकै भग्नावशेषबाट ती मूर्ति निस्केको अनुमान हुन्छ। अहिलेसम्म हनूमान्ढोकाभित्र र प्रांगणमा गरी जम्मा तीनवटा लिच्छवि अभिलेख प्राप्त भएका छन्। यतातिर विधिपूर्वक उत्खनन गर्न सके अरू पनि निकै महत्त्वपूर्ण सामग्री उपलब्ध हुने संभावना छ।

मध्यकालमा नेपाल उपत्यकाका शासकहरूको राजधानी भक्तपुरमा थियो। उपत्यकामा तीन मल्ल राज्य खडा हुनुभन्दा अघिसम्म पनि यक्षमल्ल आदि शासकहरू नेपालमण्डलेश्वरको हैसियतले भक्तपुरमा बसी शासन गर्दथे। काठमाडौंमा पुस्तौनी अधिकार पाएका शक्तिशाली महापात्रहरूको शासन चलेको थियो। पाटनमा सप्तकुटुम्बज (सात परिवारका मध्ये) तीन मुख्य महापात्रहरू मिली शासन गर्दथे। यी महापात्रहरू यक्षमल्लहरूको हुकूम मानी शासन गर्दथे तापनि पुस्तौनी अधिकार पाएका हुँदा यिनीहरू पनि शक्तिशाली थिए[2]। यक्षमल्लका छोरा रत्नमल्लले वि. सं. १५४१ मा कान्तिपुरका महापात्रहरूलाई सिद्धचाई काठमाडौंमा आफ्नो स्वतन्त्र राज्य खडा गरे[3]। मल्लकालमा पछि टिपिएको एउटा हस्तलिखित ग्रन्थको अन्तिम

१. म्यारी शेफर्ड श्लसर र गौतमवज्र वज्राचार्य, "सम् नेपालीज् स्टोन् स्कल्प्चर्स : ए रिप्रेजल् विदिन दियर् कल्चरल् यॉन्ड हिस्टोरिकल् कन्टेक्स्ट्" आर्टिबस् एशिया (स्विजर्लाण्ड आर्टिबस् एशिया पब्लिशर्स्, ई.सं. १९७४ (वि.सं. २०३१), ३५ वर्ष १–२ अंक १३७–१३८ पृ.)

२. धनवज्र वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय' (काठमाडौं, जगदम्बा प्रकाशन. वि.सं. २०१९) पृ.

३. डि. आर्. रेग्मी, "मेडियाभल् नेपाल" (कलकत्ता, फर्मा के. एल्. मुखोपाध्याय ई.सं. १९६६ (वि.सं. २०२३)) ३ भाग, ३ परिशिष्ट ९९ पृ.
"सं. ६०४ वैशाष शुक्ल ॥ एकादसि ॥ श्रीरत्नमल्लदेवन एदेश तेल"

पत्रमा रत्नमल्लले काठमाडौंका शासकहरूलाई परास्त गरी हिटीचोकमा राजदरबार कायम गरे भनी लेखिएकोछ[1] । हिटीचोक हनूमान्ढोकाकै एक चोक थियो । त्यस चोकको उल्लेख भाषावंशावली र मल्लकालमा टिपिएका ठ्यासफुमा ठाउँ ठाउँमा आएको छ[2] । काठमाडौंका प्रसिद्ध मल्ल राजा प्रतापमल्लको मृत्यु यही चोकमा भएको थियो[3] । यसरी हिटीचोक हनूमान्ढोका दरबारको एक अवयव थियो भन्ने देखिएकोले रत्नमल्लले काठमाडौं जित्नुभन्दा अगाडि हनूमान्ढोका त्यहाँका महापात्रहरूको हातमा थियो भन्ने बुझिन्छ । वि.सं. १९१० को कागतमा पनि हिटीचोकको उल्लेख देखिएको छ[4] तापनि वर्तमान हनूमान्ढोकामा यसको अस्तित्त्व बचेको छैन ।

यस दरबारको हनूमान्ढोका भन्ने नाउँ राजा प्रतापमल्लले वि. सं. १७२९ जेठमा दरबारको ढोकामा हनूमान् स्थापना गरेदेखि मात्र रहन गएको हो[5] । मल्लकालमा लेखिएका ऐतिहासिक सामग्रीहरूमा यस दरबारलाई प्रायः राजकुर, लाजकुट, रायकु भनिएको पाइन्छ । यी शब्द राजदरबारलाई बुझाउने संस्कृत राजकुल शब्दका अपभ्रंश हुन् । मल्लकालमा यस दरबारलाई भन्ने वास्तविक नाम अर्कै थियो । हालैको अन्वेषणकार्यबाट यो कुरो पत्ता लागेको छ । चाँगुनारायण हनूमान्ढोका भित्र्याउँदा देउता राखिने धातुनिर्मित सिंहासनमा अंकित अभिलेखमा त्यसको उल्लेख आएको छ । लक्ष्मी र सरस्वतीसहित चाँगुनारायण 'गुनपो पो' मा भित्र्याउन राजा प्रतापमल्लले वि. सं. १७२८ श्रावण शुक्ल द्वादशीको दिन यो सिंहासन बनाउन लगाएका हुन् भनी त्यस अभिलेखमा लेखिएको छ[6] । प्राचीन नेवारी भाषामा राजदरबारलाई 'पो' भनिन्थ्यो । यो कुरो नेवारी टीका भएका अमरकोशका पुराना प्रतिहरूबाट ज्ञात हुन्छ । यस कारण 'गुनपो पो' को अर्थ गुनपो दरबार भन्ने हुन्छ । चाँगुनारायण दरबार भित्र्याउने जात्राको प्रसंगमा हनूमान्-

---

१. अमोघवज्र वज्राचार्य, "कालक्रमः" संस्कृतसन्देश (काठमाडौं वि.सं. २०१०) १ वर्ष १०–१२ अंक ८१ पृ.

"श्रीरत्नमल्ल राजानं ञादेश त्यल ओञो ह्मं ८ थकुर जुजु स्याङाओ ...हितिचुकस रायकुर हङाव च्वं ॥"

२. धनवज्र वज्राचार्य, र अरू "इतिहास–संशोधनको प्रमाणप्रमेय" (काठमाडौं जगदम्बा–प्रकाशन, वि.सं. २०१९) २७९ पृ.

३. पं. देवीप्रसाद लंसाल, "भाषावंशावली" (काठमाडौं, नेपाल राष्ट्रिय पुस्तकालय वि.सं. २०२३) २ भाग ९३ पृ.

४. "वडा कपतान सनकसिं षत्रीले नञा घर वनाउँदा यसै घरभित्र परयाको हिटिचोक पट्टिको रैकर पाताल् स्मेत् हामीबाट विर्ता गरी वक्स्याको छ ,,. सम्वत् १९१०"
(खेस्रा रूपको यो कागत वसन्तपुरदरवारमा पाइएको हो । हाल यो कागत नेपाल र एशियाली अध्ययन संस्थानको संग्रहमा छ ।)

५. परिशिष्ट, ३३ संख्याको अभिलेख

६. परिशिष्ट, ३१ संख्याको अभिलेख

**ढोका दरवारको यो प्राचीन नाम तात्कालिक ठ्यासफुहरूमा पनि देखिएका छन् । श्रावण शुक्ल द्वादशीको दिन गुनपो राजकुलमा चाँगुनारायण भिट्याउने कुरो त्यहाँ दिइएका छन्[1] । यी प्रमाणहरूबाट हनूमान्ढोका भन्ने नाम रहनुभन्दा अघि यस दरवारको नाम गुनपो राजकुल थियो भन्ने कुरो सिद्ध हुन्छ । यसरी यो राजदरवार प्राचीन कालमा दक्षिण राजकुलको रूपमा, मध्यकालमा गुनपो राजकुलको रूपमा, त्यसपछि हनूमान्ढोका दरवारको रूपमा देखापरेको छ । दक्षिण राजकुल र हनूमान्ढोका भन्ने नाम रहनामा कारण स्पष्ट देखिन्छन् । परन्तु गुनपो भन्ने नामकरण हुनामा के हेतु थियो भन्ने कुरो बुझ्न सकिएको छैन ।**

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट ५ पृ., "सं. ७९९ श्रावण शुक्ल ।। द्वादशी... थ्वकुन्हु श्रीश्रीश्रीगरुडनारायणस गुणपो राजकुलस दुकाया जुरो ।।" (ठ्यासफु)

वज्राचार्य र अरू "इतिहास–संशोधनको प्रमाणप्रमेय" २७६ पृ. "सं. ८०१ ... श्रावणशुक्ल द्वादशी कुन्हु गुणपो श्री ३ गरुडनारायण विज्यातके मालगुलि श्रीश्रीजयपार्थिवेन्द्रया काय दक्षिम्रो च्याराव दुम्हनं दुकायका जुरो ।" (ठ्यासफु)

गौतमवज्र वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा (वि.सं. २०२३ माघ) ३ वर्ष ४ अंक ३४ पृ., "सं. ८३२ श्रावण शुक्ल ।। एकादशी प्र. द्वादशी तुत, थ्व कुन्हु श्री ३ चंगुनानजु गुंपो दुकायाम्रो पूजा याङा थास खिचा छह्म दुव्वाङ वयाम्रो देव थिव" (ठ्यासफु)

# निर्माणको सिलसिला

हनूमान्ढोकाको वर्तमान रूप कुनै एक राजाले बनाएको नभई विभिन्न राजाहरूले समय समयमा बनाएर गएका अनेकन कलाकृतिहरूको संमिश्रणबाट बनेको छ। हनूमान्ढोका दरवार बनाउने मुख्य श्रेय राजा महेन्द्रमल्ल, प्रतापमल्ल र श्री ५ पृथ्वीनारायण शाहलाई छ तापनि राजा रत्नमल्लदेखि श्री ५ पृथ्वीवीरविक्रम शाहको समयसम्मका धेरैजसा मल्ल र शाह राजाहरूका कलाकृतिहरू यहाँ पाइएका छन्। राजनैतिक स्थिरता र आर्थिक संपन्नता भएको समयमा कलाकृतिहरूको निर्माणतिर विशेष ध्यान जाने हुनाले ऐतिहासिक घटनाक्रमसंग निर्माणको सिलसिला जोडिएर आएको हुन्छ। हनूमान्ढोका दरवारको निर्माणक्रममा पनि त्यस दरवारमा बसी शासन गर्ने मल्ल र शाह राजाहरूको राजनैतिक र आर्थिक परिस्थिति प्रतिविम्बित भएको पाइन्छ।

रत्नमल्लले काठमाडौंका वैश्य ठकुरीहरूलाई खतम गरी हिटीचोकमा आफ्नो राजकीय वासस्थान बनाएका थिए भन्ने कुराको चर्चा माथि गरिसकेका छौं। त्यस बेलादेखि काठमाडौंमा उनका वंशजहरूको शासन चल्यो। उनी विजिगीषु शासक थिए। उनले नुवाकोट पनि आफ्नो राज्यमा मिलाएथे।

आफ्ना इष्टदेवता तलेजु भवानीलाई पूजा नगरी मल्ल राजाहरूको दिनचर्या शुरू हुँदैनथ्यो। तलेजुको मूल मन्दिर भने भक्तपुर दरवारमा थियो। यस कारण रत्नमल्ल भक्तपुरबाट छुट्टिई काठमाडौंमा बस्न आएदेखि उनलाई आफ्नो दरवारमा तलेजुको मन्दिर बनाउनु आवश्यक भयो। यसैले उनले आफ्नो इष्टदेवताको एउटा सानो मन्दिर बनाई त्यस आवश्यकताको पूर्ति गरे[1]। डेनियल राइटको वंशावलीअनुसार तानादेवलको नगीचै उनले सो देवल बनाएका

---

१. हनूमान्ढोकाले चर्चेको भूभागमा सबभन्दा पुरानो भवनको रूपमा मरुसत्तल देखिएको छ। वि.सं. १२०० मा सारिएको हस्तलिखित ग्रन्थमा यसको चर्चा पाइएको छ (इ.सं. प्र.प्र. ११० पृ.)। यस कारण हनूमान्ढोकाको निर्माणको सिलसिलामा सर्वप्रथम मरुसत्तलको नामोल्लेख गर्नु आवश्यक छ। यसै गरी तलेजुको मन्दिरसंगै रहेको तानादेवल पनि धेरै अघि स्थापना भएको मन्दिरको रूपमा देखिएको छ। सो देवल रत्नमल्लले काठमाडौं जित्नुभन्दा अघिका वैश्य ठकुरीहरूको इष्टदेवताको मन्दिर थियो। यसरी काठमाडौंमा मल्ल राजाहरूको शासन प्रारम्भ हुनुभन्दा अघि स्थापना भएका दुइ भवन यस भेकमा अद्यापि मौजुद छन्। तर त्यस ताकाको ऐतिहासिक सामग्री दुर्लभ हुनाले रत्नमल्लको समयभन्दा अघिको हनूमान्ढोकाको निर्माणक्रमसँग हामी नितान्त अपरिचित छौं।

थिए[1]। हनूमान्ढोकाबाट मखन जाने बाटोको दोबाटोनिर पूर्वतिर तानादेवल अद्यापि विद्यमान छ । वंशावलीले दिएको हुलियाबमोजिम आजभोलिको ठूलो मन्दिर रहेकै ठाउँमा रत्नमल्लले आफ्नो इष्टदेवताको सानो मन्दिर बनाएको देखिन्छ ।

नयाँ राज्य जित्ने र त्यसको बन्दोवस्त गर्ने काममा रत्नमल्ल व्यस्त थिए । यस कारण उनको विशेष उल्लेखनीय अरू कुनै कीर्ति पाइँदैन ।

रत्नमल्लपछि सूर्यमल्ल र सूर्यमल्लपछि अमरमल्ल काठमाडौंको राजगद्दीमा बसे । उनीहरूलाई संझाउने कुनै पनि कलात्मक वस्तु हनूमान्ढोका दरवारमा देखापरेको छैन । कला-कृतिको निर्माणमा यी मल्ल राजाहरूको विशेष दृष्टि नगएको देखिन्छ। हनूमान्ढोकाको निर्माणको सिलसिलामा रत्नमल्लपछि महेन्द्रमल्लको नाम सबभन्दा पहिले आउँछ। उनी राजा अमरमल्लका छोरा थिए। उनले मल्ल राजाहरूमा सबभन्दा पहिले चाँदीका टक छापी भोटसँग आफ्नो देशको व्यापार बढाएका थिए। यताबाट उनलाई निकै आर्थिक लाभ भएको थियो। यसैले उनी आफ्नो दरवारमा र त्यसको आसपासमा अनेकन सुन्दर कलाकृति निर्माण गर्न समर्थ भए। महेन्द्रेश्वर, चतुर्मूर्ति विष्णु, तलेजु तथा कोटिलिङ्गेश्वरका देवल तिनै राजाका कीर्ति हुन् ।

मल्लकालमा टिपिएको एउटा ठ्यासफुमा वि. सं. १६१८ फागुनमा बडो धूमधामसँग महेन्द्रेश्वर महादेवको स्थापना गरेको कुरो लेखिएको छ[2] । हनूमान्ढोका दरवारको प्राङ्गणमा पश्चिमोत्तर कुनामा रहेको महादेव यिनै महेन्द्रेश्वर महादेव हुन् ।

त्यसपछि वि. सं. १६१९ माघमा राजा महेन्द्रमल्लले हनूमान्ढोका दरवारको प्राङ्गणमा चर्तुर्मूर्ति विष्णुको प्रस्तर प्रतिमा स्थापना गरी मन्दिर बनाइदिए। आजभोलि जगन्नाथको देवल भन्ने नामले प्रसिद्ध उक्त मन्दिरको मध्यभागमा रहेको चतुर्मूर्ति विष्णुको पादपीठमा राजा महेन्द्र-मल्लको अभिलेख पाइएको छ । हनूमान्ढोकामा अहिलेसम्म प्राप्त भएका मल्ल राजाहरूका सबै शिलालेखमध्ये पुरानो शिलालेखको रूपमा सो देखापरेको छ ।

चतुर्मूर्ति विष्णु स्थापना गरेको एक वर्षपछि वि. सं. १६२० को माघ महीनामा उनले तलेजुको भव्य मन्दिर बनाउन लगाए । उपत्यकामा पाइने साधारण देवलभन्दा तलेजुको सो मन्दिर आकारप्रकारमा निकै ठूलो हुनाले तवदेवर (ठूलो देवल) भन्ने नामले प्रसिद्ध छ। एउटा हस्तलिखित ग्रन्थको अन्त्यमा लेखिएको एक टिपोटअनुसार उनले त्यस मन्दिरमा सुनौला छाना हालेका थिए।

---

१. डेनियल राइट्, "हिस्ट्री अफ् नेपाल" (कलकत्ता, सुशीलगुप्त प्राइभेट् लिमिटेड ई.सं. १९५८ द्वितीय संस्करण) १२२ पृ.

२. यहाँ चर्चा गरिएका सबैजसा कलाकृतिहरूको समयनिर्धारणसम्बन्धी प्रमाणको उल्लेख तत् तत् कलाकृतिहरूको वर्णन गर्दा तल दिइएका छन् ।

पुलिस थानाको पूर्वोत्तर कुनामा रहेको महादेवको मन्दिर पनि यिनै राजाले बनाएका हुन्। कोटिलिङ्ग महादेव भन्ने नामले सो मन्दिर प्रसिद्ध छ। तलेजु र जगन्नाथको मन्दिरबाहेक महेन्द्रमल्लले बनाएका सबै मन्दिरको पुरानो रूप वर्तमान रूपमा निकै अन्तर परिसकेको देखिन्छ।

राजा महेन्द्रमल्लले बनाएका उपर्युक्त देवमन्दिरबाहेक तलेजुको पूर्वोत्तर कुनामा रहेको तानादेवलको पनि उनले पुर्ननिर्माण गरेका थिए। वि. सं. १६२३ माघमा तानादेवलका देवता तम्वलिङ्गदेवलाई सुनको देवल र ध्वजा बनाई राजा महेन्द्रमल्लले चढाएको वर्णन ठ्यासफुमा गरिएको छ। यस अवसरमा कोटयाहुति यज्ञ गरी रामायणको नाच पनि नचाइएको थियो।

महेन्द्रमल्लका उपर्युक्त कार्यकलापको आधारमा विचार गरी हेर्दा उनी आर्थिक दृष्टिले निकै सम्पन्न थिए तथा कलाकृतिको निर्माणमा उनको विशेष अभिरुचि थियो भन्ने देखिन्छ।

हनूमान्ढोकाबाट मखन जाने दोबाटोमा पश्चिमपट्टि कालिकाको मन्दिरसँगै महेन्द्र मल्लकी आमा जयन्तिकाले स्थापना गरेको उमामहेश्वरको मूर्ति प्राप्त भएको छ। त्यस मूर्तिको पादपीठमा कुँदिएको वि. सं. १६३६ को अभिलेखमा रानी जयन्तिकाले मठ बनाई खेत गुठी राखेको वर्णन छ[1]। उमामहेश्वरको सो मूर्ति यस ताका बनेका अभिलेखयुक्त दुर्लभ मूर्तिमध्ये एक हो।

महेन्द्रमल्लपछि उनका छोरा सदाशिवमल्ल काठमाडौंको राजगद्दीमा बसे। राजा सदाशिवदेखि उनका जनता प्रसन्न थिएनन्। यो मौका भेट्टाई उनका भाइ शिवसिंहले उनलाई देशनिकाला गरी आफू राजा बने।

शिवसिंह विजिगीषु शासक थिए। उनी लिस्ति, दोलखा, मकवानपुर, सिंधुली आदि प्रदेशसम्म जित्न सफल भएका थिए। उनले पाटनमा पनि अधिकार जमाएका थिए। परन्तु उनको जीवनकालमै केही शक्तिशाली भारादारहरूले उनका कान्छा नाति सिद्धिनरसिंहलाई गद्दीमा राखी पाटनको राज्य टुक्राए[2]।

राजा शिवसिंहले हनूमान्ढोका दरवारमा देगुतलेजुको मन्दिर बनाएका थिए। यो कुरो भाषावंशावलीबाट ज्ञात हुन्छ। श्री ५ प्रतापसिंह शाहले देगुतलेजुको गुठीको बन्दोवस्त गरी लेखि-

---

१. परिशिष्ट, ८ संख्याको अभिलेख

२. हालै पाइएको एउटा अप्रकाशित ठ्यासफुमा यस विषयमा यस्तो लेखिएको छ– "सम्वत् ७१५ वैशाख ... थ्व वेरस राजा श्री २ जयसिवसिंहमल्लस, प्रज्यावस जुरो ॥ थ्व वेरस राज्य याङा, दोखा त्वं ववनेन, यफास्यं, लिसति, किरोत्वं यौहास्यं गण्डपारन जुरो, पिहास्यं योव मुकानपुर शिधुरि त्वं राज्य याक जुरो। .. सम्वत् ७३९ आषाढ... थ्व वेरस कचलिपुर वङ, यर खोप उ जुयाव एस हतार कव, थ्व वेरस य कीर्तिपुरि गाम सकल्यं उ जुव ॥ एरण मचाव। थ्व वेरस राजा श्री २ शिवसिंह जुजु छयपनि निह्मं राजिक जुव ॥"

दिएको लालमोहरबाट पनि यस कुराको संकेत मिल्छ। यो बाहेक हनूमान्ढोका दरवारमा उनलाई संझाउने कुनै कृति अहिलेसम्म उपलब्ध भएको छैन। देश जित्ने काममा र लब्धप्रशमन गर्ने काममा व्यस्त रहनुपरेको हुनाले कलाकृतिको निर्माणतिर उनको विशेष ध्यान नगएको देखिन्छ।

शिवसिंहको जीवनकालमै उनका जेठा नाति लक्ष्मीनरसिंह काठमाडौंको सिंहासनमा बसे। शिवसिंहको मृत्यु हुनासाथ पाटन र भक्तपुर मिली काठमाडौंमा घेरा हाली बाटाघाटा सबै बन्द गरिदिएका थिए। यसैले चामल, भटमास आदि अन्नको भाउ प्रशस्त बढ्यो र दुनियाँमा हाहाकार भयो[1]। यसको केही महीनापछि वि. सं. १६७७ माघमा लक्ष्मीनरसिंह र सिद्धिनरसिंहले परस्परमा एकानि शत्रु एकानि मित्रको रूपमा सन्धि गरे। उनीहरूको यस सन्धिको बेहोरा हनूमान्ढोका दरवारको तलेजुको मन्दिरमा रहेको ताम्रपत्रमा लेखिएको छ[2]।

राजा लक्ष्मीनरसिंह धार्मिक विचारधाराका शान्त स्वभावका राजा थिए। तर उनको राज्यकाल शान्तिपूर्वक बितेको थिएन। उनका आफ्नै छोरा प्रतापमल्ल उनका विरोधी थिए। भीममल्ल नामक एकजना राजपरिवारसँग सम्बद्ध प्रसिद्ध व्यक्तिसँग मिली आफ्ना बाबुलाई राज्यच्युत गरी प्रतापमल्ल आफै राजा भए[3]।

यस्तो अशान्त वातावरणमा राजा लक्ष्मीनरसिंहको ध्यान आफ्नो दरवारलाई बढाउने वा सिंगार्ने काममा नजानु स्वाभाविक छ। तलेजुको मन्दिरअगाडि त्रिशूल चोकमा रहेको अग्नि-शालापुरको छतमा 'सम्वत् ७५७ (वि. सं. १६९०) माघ शुक्ल' भनी लेखिएको छ। यस कारण सो अग्निशाला राजा लक्ष्मीनरसिंहको राज्यकालमा बनेको देखिन्छ। हनूमान्ढोका दरवारले चर्चेको भूभागमा उनको शासनकालमा स्थापना भएको कलात्मक वस्तु यही एउटा मात्र छ।

प्रतापमल्लले उठानमा भीममल्लको सहायताबाट राजगद्दी हात लाएका थिए तापनि पछि भीममल्ललाई पनि समाप्त गरी उनले राज्यमा आफ्नो एकाधिकार सुरक्षित राखे। प्रतापमल्ल उत्साही र चतुर शासक हुनाले उनले आफ्ना भारादारहरूलाई काबूमा राखी शासन चलाएका थिए।

---

१. अप्रकाशित ठ्यासफुमा यस विषयमा यस्तो लेखिएको छ– "सम्वत् ७४० वैशाख कृ. षष्ठि कुन्हु शुक्लवार थ्वकुन्हु श्री २ शिवसिंहमल्लदेव जुजु अभाग जुव दिन जुरो ।। थ्व वेरस शति वङ फनपि थकरिणि, मखनजु व निह्मं जुरो, ।। थ्व वेरस महादुर्भिक्ष जुव जाकि धानां, मोहारण फं ८ थ्वते कार, थ्व ६ ग्वरण दाम टं ४ म्वात दामन प्र २ कयगुलि प्र १ थ्व वेरस महाराजिक जुव, यर ख्वपो उलास्यं ल मचारकु ।।"

२. परिशिष्ट, ९ संख्याको अभिलेख

३. कुलहर्षमुनि वज्राचार्यको संग्रहमा रहेको "आयुकारण्डयूह" नामक हस्तलिखित ग्रन्थको अन्त्यपत्रमा यस्तो लेखिएको छ– "शुभ शंम्वत् ७६१ भादवशुधि ५ थ्व कुन्हु यरन तेदु क्वश हर च्वन वव, थ्व कुन्हुया रात्रिश, श्रीश्रीरक्षिमनृसिंहमल्ल वंधिषाना तव प्रतापमरन. भिम्रन न्यह्म उ जुयाव तर, ठथ्य याङाव थ्व कुन्हुया चाशं जिरिया स्याक थ्वपरिस्यन."

साहित्य, नृत्य, संगीत र कलाकृतिको निर्माणमा उनले देखाएको विशेष अभिरुचिले गर्दा नेपालको इतिहासमा राजा प्रतापमल्लको ठूलो ख्याति छ। उनले बनाएर गएका देवमन्दिर र अरू अनेकन् कला कृतिहरूले काठमाडौंको शोभा बढाइरहेका छन्। हनूमान्ढोकामा अहिले बचेका मल्लकालका धेरैजसा कृति यिनै राजाको पालामा बनेका छन्।

मल्लकालमा भारतबाट भोट जाने मुख्य बाटो उपत्यकाभित्र पर्दथ्यो[1]। यस बाटोमा आवतजावत गर्ने व्यापारीहरूबाट प्रशस्त महसूल उठ्ने हुनाले मल्ल राजाहरूको आर्थिक अवस्था राम्रो थियो। राजा प्रतापमल्लले उपत्यकाबाट भोट जाने मुख्य मुख्य बाटामा रहेका कुती, केरुङमा हमला गरी त्यहाँ आफ्नो अधिकार जमाएका थिए। यिनको पालामा भोटसँगको व्यापार पनि निकै चम्केको थियो। यसले गर्दा प्रतापमल्ल प्रशस्त धन उपार्जन गर्न सफल भए। यसरी आर्थिक दृष्टिकोणले सम्पन्न भएका र कलाकृतिको निर्माणमा पनि विशेष अभिरुचि भएको हुनाले राजा प्रतापमल्ल हनूमान्ढोकालाई नयाँ रूप दिन समर्थ भए।

राजा प्रतापमल्लले वि. सं. १६९९ ज्येष्ठमा तलेजुभवानीको मन्दिरअगाडि प्रस्तरको खम्बा गाडी सुनको मोलम्मा लगाएको धातुको सिंह स्थापना गरे। सिंह तलेजुभवानीको वाहन हुनाले उनले तलेजुको अगाडि सिंह स्थापना गरेका थिए। हनूमान्ढोकामा राजा प्रतापमल्लको सबभन्दा पहिलो कृतिको रूपमा यो देखापरेको छ।

त्यसपछि वि. सं. १७०१ पौषमा तलेजुको मन्दिरभित्र नमस्कार मुद्रामा रहेको आफ्नो सानो मूर्ति बनाई स्थापना गरे[2]। त्यस बेला राजा प्रतापमल्ल २१ वर्ष मात्रका थिए। उनको युवकोचित सुन्दर शरीरको प्रतिनिधित्व त्यस मूर्तिले गरेको छ।

राजा प्रतापमल्लले विहारदेशकी राजकुमारी रूपमतीदेवी र कर्णाटदेशकी राजकुमारी राजमतीसँग विवाह गरेका थिए। वि. सं. १७०५ भन्दा अगाडि नै ती दुबै रानीको मृत्यु भइसकेको थियो। तिनै रानीहरूको संझनामा उनले वि. सं. १७०५ फागुनमा कृष्णमन्दिरको निर्माण गरे। वि. सं. १६९३ मा पाटनका राजा सिद्धिनरसिंहले आफ्नो दरबारअगाडि बनाएको प्रसिद्ध कृष्ण-मन्दिरको प्रतिस्पर्धामा यो बनेको थियो।

कृष्णमन्दिरको निर्माण भइरहेकै समयमा यी राजाले आफ्नो दरवारमा मोहनचोक बनाउने काम पनि सँगसँगै थालेका थिए। त्यस चोकमा रहेको सुवर्णपत्रअनुसार वि. सं. १७०५ को फागुन महीनामा नै मोहनचोकको निर्माणकार्य समाप्त भएको थियो। सुवर्णद्वारबाट पस्नासाथ आउने नासलचोकको उत्तरपट्टि मोहनचोक रहेको छ।

मोहनचोक तयार भएको केही समयपछि नै त्यस चोकसँगै जोडिएर रहेको सुन्दरचोक

१. रेग्मी, "मेडियाभल् नेपाल" २ भाग ३९०–३९३ पृ.

२. परिशिष्ट, १५ संख्याको अभिलेख

बनेको बुझिन्छ । सुन्दरचोकको दलानमा शिवलिङ्गको नजीकै रहेको एउटा घण्टामा राजा प्रतापमल्लले वि. सं. १७०७ फागुनमा लक्षप्रतापेश्वर नामक शिवलिङ्ग स्थापना गरेको कुरो लेखिएको छ । यसरी प्रतापमल्लको पालामा हनूमान्ढोका दरवारको निर्माणक्रम निकै गतिशील भएको थियो ।

डेनियल राइटको वंशावलीअनुसार नासलचोक र भण्डारखाल यिनै राजाले बनाएका थिए । मरुसत्तलसँगैको कवीन्द्रपुर पनि यिनै राजाको कृति हो भने कुरो त्यहाँ रहेको उनको शिलालेखले बताउँछ । यसै गरी कालभैरवसँगै रहेको इन्द्रपुरनामक मन्दिर र नासलचोकको पूर्वोत्तर कुनामा रहेको पञ्चमुखी हनूमान्को मन्दिर पनि राजा प्रतापमल्लकै कीर्ति हो भन्ने कुरा वंशावलीबाट बुझिन्छ । पञ्चमुखी हनूमान्को वर्तुलाकार मन्दिर वास्तुकलाको दृष्टिले विशेष महत्त्व राख्छ ।

वि. सं. १७०८ माघमा राजा प्रतापमल्लले मोहनचोकमा सुनधारा बनाए । पवित्र पानीले नुहाउने काम धार्मिक भावनासँग सम्बद्ध हुनाले त्यस धाराको चारैतिर अनेक देवदेवीका मूर्ति स्थापना गरिएका छन् । कलाको क्षेत्रमा पारस्परिक प्रतिद्वन्द्विताको फलस्वरूप उपत्यकाका तीनै मल्लदरवारमा सुनधारा बनेका छन् ।

राजा प्रतापमल्ल आफूलाई एक विशिष्ट व्यक्तिको रूपमा दर्शाउन चाहन्थे । यस कारण नयाँ नयाँ अनौठा कुरा गर्न उनी मनपराउँथे । वि. सं. १७१० माघमा उनले आफ्नो दरवारको प्राङ्गणतिर फर्केको भित्तामा एउटा बडेमाको जलद्रोणी राख्न लगाई त्यसमाथि अरबी, फारसी, फ्रेञ्च आदि विभिन्न भाषा र लिपिमा शिलालेख कुँद्न लगाए । धेरै भाषा र लिपि चिन्नु विद्वत्ताको लक्षण हो भन्ने भावको कुरो उनले त्यहाँ लेखाएका छन् ।

यसपछि वि. सं. १७१४ श्रावणमा सुनको ढलौटे विश्वरूपको मूर्ति बनाई प्रत्येक वर्ष श्रावण महीनामा हुने 'बहिद्यो बोय्' भनी प्रसिद्ध विहारमा संचित वस्तुको प्रदर्शनी हुने बेला लाय्कु वहीमा र इन्द्रजात्रामा दरवारको प्राङ्गणमा ल्याई प्रदर्शन गर्नुपर्ने नियम बाँधे ।

भण्डारखालको संगै नागपोखरीको बीचमा रहेको नागको आकृतिले मल्लकालको एउटा ऐतिहासिक घटनालाई संझाउँछ । नागको सो आकृति राजा प्रतापमल्लले वि. सं. १७२० मा भक्तपुरमा हमला गर्दा त्यहाँ रहेको एउटा पोखरीबाट उठाएर ल्याएका थिए । तलेजुको अगाडि र राजद्वारमा रहेका प्रस्तरका सिंह पनि यसै ताका उनले भक्तपुरबाट बोकाएर ल्याई त्यहाँ राख्न लगाएका थिए ।

वि. सं. १७२० पौषमा तलेजुको मन्दिरअगाडि राजा प्रतापमल्लले फेरि अर्को स्तम्भ गाडी त्यसमाथि आफू, आमा, दुइ छोरा नृपेन्द्रमल्ल र चक्रवर्तेन्द्रमल्लको सालिक राख्न लगाए । आफ्नो व्यक्तित्व प्रदर्शन गर्नाको लागि होइन कि इष्टदेवताप्रति आफ्नो श्रद्धाभाव व्यक्त गर्नाको

लागि यी सालिक राखिएका थिए । यसै गरी यिनले दरवारको प्राङ्गणमा देगुतलेजुको अगाडि स्तम्भमा आफू र आफ्ना दुइ रानी अनन्तप्रियादेवी र प्रभावतीदेवी तथा भूपेन्द्रमल्ल, चक्रवर्तेन्द्र-मल्ल, महीपतेन्द्रमल्ल, नृपेन्द्रमल्ल, पार्थिवेन्द्रमल्ल यी पाँच छोराहरूको सालिक बनाई स्थापना गरे । पाटन र भक्तपुरका राजदरवारका प्राङ्गणमा पनि मल्लराजाहरूको यस्ता सालिक बनेका छन् । यस प्रतिद्वन्द्विताका काठमाडौं अगाडि परेको थियो ।

मल्लराजाहरू आफूलाई रामचन्द्रका वंशज हौं भन्ने कुरामा गर्व गर्दथे । यस कारण तिनीहरू रामचन्द्रका परम अनुयायी हनूमान्का भक्त थिए । हनूमान्को सेवाले लडाईंमा विजय प्राप्त हुन्छ र आफ्नो वासस्थान सुरक्षित रहन्छ भन्ने कुरामा उनीहरूको विश्वास थियो । यसैले उपत्यकाका तीनै मल्लदरवारमा हनूमान्का मूर्ति स्थापना गरिएका छन् । काठमाडौंको राज-दरवारको प्राङ्गणमा रहेका दुइटा हनूमान्चाहिं राजा प्रतापमल्लले वि. सं. १७२९ वैशाखमा स्थापना गरेका थिए । तिनमा पहिलो ठूलो घण्टाको अगाडि राखिएको छ; दोस्रो त्योभन्दा ठूलो दरवारको मूलढोकामा रहेको छ । यिनै हनूमान्को नाउँमा काठमाडौंको राजदरवार प्रसिद्ध छ ।

राजा प्रतापमल्लको नृत्यकलामा पनि ठूलो अभिरुचि थियो । कहिले कहीं उनी स्वयम् पनि नर्तकको रूपमा रंगशालामा उत्रन्थे । यी राजाले नरसिंहको रूप लिएर कुनै बेला नाचेका थिए । सोही घटनाको संस्मरणस्वरूप नासलचोकमा वि. सं.१७३० को आषाढमा नरसिंहको मूर्ति स्थापना गरिएको छ । मल्लकालमा बनेका केही कलापूर्ण मूर्तिमध्ये यसको गणना हुन्छ । हनू-मान्ढोकाभित्र बनेका राजा प्रतापमल्लको अन्तिम कृतिको रूपमा नरसिंहको यो मूर्ति देखापरेको छ ।

यत्रतत्र मिल्किएका प्राचीन कालमा बनेका कलाकृतिहरूमा पनि राजा प्रतापमल्लको ध्यान गएको थियो । आफूले बनाउन लाएका नयाँ कृतिहरूद्वारा मात्र होइन कि प्राचीन कलात्मक वस्तुहरूको संग्रहद्वारा पनि उनले आफ्नो दरवार सिंगारेका थिए । ज्ञानेश्वरबाट उठाएर ल्याएको भण्डारखालको जलशयननारायणको विशाल मूर्ति, लाजिम्पाटनजीकै साकुन्हा भन्ने ठाउँबाट उत्खनन गरेर ल्याएको सुन्दरचोकमा राखिएको कलापूर्ण कालीयदमन मूर्ति, बूढानीलकण्ठ जाने बाटोमा रानीवन भन्ने ठाउँबाट बोकाएर ल्याएको दरवारको प्राङ्गणमा रहेको कालभैरवको मूर्तिले राजा प्रतापमल्लको कलाकृतिप्रतिको गहिरो प्रेम र सूक्ष्म पारखी दृष्टिको परिचय दिन्छन् । यसरी राजा प्रतापमल्लले प्रशस्त धन खर्च गरी दत्तचित्त भई हनूमान्ढोका दरवार सिंगारे । यस दरवारको निर्माणमा सबभन्दा ठूलो श्रेय उनैलाई छ ।

राजा प्रतापमल्लको अन्त्यपछि काठमाडौंमा राजनैतिक अस्थिरता आयो । त्यस वेला उनका ठयाहा छोराहरू उमेर पुगेका आफै शासन चलाउन सक्ने अवस्थाका थिएनन् । यसैले राज्यको बागडोर मन्त्रीहरूको हातमा गयो । प्रतापमल्लपछि उनका छोरा नृपेन्द्रमल्ल काठ-माडौंका राजा बनाइए । प्रधानमन्त्रीको पद चिकुटि नामक भारादारले ओगटाए, छ वर्ष जति राजगद्दीमा बसी अठाह्र वर्षको चढ्दो उमेरमा नृपेन्द्रमल्लको मृत्यु भयो । उनले राखेर गएको

कुनै कीर्ति हनूमान्ढोका दरबारमा देखापरेको छैन। उनीपछि उनका भाइ पार्थिवेन्द्रमल्ल राज-सिंहासनमा बसे। मन्त्रीहरूको शक्ति हात लगाउने दाउपेचले गर्दा राजा पार्थिवेन्द्रको पनि अकालमै मृत्यु भयो।

राजा पार्थिवेन्द्रमल्लको राज्यकालमा वि. सं. १७३७ मा गद्दीबैठक अघिल्तिर त्रैलोक्य-मोहननारायणको मन्दिर (दशावतार देखाउने देवल) बन्यो। सो मन्दिर उनले आफ्ना दाज्यू नृपेन्द्रमल्लको संझनामा बनाउन लाएका थिए। त्यसपछि उनले आफ्ना पिता प्रतापमल्लले जस्तै तलेजु मन्दिरअगाडिको स्तम्भमाथि छोरा भूपालेन्द्र, आमा इन्द्रमती तथा दुइ रानी राज्यलक्ष्मी र ऋद्धिलक्ष्मीसहित आफ्नो सालिक राख्न लगाए। वि. सं. १७३८ माघमा उनले ती सालिक स्थापना गरेका थिए।

पार्थिवेन्द्रको अवसानपछि उनका बालक छोरा भूपालेन्द्रमल्ल काठमाडौंको गद्दीमा राखिए। प्रधानमन्त्रीको पद लक्ष्मीनारायण नामक प्रसिद्ध व्यक्तिले अँठ्याए। राजमाता ऋद्धिलक्ष्मीको समर्थन उनलाई मिलेको थियो। यस कारण उनी राज्यका हर्ताकर्ता भए।

यी राजाको राज्यकालमा राजमाता ऋद्धिलक्ष्मी र प्रधानमन्त्री लक्ष्मीनारायणले त्रैलोक्यमोहनको मन्दिरअगाडि वि. सं. १७४६ कार्तिकमा गरुडको ठूलो मूर्ति स्थापना गरे। यही साल उक्त मन्दिरको पश्चिमोत्तर कुनामा राजमाता ऋद्धिलक्ष्मीले शिवजीको विशाल मन्दिर बनाए। यस बेला राजा भूपालेन्द्रमल्ल दश वर्षका मात्र थिए। राजमाताले बनाएको हुनाले सो मन्दिर माजुदेवल भन्ने नामले प्रसिद्ध छ। यसै गरी भूपालेन्द्रकी रानी भुवनलक्ष्मीले उनको अन्तिम शासनकालमा वि. सं. १७५७ मा तलेजुको मन्दिरभित्र सुनको खापा हालेकी थिइन्।

भूपालेन्द्रको देहावसानपछि उनका चार वर्षका बालक छोरा भास्करमल्ल काठमाडौंका राजगद्दीमा बसे। उनका आमा भुवनलक्ष्मी र विश्वम्भर उपाध्यायको रेखदेखमा शासन चल्न थाल्यो। उमेरदार भएपछि उनले आफैंले शासन चलाए। यिन राजाको राज्यकालमा राजमाता भुवनलक्ष्मीले राखेर गएका अनेकन् कीर्ति हनूमान्ढोका दरबारमा देखिएका छन्। वि. सं. १७५९ भाद्रमा भुवनलक्ष्मीले आफ्ना लोग्नेको संझनामा आनन्द भैरव र आनन्द भैरवीका सुनका प्रतिमा स्थापना गरिन्। इन्द्रजात्राको समयमा भगवतीको मन्दिरमुनि दलानमा राखेर ती प्रतिमा प्रदर्शित गरिन्छन्। मूलचोकमा रहेको तलेजुको मन्दिरमा ढोकाको दायाँबायाँ रहेका गङ्गा जमुनाका सुनका सुन्दर प्रतिमा पनि राजमाता भुवनलक्ष्मीकै कीर्ति हुन्। वि. सं. १७६५ आश्विनमा मूलचोकको जीर्णोद्धार गरी ती प्रतिमा स्थापना गरिएका थिए। यसपछि वि. सं. १७६७ फागुनमा आफ्नो दरबारको प्राङ्गणमा धातुको शिवलिङ्ग स्थापना गरी मन्दिर बनाउन लगाइन्। कागेश्वरको देवल भन्ने नामले आजभोलि सो मन्दिर प्रसिद्ध छ। यसै गरी तलेजुका मन्दिरमा उनले तलेजु र दुमाजुलाई चढाएका अभिलेखयुक्त केही भांडाकुँडा उपलब्ध भएका छन्। राजा भास्कर-मल्लले आफैंले राख्न लगाएको घण्टा तलेजुको ठूलो मन्दिरअगाडि रहेको छ। योबाहेक यिनै

राजाको समयमा राखिएको एउटा सानो घण्टा कल्हेहोल चोकको नासलदेवताको मन्दिरमा देखिएको छ ।

राजा भास्करमल्लका कोही सन्तान थिएनन् । उनले जगज्जयमल्ललाई आपनो उत्तराधिकारी छानेर गएका थिए । यस कारण जगज्जयमल्ल उनीपछि काठमाडौंको राजगद्दीमा बसे ।

उनको राज्यकालमा उनका जेठा छोरा राजेन्द्रमल्लले चाँदीको तुलादान गरी बनाएका अभिलेख अंकित प्रस्तरका दुइ स्तम्भ तलेजुदेवलमुनि राखिएका छन् । जेठा छोराप्रति जगज्जयमल्लको विशेष प्रेम थियो । तर जवानीमै उनको मृत्यु भयो । उनको यो असामयिक निधनले जगज्जयमल्लको मनमा ठूलो चोट लाग्यो र उनले आफ्ना दिवंगत छोराको संझनामा हनूमान्ढोका दरवारको प्राङ्गणमा लक्ष्मीसहित वैकुण्ठ विष्णुको मूर्ति स्थापना गरी मन्दिर बनाइदिए । वि. सं. १९९० को भूकम्पले सो मन्दिर भत्केको हुनाले त्यहाँ रहेको सुनको देवप्रतिमा असुरक्षित देखेर त्यहाँबाट उठाएर ल्याई नासलचोकको पूर्वी.लङ्को दलानमा राखिएको छ । सो मूर्ति आजभोलि महाविष्णु भन्ने नामले प्रसिद्ध छ ।

जगज्जयमल्लपछि उनका माहिला छोरा जयप्रकाश गद्दीका हकदार भए । नेपालको इतिहासमा काठमाडौंका अन्तिम मल्ल राजाको रूपमा यी प्रसिद्ध छन् । यी राजाको धेरै समय गृहकलह र वाह्य आक्रमण रोक्नामा बितेको थियो । उनका विरोधी भारादारहरूले उनकी रानीलाई समेत हात लिई उनलाई राज्यच्युत गरी केही वर्षसम्म उनका बालक छोरा ज्योतिप्रकाशलाई गद्दीमा राखेका थिए । तर ती विरोधी भारादारहरूलाई पन्छाई उनी फेरि राजा बने । गोरखालीहरूको बारम्बार आक्रमण भई नै रहेको थियो । उनीहरूले विस्तारै नेपाल उपत्यकाको चारैतिरका प्रदेशमा कब्जा जमाई नून, कपास आदि कुनै पनि पदार्थ उपत्यकाभित्र पस्न दिइएको थिएन । आखिरमा धेरै वर्षको प्रयासपछि उनीहरूले काठमाडौं जिते ।

जयप्रकाशलाई संझाउने केही कृति हनूमान्ढोका दरवारमा देखिएका छन् । न्हुलछें चोकमा भगवतीको सानो मन्दिरमा वि. सं. १७९९ आषाढमा उनले सुनको छाना हालिदिएका थिए । त्यसपछि वि. सं. १८१३ मा उनले कल्हेहोल चोकमा सुनको सानो डबली बनाई स्थापना गरे । पुरानो सुनको डबली फेरेर उनले त्यो बनाएका थिए । कुमारीचोक राजा जयप्रकाशकै कीर्ति हो । वि. सं. १८१३ फागुनमा उनले त्यस चोकको निर्माणकार्य शुरू गराई सोही वर्षको भाद्र महीनासम्ममा सम्पूर्ण चोक तयार पार्न लगाएका थिए । तदनन्तर वि. सं. १८१७ जेठमा लक्षाहुति यज्ञ गरी तलेजुको मन्दिरभित्र आफ्नो सालिक स्थापना गरे । अनेकन् गृहकलह र बाहिरी आक्रमणको सामना गर्नुपरे तापनि त्यताबाट फुर्सत पाएको समयमा कलाकृतिको निर्माणतिर पनि राजा जयप्रकाशको ध्यान गएको थियो भन्ने यताबाट बुझिन्छ ।

काठमाडौं जितेको एक महीना जतिपछि श्री ५ पृथ्वीनारायण शाहले पाटन जिते । त्यसको एक वर्ष जतिपछि वि. सं. १८२६ मा भक्तपुर उनको अधिकारमा आयो । यसरी नेपाल उपत्यकामा अधिकार जमाई उनले काठमाडौंलाई राजधानी बनाए ।

पृथ्वीनारायण शाहका यी विजय आकस्मिक सफलता नभएर योजनाबद्ध कार्यक्रमसँग संबद्ध कुरा थिए। उनले आफ्नो जीवनकालमा उपत्यकाका तीन मल्ल राज्य र मकवानपुर, चौदण्डी, विजयपुर यी तीन सेन राज्य जितेका थिए तथा बंगालका नवाबको सैन्य र अंग्रेजको फौजलाई परास्त गरी नेपालको स्वतन्त्रतालाई कायम गरेका थिए। यति गरी उनले नेपालको एकीकरणको आधारशिला तयार पारे।

राजनैतिक क्षेत्रमा जस्तै सांस्कृतिक क्षेत्रमा पनि विदेशी प्रभाव नहटाई नेपालको गौरव कायम रहन सक्दैन भन्ने उनको विचार थियो। यस कारण उनले आफ्नो देशका कलाकारहरूलाई प्रोत्साहन दिने नीति लिएका थिए। उपत्यकाका कलाकारहरू वास्तुकला, नृत्यकला आदिमा विशेषतया निपुण हुनाले उनीहरूको हौसला बढाई विदेशी कलाको प्रभाव रोक्ने चेष्टा उनले गरे। उनको यही नीति अनुसार उनले वि. सं. १८२६ मा नेपालको आफ्नै शैलीमा वसन्तपुर र विलास-मन्दिर नामक राजभवन निर्माण गरे। नेपाली मन्दिरको शैलीमा बनेको वसन्तपुर दरवार नेपाली वास्तुकलाको इतिहासमा विशेष स्थान राख्छ।

श्री ५ पृथ्वीनारायण शाहको देहावसानपछि उनका जेठा छोरा श्री ५ प्रतापसिंह शाह राजगद्दीमा बसे। यी राजाले आफ्नो शासनकालमा वसन्तपुर र विलासमन्दिरलाई बढाई एउटा ठूलो चोकको रूपमा परिणत गरे। वसन्तपुर चोक भन्ने नामले सो चोक प्रसिद्ध छ। प्रतापसिंह शाहको चाँडै मृत्यु भएको हुनाले उनका बालक छोरा श्री ५ रणबहादुर शाह अढाई वर्षको उमेरमा राजगद्दीमा बसे। पृथ्वीनारायण शाहका कान्छा छोरा बहादुर शाहको कुशल नेतृत्वको फल-स्वरूप वि.सं. १८४९ सम्ममा नेपाल राज्यको सीमा पश्चिममा गढवालसम्म र पूर्वमा टिस्टासम्म पुग्यो।

श्री ५ रणबहादुर शाहका अनेक महारानीमध्ये कान्तवती उनका सबभन्दा बढी मन परेकी महारानी थिइन्। ती महारानीतर्फबाट श्री ५ गीर्वाणयुद्धविक्रम शाहको जन्म भएको थियो। महारानी कान्तवतीलाई रोग लाग्दा उनलाई मनमा शान्ति दिलाउन उनले डेढ वर्षका बालक श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई राजगद्दीमा राखे। आफूचाहिं राज्य छोडी जोगी बने।

श्वेतभैरवको मूर्ति र ठूलो घण्टा श्री ५ रणबहादुर शाहलाई संझाउने हनूमान्ढोकामा रहेका दुइटा उल्लेखनीय कीर्ति हुन्। उनैको शासनकालमा बहादुर शाहले शिवपार्वतीको मन्दिर बनाउन लगाए। यो मन्दिर पूर्णतया नेपाली वास्तुकलामा आधारित छ। नेपाली कलालाई प्रोत्साहन दिने श्री ५ पृथ्वीनारायण शाहको नीति यस बेला कायमै थियो भन्ने कुरो यसले देखाएको छ।

श्री ५ गीर्वाणयुद्धविक्रम शाह बालक भएको हुनाले प्रधानमन्त्री भीमसेन थापाको हातमा ठूलो अधिकार आयो। यिनी धेरैजसो आफ्नो घरमा नबसी हनूमान्ढोकामा नै बसी राज्यको बन्दोवस्त गर्दथे।

श्री ५ गीर्वाणयुद्धविक्रम शाहलाई संझाउने केही कृति हनूमान्ढोका दरवारमा मौजूद छन्। कृष्णमन्दिरसँगै रहेको ठूलो नगरा यिनै राजाको कीर्ति हो। देगुतलेजुलाई प्रसन्न पार्न वि. सं. १८६४ मा ठूला नगरा बनेका थिए। हनूमान्ढोका दरवारको सुवर्णद्वार पनि यिनै राजाको शासन-कालमा बन्यो। भीमसेन थापा र बहादुर भण्डारीको रेखदेखमा वि. सं. १८६७ भाद्रमा सुवर्णद्वार तयार गरिएको थियो। त्यसपछि वि. सं. १८७२ मा यी राजाले देगुतलेजुको मन्दिरमा चाँदीका द्वार बनाई चढाए।

उन्नाइस वर्षको चढ्दो उमेरमा श्री ५ गीर्वाणयुद्धविक्रम शाहको शीतलाको व्यथाले स्वर्गवास भयो। त्यसपछि उनका तीन वर्षका बालक छोरा श्री ५ राजेन्द्रविक्रम शाहलाई गद्दीमा राखी भीमसेन थापाले अघि जस्तै राजकाज चलाउँदै गए। चौंतीस वर्षको उनको लामो प्रधान-मन्त्रित्वकालमा नेपालमा केही राजनैतिक स्थिरता आएको थियो। यसैले श्री ५ राजेन्द्र विक्रम शाहको शासनकालमा उनको देखरेखमा हनूमान्ढोका दरवार सिंगार्ने र बढाउने काम निकै भएका थिए। वि. सं. १८७९ फागुनमा हनूमान्ढोका बाहिर प्राङ्गणमा पत्थर छाप्ने काम भयो। वि. सं. १८८१ फागुनमा मूलचोक, मोहनचोक सुन्दरचोक, जीर्णोद्धार गरिए। भण्डार-खालको पुनर्निर्माण यसैताका भयो तथा कोतमा सीसमहल नामक विशाल भवनको निर्माणकार्य सम्पन्न भयो। त्यसपछि वि. सं. १८८२ फागुनमा नासलचोकमा पत्थर छापियो र त्यहाँ रहेको ऐतिहासिक डबलीको पुनर्निर्माण गरियो।

कोतमा निर्माण गरिएको सो विशाल भवनमा बाहिरबाट ऐना झिकाई हालिएका थिए। यसैले त्यसको नाउँ सीसमहल भन्ने रहेको थियो। कोतपर्व यसै भवनमा भएको थियो। तर आजभोलि त्यस भवनको अस्तित्व बचेको छैन। जङ्गबहादुरको समयमा नेपालमा आएका डेनियल राइटले यो भवन देखेका थिए। उनले आफ्नो ग्रन्थमा यसको वर्णन गरेका छन्। उनको सो वर्णनअनुसार सो भवन अर्द्धयूरोपीय शैलीमा बनेको थियो। यसरी त्यस वेला स्वदेशी वास्तुकलालाई प्रोत्साहन दिने परम्परागत राष्ट्रिय नीतिमा केही परिवर्तन आएको संकेत यसले दिएको छ।

जङ्गबहादुर आदि राणा प्रधानमन्त्रीहरू यूरोप घुम्न जान थालेदेखि यो प्रवृत्ति उत्तरोत्तर बढ्दै गयो। श्री ५ सुरेन्द्रविक्रम शाहको शासनकालमा जङ्गबहादुर राणाको प्रबन्धबाट दाख चोकको उत्तरी लङ्को विशाल भवन बन्यो। यस भवनमा पश्चिमा कलाको प्रभाव प्रतिबिम्बित भएको पाइन्छ। केही समयपछि सोही शैलीमा दाखचोकका अरू भवन बने। यसै गरी वि. सं. १९६५ मा श्री ५ पृथ्वीवीरविक्रम शाहको राज्यकालमा श्री ३ चन्द्रशम्शेरको प्रबन्धमा गद्दी-बैठक बन्यो[1]। सो भवन बेलायततिर त्यस वेला चलेको 'नेओ-क्लासिकल' नामक शैलीमा तयार गरिएको छ।

यसरी रत्नमल्लदेखि श्री ५ पृथ्वीवीरविक्रम शाहको समयसम्मका धेरैजसा मल्ल र

---

१. परिशिष्ट, ८९ संख्याको अभिलेख

शाह् राजाहरूका कलाकृति हनूमान्ढोका दरवारमा उपलब्ध भएका छन् । विभिन्न राजनैतिक परिस्थिति, आर्थिक अवस्था तथा विचारधाराको प्रतिनिधित्व गर्ने तिनै कलाकृतिहरूको संमिश्रणबाट वर्तमान हनूमान्ढोका दरवार बनेको छ ।

माथि उल्लेख गरिएका कृतिबाहेक हनूमान्ढोकामा अरू पनि चोक र मन्दिर आदि मौजुद छन् । तिनमध्ये कतिपय कलाकृति मल्लकालमै बनिसकेका थिए । मल्लकालका ऐतिहासिक सामग्रीहरूमा तिनका उल्लेख आएका छन् । उदाहरणार्थ वि. सं. १६८५ को एउटा टिपोटमा मूलचोकको पहिलो उल्लेख देखिएको छ तथा अठाह्रौं शताब्दीका मल्लकालिक लेखहरूमा कह्नेहोल चोक, भतुलिचोक, चौक्वाथ आदिको चर्चा ठाउँ ठाउँमा पाइन्छन् । मूलचोक र कह्नेहोल चोक हनूमान्ढोकामा अद्यापि छन् । तर ती कहिले बने भन्ने कुरो त्यहाँबाट नखुल्ने हुनाले निर्माणको सिलसिलामा तिनलाई समावेश गर्न सकिएको छैन ।

पुराना कलाकृति नष्ट भ्रष्ट हुँदै गएका र नयाँ नयाँ कीर्तिहरू थपिँदै गएका हुनाले हनूमान्ढोका दरवारको स्वरूप समय समयमा फरक हुँदै आउनु स्वाभाविक छ । मल्लकालमा हनूमान्ढोकामा बनेका कति कृतिहरू शाह्कालसम्म पुग्दा लुप्त भइसकेका थिए । उदाहरणार्थ मल्लकालको प्रसिद्ध चौक्वाथ, भतुलिचोक शाह्कालमा हराइसकेका थिए । शाह्कालमा टिपिएको हनूमान्ढोकामा रहेका चोक पटाङ्गिनीको सूचीमा ती स्थानको उल्लेख छैन । यसै गरी उस वेला भएका जिस्वांचोक, टौचोक, डुगुचा चोक, निचोक, वैद्यखानाचोक, हात्तीसार चोक आदि[1] प्रशस्त चोकको अस्तित्व हनूमान्ढोकामा अहिले बचेका छैनन् । निर्माणको सिलसिलामा हनूमान्ढोका दरवारको रूप समय समयमा बदल्दै आएको कुरो यताबाट स्पष्ट बुझिन्छ ।

१. परिशिष्ट, मन्दिर र चोकहरूको नापोसम्बन्धी पुराना कागतपत्र (दोस्रो)

# रचनाशैली

नेपाल उपत्यकाका मल्ल राजाहरू परस्परमा आक्रमण प्रत्याक्रमण गरिरहन्थे । प्रायः दुइटा राज्य मिलेर अर्को राज्यलाई अचेट्ने प्रयास भइरहन्थ्यो । धेरैजसा मल्ल राजाहरू तीनै वटा मल्ल राज्य जिती एउटै राज्य बनाउने महत्त्वाकांक्षा राख्दथे । तर कुनै पनि मल्ल राजा यस काममा पूर्णतया सफल हुन सकेनन् र यति सानो नेपाल उपत्यकाभित्र तीन स्वतन्त्र राज्य सयौं वर्षसम्म टिकिरहे ।

ती मल्ल राजाहरूको तीनै वटा दरवार उपत्यकाभित्र दुइ तीन कोशको फासलामा निर्माण गरिएका छन् । हनूमान्ढोका दरवारबाट पाटनको दरवार पुग्न एक घण्टा हिंडे पुग्छ तथा भक्तपुर दरवार पुग्न पनि करीव तीन घण्टाभन्दा बढी हिंड्नु पर्दैन । यस कारण परस्परमा सांठगाँठ नमिलेको खण्डमा केही घण्टाभित्रै एक राज्यले अर्को राज्यमा चढाइ गर्न सक्दथ्यो । परन्तु मल्ल राज्यलाई जिती उनीहरूको दरवारमा अधिकार जमाउनु निकै गाह्रो काम थियो । यसैले श्री ५ पृथ्वीनारायण शाहले काठमाडौं राज्यमा पर्ने नुवाकोट जितिसकेपछि पनि नेपाल उपत्यकामा अधिकार जमाउन चौबीस वर्षसम्म प्रयत्न गर्नुपरेको थियो[1] । यसो हुनामा एउटा महत्त्वपूर्ण हेतु थियो । ती मल्ल राजाहरूले बाह्य आक्रमण रोक्नाको लागि राम्रो बन्दोवस्त गरेका थिए । उनीहरूले आफ्-आफ्नो शहरको चारैतिर खाई, पर्खाल आदि बनाई संपूर्ण शहरलाई नै किल्लाको रूपमा परिणत गरेका थिए तथा तिनीहरूले आफ्नो दरवारका केही भागलाई किल्ला-को रूपमा निर्माण गरेका थिए । त्यस्ता केही किल्ला र दरवारका अवशेष ठाउँ ठाउँमा अद्यापि भेटिन्छन् । तात्कालिक ऐतिहासिक सामग्रीमा पनि तिनको वर्णन पाइन्छन् ।

भक्तपुर दरवारको सुवर्णद्वारसँगै रहेको वि. सं. १५१० को अभिलेखमा राजा यक्षमल्लले भक्तपुरका बासिन्दाहरूको सहयोगले भक्तपुर शहरलाई एउटा ठूलो गढको रूपमा परिणत गरेको चर्चा परेको छ । सो गढको सबभन्दा अन्त्यको घेरामा खाई बनाइएको थियो । त्यसभन्दा भित्रपट्टि पर्खालले चारैतिर शहरलाई घेरिएको थियो । शहरभित्र पस्न ठाउँ ठाउँमा ढोका बनाइएका थिए । त्यहाँ किल्लाघर बनाइएका हुन्थे । खाई पुरियो भने सफा गर्ने काम तथा पर्खाल वा किल्ला भत्के बिग्रेको मर्मत गर्ने काम प्रतिवर्ष गरिन्थे । अधिकारीहरू र प्रजाहरू

१. नयराज पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" (काठमाडौं, जगदम्बा-प्रकाशन, वि. सं. २०२८) ५०० पृ.

मिली सिठीको दिनसम्ममा सो काम पूरा गर्नुपर्थ्यो[1] ।

यसै गरी राजा श्रीनिवासमल्लका पालाका पण्डित कुनु शर्माले बनाएको कीर्तिपताका नामक पुस्तकबाट त्यस बेलाको पाटनको स्थिति बुझ्न निकै मद्दत पाइन्छ । भक्तपुर जस्तै पाटन पनि एक ठूलो गढको रूपमा रहेको थियो । त्यहाँ पनि खाई, किल्ला, पर्खाल आदि बनेका थिए भन्ने कुरो कुनु शर्माको त्यस वर्णनबाट थाहा पाइन्छ[2] ।

काठमाडौं शहरको वरिपरि पनि बलिया गढकिल्ला बनेका थिए । काठमाडौंका किल्लाका बयान लेखिएको कुनै लेख प्राप्त भएको छैन तापनि ऐतिहासिक घटनाको वर्णनक्रमबाट यो कुरो ज्ञात हुन्छ । गोरखालीहरूले काठमाडौं, पाटन, भक्तपुरको राजधानी विजय गर्नुभन्दा धेरै अघिदेखि राजधानीका वरपरका इलाका कब्जा गर्दै आएका थिए । वि. सं. १८२२ मा काठमाडौं राजधानीका बासिन्दालाई विष्णुमती, शोभाभगवतीसम्म जान पनि गोरखालीको डर भइसकेको मछिन्द्र बहालमा रहेको शान्तिसफुले देखाउँछ । सेता मछिन्द्रनाथको महास्नानको लागि पौष शुक्ल सप्तमीको दिन प्रतिवर्ष विष्णुमती शोभाभगवतीनिर पानी लिन जानुपर्छ तथा पानी ल्याउनु- भन्दा पहिले त्यहाँ धेरै पूजाआजा गर्नुपर्ने विधान छ । वि. सं. १८२२ मा गोरखालीको डर भएको हुँदा पानी मात्र सुटुक्क ल्याई पूजा विधान त्यहाँ नगरी मछिन्द्रबहालमै गरेको घटना त्यस शान्ति- सफुमा टिपिएको छ । यसबाट त्यसताका विष्णुमतीपारि स्वयम्भूको आसपाससम्म गोरखाली- हरूको प्रभाव जमिसकेको देखिन्छ । काठमाडौं राजधानीभित्र पस्नुभन्दा १४ दिनअगाडि पृथ्वी- नारायण शाह बालाजु भेगमा आई बसेका थिए । यसरी आधा घण्टाको बाटो पनि फरक नभएको ठाउँसम्म शत्रु आइबसेका छन् भन्ने थाहा पाए तापनि शहरी किल्ला मजबूत हुनाले जयप्रकाश आदि मल्ल राजाहरू त्यति साह्रो हडबडाएका थिएनन् । बालाजु, विष्णुमती, शोभाभगवतीसम्म वर्षौंअघिदेखि पसिसकेका गोरखाली सैन्यलाई शहरी किल्लाको मजबूतीले गर्दा नै काठमाडौं राज्यको राजधानीभित्र पस्न गाह्रो भएको थियो[3] ।

पृथ्वीनारायण शाहले उपत्यका जितेको वर्णनसँग सम्बद्ध पृथ्वीन्द्रवर्णोदय, कवितानिक- षोपल आदि ग्रन्थबाट पनि उपत्यकाका तीनै शहर गढकिल्लाको रूपमा निर्माण गरिएका थिए भन्ने कुरा बुझ्न मद्दत मिल्छ । ती ग्रन्थमा लेखिएको वर्णनअनुसार पाटन, भक्तपुर जस्तै काठमाडौं शहर पनि एउटा बलियो गढ थियो भन्ने बुझिन्छ । शहरको चारैतिर पर्खाल थिए । शहरभित्र पस्न ठाउँ ठाउँमा ठूलठूला खापा जडेका ढोका बनाइएका थिए तापनि ती ढोका टम्म लाइएका थिए । यसैले कहीं बञ्चरोले खापा फोडेर, कहीं मुङ्ग्राले पर्खाल भत्काएर, कतै घरमा आगो

---

१. धनवज्र वज्राचार्य, "मल्लकालमा देशरक्षाको व्यवस्था र त्यसप्रति प्रजाको कर्त्तव्य" पूर्णिमा (वि.सं. २०२१ श्रावण) १ वर्ष २ अंक २३–२४ पृ.

२. सोही २६–२८ पृ.

३. सोही २०–२१ पृ.

लगाएर गोरखाली फौज शहरभित्र पसे भन्ने भावको कुरा त्यहाँ परेको छ[1] ।

भक्तपुर, पाटन, काठमाडौं यी तीन ठूला शहरबाहेक ती तीन राज्यअन्तर्गत अनेक सान-साना गाउँ थिए। यी साना गाउँहरू पनि प्रायः एक किसिमका गढकै रूपमा बनाइएका हुन्थे। ती सान-साना गढरूपका गाउँहरू कब्जा नगरी राजधानीमा आक्रमण गर्नु संभव थिएन। नाला, कीर्तिपुर आदि गाउँका वरिपरि गढका चिह्न अझै भेटिन्छन् ।

देशमा शान्ति रहेको समयमा गढ किल्लाका द्वार खुला गरिएका हुन्थे तापनि कतैबाट आक्रमण हुने डर भएमा ती द्वार तुरुन्त बन्द गरिने हुनाले एउटा राजधानीबाट अर्को राजधानीमा ओहोरो दोहोरो गर्नु गाह्रो थियो । यसरी आकस्मिक आक्रमणदेखि बच्न मल्ल राजाहरूले पूरापूर बन्दोवस्त गरेका थिए।

नेपाल उपत्यकाका तीनै मल्ल दरवार गढ किल्लाको रूपमा बनाइएका यिनै शहरको मध्य भागनिर निर्माण गरिएका छन्। स्वास्थ्यको दृष्टिले विचार गर्ने हो भने सफा हावा पानी भएको शहरबाहिरको ठाउँमा राजदरवार बनाउनु उचित थियो । परन्तु बाहिर बस्नु निकै खतराको कुरा हुनाले राजा प्रजा सबैजसा शहरी किल्लाभन्दा बाहिर घर बनाएर बस्नु उचित ठान्दैनथे। यसैले शहरभित्र घना बस्ती बन्नाले विफर आदि सरुवा रोगको प्रकोप बराबर भइरहन्थ्यो[2] । राजा र राजपरिवारका अरू सदस्यहरू पनि ती सरुवा रोगको आक्रमणदेखि बच्न सक्दैनथे। ऐतिहासिक सामग्रीहरूमा अनेकन् ठाउँमा यस्ता घटनाको उल्लेख आउँछन्[3] ।

---

१. नयराज पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ४४६, ४८४ पृ.

२. रेग्मी. "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट ५ पृ., "सं. ७९९ श्रावणशुक्ल ।। द्वादशी, शुक्रवार कुन्हु, प्याफलछेस श्रीरणजीतमल्लीकुह्मरया ह्माच मोक दिन ।।... तवकछिन दायाव शिक जुरो" (ठ्यासफु)
सोही, ६ पृ. "सम्वत् ७९९ भाद्रपदशुक्ल ।। चतुर्थी प्र पंचमी... मोचा तवकछिन दायाव फाछिन सिङाव, थ्वगु थायसं महावलि वियका जुरो ।।" (ठ्यासफु)
सोही, १२८ पृ.; "संवत् ८३६ चैत्रनिसें, यदेशस कतकसित, महामारी विज्याङाव, थ्वनंलि, आषाढ, श्रावण, ह्निन ह्मं १०० शतछि शतछि नीयह्म १२० त्वं सितधाल यंस।। थ्वनंलि यलस, आषाढंनिसें छेखालिसे सकभेतं ङनक सिक ।। आश्विनकार्तिकनं, ह्निन शतछिव च्याह्म १०८ जिह्म ११० धाले सिक ।। ... थ्व उपद्रव महामारीया मनुष्य सियन ह्ला सकलया छेस, छुं सिक, घा सिक, चोलस, फसि, मेस, सा, सल किसि अनेक २ सिक, थ्वनलि छेषापर्ति मनुष्य सिक ..." (ठ्यासफु)

३. शंकरमान राजवंशी, "ऐतिहासिक–घटनावली" (काठमाडौं, वीरपुस्तकालय, वि.सं. २०२० कार्तिक) ५ पृ.; "सं. ७९३ मार्गशिर चतुर्थी बृहस्पतिवार थ्व कुन्हु खपोया श्रीश्री-जगत्प्रकाशमल्ल जुजु मोक, परङन थङाव यात दु, मिविकह्मं ९ दु जुरो ।। जन्म दं ३५ तवकै

**शहरभित्र बस्नु स्वास्थ्यको दृष्टिले फायदा छैन भन्ने कुरा उनीहरूलाई थाहा थियो । बिफर फैलिंदा शहरी घना बस्तीमा बस्ने मान्छेहरूलाई रोगले सताएको र शहरबाहिर टाढाटाढा छुट्टाछुट्टै घर बनाएर बस्नेहरूलाई बिफर आदि रोगले नभेट्टाएको उनीहरूले अनुभव गरेका थिए । परन्तु वस्तु निर्माण गर्दा स्वास्थ्यभन्दा सुरक्षामा उनीहरूको विशेष ध्यान गएको थियो । यसैले साधारण भवनमा जस्तै दरवार निर्माण गर्दा पनि सानसाना झ्याल ढोका प्रयोग गरिएका पाइन्छन् । घाम नआउने, हावाको सञ्चार राम्रो नहुने ती झ्याल ढोका स्वास्थ्यको दृष्टिले काम नलाग्ने खालका छन्; तर सुरक्षाको दृष्टिले निकै उपयोगी देखिन्छन् ।**

**प्राचीन वास्तुशास्त्रसम्बन्धी ग्रन्थमा शहरमात्र होइन राजदरवारलाई पनि गढकिल्लाको रूपमा बनाउनु भनी लेखिएको छ[1] । वास्तवमा हाम्रा पुराना दरवार पनि एक प्रकारको किल्लाको रूपमा बनेका हुन्थे । वास्तुशास्त्रले बताए जस्तै खाई र ढिस्कोको बन्दोवस्त दरवारको वरिपरि गरिएको देखिंदैन तापनि आक्रमणकारीहरू दरवारभित्र झट्ट पस्न नसक्ने उपायचाहिं त्यहाँ गरिएका हुन्थे । परिआएको खण्डमा दरवारको हरेक चोकले बलियो किल्लाको रूप लिन सक्थ्यो।**

**विशेष सुरक्षाको बन्दोवस्त गरी चारबुर्जे किल्लाको रूपमा बनाइएको चोकलाई चौक्वाथ वा चौकोट भन्ने चलन थियो । सामरिक दृष्टिले महत्त्वपूर्ण हुनाले हरेक मल्ल दरवारमा त्यस्ता चौकोट बनेका हुन्थे । पाटन राजदरवारमा मूलचोकसँगै उत्तरपट्टि रहेको चोक चौक्वाथ वा चौकोट भन्ने नामले प्रसिद्ध थियो[2] । काठमाडौंको हनूमान्ढोका दरवारमा त दुइवटा चौकोट**

---

लुयाव पाक जुयाओ अभाक जुव जुरो ।।" (ठ्यासफु)

रेग्मी, "मेडियाभल् नेपाल" ३ परिशिष्ट ११२ पृ. "सं. ८२६ ... थ्व दनं आश्विणी कृष्ण ।। षष्ठी प्र. सप्तमी ।। बुधवार ।। कुन्हु वाचानलि ।। स एवे श्रीलोकप्रकाशमल्ल तवकछिन दायाव मृत्यु जुव जुरो ।।" (ठ्यासफु)

पाटनमा लेखिएको हालै पाइएको ठ्यासफुमा यस्तो लेखिएको छ–"थगु दंस छामनी चोपिं जमोदार रु विस्तयकाय प्रमुखन ह्म १० छथास छन्हुन सित, थकोओ रोग, सं. ९५१ ज्येष्ठवदि ५ रोर्छ ह्म २ सति ओन ।। हनुमानढोकानं सुनं दुका पिका मयाक रोगया भयन ।। श्रीमहाराजा श्रीराजेन्द्रविक्रम साह जनरल काजी भीमसेनं सवारी मजुर, पिहानं मवर शुभ ।।"

१. कौटलीय अर्थशास्त्र १।१०।१, "वास्तुकप्रशस्ते प्रदेशे सप्राकारपरिखाद्वारमनेककक्षा–परिगतमन्तपुरं कारयेत् ।।"
शुक्ल, "हिन्दु साइन्स अफ् आर्किटेक्चर्" परिशिष्ट १७८ पृ.; "भूपहर्म्यं प्रकर्तव्यं तल्लक्षणमनोहरम् । गभीरपरिखोपेतं द्वारोपद्वारशोभितम् ।।"

२. धनवज्र वज्राचार्य, "चौकोट दरवार" पूर्णिमा (वि. सं. २०२१ कार्तिक) १ वर्ष ३ अंक ४६–५१ पृ.

**बनेका थिए । तीनमा एउटा मोहनचौक्वाथ भन्ने नामले प्रख्यात थियो[1] , दोस्रोचाहिं साधारण-तया चौक्वाथ मात्र भनिन्थ्यो[2] । वर्तमान हनूमान्ढोकामा यसको अस्तित्त्व छैन तापनि ऐतिहासिक सामग्रीमा यसको उल्लेख आएको छ । पृथ्वीनारायण शाहको नुवाकोट दरवारलाई त्यहाँ रहेको अभिलेखमा 'दुर्ग' भन्ने संज्ञा दिइएको छ[3] । यसै गरी काठमाडौंको वसन्तपुर दरवारलाई त्रिरत्नसौन्दर्यगाथामा कोत भनी लेखिएको छ[4] । यताबाट सांग्रामिक सुरक्षाको लागि राजदरबारहरू किल्लाको रूपमा बनाउने चलन थियो भन्ने कुरो थाहा पाइन्छ ।**

**वि. सं. १८२६ मा पृथ्वीनारायण शाहले भक्तपुरमा हमला गर्दा शहरी किल्ला सजिलैसँग फोडेर भित्र पस्ने गोरखाली सैन्यले भक्तपुर दरवारको किल्ला फोड्न तीन दिनसम्म कोशिश गर्नुपरेको थियो[5] । गोरखाली फौजले दरवारभित्र पसी दपेट्दै ल्याउँदा हिटीचोकबाट मूलचोक, मूलचोकबाट जलधुनिचोक, त्यहाँबाट अन्त्यमा चौकोट आई भक्तपुरका राजा बस्न गएको वर्णन भाषावंशावलीमा गरिएको छ[6] । यसरी दरवारभित्र पसिसकेर पनि सबै चोकमा एकै पटक अधिकार जमाउन नसकेको यस घटनाबाट दरवारी किल्लाको बारे केही कुरा बुझ्न मद्दत पाइएको छ ।**

**जङ्गबहादुरको समयमा नेपालमा आएका प्रसिद्ध बेलायती डाक्टर एच्. आम्ब्रोज ओल्डफील्डले पनि आफ्नो ग्रन्थ** स्केचेज् फ्रम् नेपाल **मा दरवारी किल्लाको बयान गरेका छन् । उनको सो वर्णनअनुसार एक चोकबाट अर्को चोकमा जान चोककै एक कुनामा एउटा सानो ढोका बनाइएको हुन्छ । केही गडबडी भएको खण्डमा ती ढोका बन्द गरिन्छन् र दरवारमा बस्ने मान्छेहरू सुरक्षापूर्वक भवनको विभिन्न भागमा बस्छन् । यसरी आक्रमणकारीहरू प्रशस्तै भए पनि राम्रो बचावट गर्न सकिन्छ भन्ने भावको कुरा त्यहाँ परेको छ[7] । मल्ल राजदरवारहरूमा यस किसिमको रचना**

---

१. काठमाडौंमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफुमा यसको उल्लेख पाइएको छ :– "सम्वत् ७४४ ज्येष्ठकृष्ण तृतीया कुन्हु थकुनिजु अभाग जुव दिन जुरो, परङस थंङ, थनं न्हयुचास मोहन चवुक्वाथस देङन चोङ पाराव घार जुव ,.. जुजु मोतकें तङ, थकुंजुपनि वासर नकाव मोतकू."

२. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट ३५ पृ.; "सं. ८१० भाद्रपदकृष्ण : ।। प्रतिपदा अंगारवार चौक्वाठस पाखा हाव ।। (ठ्यासफु)

३. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३९१ पृ.

४. धनवज्र वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा (पं. सुन्दरानन्दविरचित)" (काठमाडौं नेपाल–सांस्कृतिक–परिषद्, वि. सं. २०१९ पौष ) १३६ पृ.

५. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" ११६ पृ.

६. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ८८९–८९१ पृ.

७. एच्. आम्बोज् ओल्डफील्ड, "स्केचेज् फ्रम् नेपाल" (डिल्ली, कस्मो पब्लिकेशनज्, फेरि छापिएको वि. सं. २०३१ मा) ९६–९७ पृ.; "The darbars a rususally of

अझै पनि देख्न सकिन्छ। एउटा चाखलाग्दो कुरो के छ भने उक्त चोकमा जस्तै मल्ल दरबारका कोठाहरूमा पनि आवतजावत गर्नालाई भिन्नै बाटो प्रायः छुट्याइएको हुँदैन। एउटा कोठाबाट अर्को कोठामा जान कोठाकै पृष्ठभागमा ढोका बनाइएका हुन्छन्। यसरी हरेक कोठामा दुइ ढोका हुन्छन्। भित्री कोठामा जानलाई बाहिरी कोठा भएर जानुपर्छ। यसै गरी त्यसभन्दा अझ भित्रको कोठामा जान तो दुबै कोठामा नकुल्चिकन जाने बाटो हुँदैन। यस्तो रचना सुरक्षाकै दृष्टिले गरिएको हुनुपर्छ।

उपत्यकाका तीनै मल्ल दरबारमा निकै समानता पाइन्छन्। मूलचोक, तलेजुको मन्दिर, भण्डारखाल इत्यादि तीनै मल्लदरबारमा अभिन्न अंगका रूपमा बनेका छन्। यीबाहेक सालिक-सहितका विशाल स्तम्भ, ठूलठूला घण्टा, सुनधारा आदि अनेक कृति प्रत्येक दरबारमा समान रूपमा देखापर्छन् तथा तीनै दरबारको निर्माणशैली एकै प्रकारको छ। वास्तुकलासम्बन्धी ग्रन्थमा वर्णित दरबार बनाउने योजनासँग मल्ल राजदरबारको निर्माणशैली आंशिक रूपमा मिल्ने हुनाले यो समानता केही मात्रामा प्राचीन परम्परा वा वास्तुकलासम्बन्धी विचारधारामा आधारित देखिन्छ। राजदरबार बनाउँदा किल्लाको रूपमा बनाउनुपर्छ भन्ने वास्तुकलासम्बन्धी विचारको अनुसरण मल्ल दरबारहरूले गरेका थिए भन्ने कुराको चर्चा माथि गरिसकेका छौं। यसै गरी भण्डारखाल बनाउने कुराको उल्लेख पनि प्राचीन वास्तुशास्त्रमा पाइन्छ। दुइ किसिमका राजकोय कोशमध्ये भवनभित्र रहने एक थरी कोश र विधिपूर्वक भुईं खनी गुप्तरूपले बनाइएको दोस्रो किसिमको कोशको वर्णन त्यहाँ दिइएका छन्। भण्डारखालले चाहिं भूमिभित्र बनाइने कोशको काम गर्थ्यो। यस विषयमा विस्तारपूर्वक पछि लेख्नेछौं। यसरी किल्लारूपको दरबार

---

an irregular quadrangular form, one side towards the rear being generally left open, and communicating with the gardens stables etc.

The outer facade of one or more of the other sides is open to the streets. The inner quadrangle is always private, and is usually divided into a number of smaller courts of various sizes with buildings on all four sides. These inner courts communicate one with another by small doorways only, which can easily be secured, so that, in case of danger or disturbance, by closing them the inmates of the palace may shut themselves into the differnt parts of the building, and defend themselves with eage against a large number of assailants. These inner courts are appropriated to different purposes; some contain temples for the private use of the inmates of the palace, some are inhabited by the royal ladies. Others are employed for public receptions and spectacles, while one or more are often used as stables for elephants."

बनाउने चलन र भण्डारखाललाई दरवारको आवश्यक अंग मान्ने प्रथाबाट दरवार बनाउने प्राचीन परम्परा मल्लकालमा पूर्णतया बिर्सिसकेको थिएन भन्ने कुरा बुझिन्छ ।

मल्ल दरवारमा देखिएका समानताको प्रमुख कारण मल्ल राजाहरूको कलाकृति निर्माणमा लामो कालसम्म चलेको प्रतिद्वन्द्विता पनि थियो । उदाहरणार्थ मल्ल दरवारको प्रत्येक मूलचोकमा तलेजुमन्दिरको मूलद्वारको दायाँ बायाँ रहेका गङ्गा जमुनाका भव्य ढलौटे मूर्ति प्रस्तुत गर्नु उचित होला । सबै मूलचोकमा गङ्गा जमुनाका मूर्ति देखिएकाले मूलचोकमा त्यस्ता मूर्ति बनाउनै पर्ने कुनै विधान थियो कि त भन्ने हाम्रो मनमा पर्नु स्वाभाविक छ । परन्तु त्यस्तो कुनै विधानमा आधारित कुरो यो थिएन । वि. सं. १७६५ सम्म पनि काठमाडौंको मूलचोकमा गङ्गा जमुनाको मूर्ति बनेका थिएनन्[1] । यद्यपि सो मूलचोक यसभन्दा धेरै अघि बनिसकेको थियो । भक्तपुरको मूलचोकमा राजा नरेशमल्लले वि. सं. १६९८ मा मात्र गङ्गा जमुनाका मूर्ति बनाई स्थापना गरेका हुन्[2] । त्यसभन्दा पहिले त्यस मूलचोकमा ती मूर्ति थिएनन् । पाटन मूलचोकका गङ्गा जमुनाका मूर्ति पनि राजा श्रीनिवासमल्लले वि. सं. १७२३ मा मूलचोक बनाएकै समयमा होइन कि त्यसभन्दा केही पछिमात्र स्थापना गरिएका थिए[3] । यसरी अरू दुइ राज्यका मूलचोकमा गङ्गाजमुनाका मूर्ति स्थापना भएको देखी रानी भुवनलक्ष्मीले आफ्नो दरवारको मूलचोकमा पनि गङ्गाजमुनाको मूर्ति बनाउने आवश्यक संझिन् । फलस्वरूप काठमाडौंको मूलचोकमा पनि ती मूर्ति बने । यस प्रतिद्वन्द्विताको फलस्वरूप गङ्गाजमुनाका ढलौटे मूर्ति मूलचोकको अभिन्न अंग जस्तै बन्न गयो । यसो भन्नाको मतलब गङ्गाजमुनाको मूर्ति बनाउने चलन अघि थिएन भन्ने होइन । वास्तवमा देवगृहको द्वारको दायाँ बायाँ गङ्गाजमुनाको मूर्ति बनाउने प्राचीन परम्परा थियो । नेपालकै प्राचीनतम मन्दिरमा पनि यो कुरो देख्न पाइन्छ । पशुपतिनाथको पश्चिमोत्तर कुनामा रहेको लिच्छविकालको अहिलेसम्म बचेको एक मात्र मन्दिरको द्वारमा दायाँ बायाँ गङ्गाजमुनाका पाषाणमूर्ति देखिएका छन् । यताबाट देवगृहको द्वारमा गङ्गा जमुनाका मूर्ति राख्ने प्राचीन प्रथाको संझना हुन्छ । यही प्राचीन प्रथाको आधारमा एकजना मल्ल राजालाई मूलचोकमा रहेको तलेजुमन्दिरको दायाँ बायाँ गङ्गाजमुनाको मूर्ति राख्ने विचार सुझ्यो र उनले त्यस विचारलाई कार्यरूपमा परिणत गरे । यो कुरो अरू मल्ल राजाहरूलाई पनि राम्रो लाग्यो । यसैले उनीहरूले त्यसको अनुसरण गरे । यिनै कारणले गर्दा उपत्यकाका मल्लदरवारमा सुनधारा, सालिकसहित पाषाणस्तम्भ आदि अनेकन् कलाकृति समान रूपले बने ।

मल्लदरवारका चोक र उपत्यकामा बनेका विभिन्न प्राचीन विहारहरूको निर्माणशैली एकै

१. परिशिष्ट, ५१ संख्याको अभिलेख

२. तेवारी र अरू, "अभिलेख–संग्रह" ७ भाग २० पृ.

३. पाटनदरवारमा मूलचोक बनाएर राखिएको श्रीनिवासमल्लको ताम्रपत्रमा गङ्गा जमुनाको मूर्ति स्थापना गरेको चर्चा परेको छैन । यस कारण ती मूर्ति त्यस वेला बनेका थिएनन् भन्ने देखिन्छ । तेवारी र अरू, "अभिलेख–संग्रह" ६ भाग ११–१२ पृ. ।

किसिमको छ। त्यही चारपाटे चोक, त्यही अग्लापेटी, त्यही सांगुरा ढोका, तिनै साना-साना पाचुखा झ्याल, तीनै कलापूर्ण सँझ्याल विहार र दरवारी चोकमा समानरूपमा देखापर्छन्। सामरिक महत्त्वलाई ध्यानमा राखी बनाइएको दरवार र धार्मिक स्थलको रूपमा बनाइएका विहारसंगको यो सामञ्जस्य झट्ट हेर्दा आश्चर्यलाग्दो छ। तर अझ आश्चर्यलाग्दो कुरो के छ भने धार्मिक आवश्यकता पूर्ति गर्न बनाइएका ती विहार पनि किल्लाको रूपमा बनाइएका थिए। उदाहरणार्थ काठमाडौंको इटुम्बहाललाई प्रस्तुत गर्न सकिन्छ। गोपाल राजवंशावलीमा यस बहाललाई याटुम्बहाल क्वाठ भनिएको छ। त्यहाँ आक्रमण गरी सो विहारको किल्ला फोडेको कुरो त्यसमा लेखिएको छ[1]। इटुम्बहाल र त्यसको सँगै टाँसिएर बनेका अरू विहारहरूको निर्माणशैली समग्र रूपमा नियालेर हेर्ने हो भने दरवारको निर्माणशैलीसंग अझै पनि मिल्दोजुल्दो देखिन्छ। दरवारमा जस्तै एक विहारबाट अर्को विहारमा जान विहारकै एक कुनामा बनाइएका साँगुरो बाटो त्यहाँ पनि देखिन्छन्। इटुम्बहालमा रहेको एउटा पटचित्रमा राजा मुकुन्दसेनले काठमाडौंमा हमला गर्दा यस विहारमा किल्ला जमाएको कुरा चित्र तथा लेखद्वारा व्यक्त गरिएको छ[2]। यताबाट पनि यस विहारको सामरिक महत्त्वबारे प्रकाश पर्छ। इटुम्बहाल एउटा समृद्ध विहार थियो भन्ने जनश्रुति छ। उक्त पटचित्रमा पनि यस कुराको चर्चा परेको छ। वास्तुकलाको निर्माण आवश्यकता-अनुरूप हुने हुनाले आकस्मिक वाह्य आक्रमण बारम्बार भइरहने समयमा विहारको सञ्चित धनराशि जोगाउन यस किसिमको निर्माणपद्धति सकारिएको हुनुपर्छ। यसैले किल्लाको रूपमा निर्माण गरिएको दरवारी चोक र विहारको निर्माणशैलीमा एकरूपता देखिएको अनुमान हुन्छ।

## स्वकम्बु

मल्लकालमा हनूमान्ढोकाको पश्चिमपट्टिको प्राङ्गण (जहाँ आजभोलि माजुदेवल, जगन्नाथदेवल, कृष्णमन्दिर, कालभैरव आदि रहेका छन्) स्वकम्बु भन्ने नामले प्रसिद्ध थियो। तात्कालिक ऐतिहासिक सामग्रीहरूको अध्ययनबाट यो कुरो बुझ्न सकिन्छ।

काठमाडौंमा लेखिएको हालै पाइएको एउटा अप्रकाशित ठ्यासफुमा वि. सं. १६८६ देखि राजा लक्ष्मीनरसिंहले स्वकम्बुमा सेतो मछिन्द्रनाथको रथजात्रा गर्ने चलन थपेको कुरो

---

१. गोपालराजवंशावली ३३ ख पत्र, "सम्वत् ३६१ जेष्ठ शुक्ल अष्टमी यम्बु याटुम्बहारक्वाठ चाल्यका यह्नं कीर्तिपालभारोस"

२. त्यसमा यस्तो लेखिएको छ– "थन ह्यु कनसेन राजाओ ... सकरप्रजापनिस सकल्यं रस्कर ओन ... थन थास थास पतिं मी तयाओल, थन निपारया प्रजापनि सकल्यं हयहाया थास विस्यिओन,...थन मगलया राजा ह्यु कन सेनया सकल मुनाओ इतुंवाहारस स्वर्णया पउ षनाओ थतिन थास वास याय् धक थ्वधानह्रा मस्युंकुस्य वधा वासयात।"

लेखिएको छ[1] । उक्त रथजात्रासम्बन्धी रीतिथितिको आधारमा विचार गरी हेर्दा स्वकम्बुको सम्बन्धमा केही कुरो बुझ्न यसले मद्दत दिएको छ ।

सेतो मछिन्द्रनाथको रथ तान्ने बाटो तीन भागमा विभक्त गरिएको छ। तिनमा पहिलो बाटो जमलदेखि असनसम्म, दोस्रो बाटो असनदेखि हनूमान्ढोकासम्म, तेस्रो बाटो हनूमान्ढोकादेखि लगनसम्म पर्दछ। लगन पुगेपछि त्यस वर्षको जात्रा टुङ्गिन्छ। चैत्र शुक्ल अष्टमीको दिनदेखि रथ जात्रा शुरू हुन्छ। रथजात्रा शुरू भएदेखि दिनका दिन रथ तानिन्छन्। तर रथ अग्लो गरी बनाइने हुनाले बाटोमा पर्ने रूख तथा छानामा रथ अल्झन जान्छ र एउटा निर्दिष्ट ठाउँबाट अर्को निर्दिष्ट ठाउँसम्म रथ पुर्‍याउन कहिले कहीं दुइ तीन दिनसम्म पनि लाग्ने हुन्छ। यस कारण रथजात्रा प्रारम्भ गर्ने दिन निश्चित हुन्छ तापनि असनबाट हनूमान्ढोका पुर्‍याउने अथवा हनूमान्ढोकाबाट लगन पुर्‍याउने रथजात्राका दिन निश्चित हुँदैनन् ।

माथि उल्लिखित ठ्यासफुअनुसार लक्ष्मीनरसिंहले थपेको सेतो मछिन्द्रनाथको रथजात्रा चैत्र शुक्ल दशमीको दिन तानिएको थियो। यस कारण चैत्र शुक्ल अष्टमीको दिन हुने जमलबाट असन तान्ने रथजात्रा यो होइन भन्ने स्पष्ट छ। लगन ज्याबहालतिर सेतो मछेन्द्रनाथको रथ तान्ने जात्रा लक्ष्मीनरसिंहले रथजात्रा थप्नुभन्दा अघिदेखि नै थियो। यो कुरो सोही ठ्यासफुको वर्णनबाट बुझिन्छ। त्यहाँ वि. सं. १६८३ मा सेतो मछेन्द्रनाथको रथ लगनतिर तानेर लैजांदा ज्याबहालसम्म पुग्दा ढलेको कुरो लेखिएको छ[2] । यो घटना लक्ष्मीनरसिंहले स्वकम्बुमा रथजात्रा थप्नुभन्दा तीन वर्षअघिको कुरो हुनाले उनले थपेको रथजात्रा यो हुन सक्दैन। यस कारण असनदेखि हनूमान्ढोकासम्मको सेतो मछेन्द्रको रथजात्रा नै लक्ष्मीनरसिंहले थपेको रथजात्रा हो भन्ने देखिन आएको छ। यसभन्दा अघि जमलदेखि असनसम्म र असनदेखि लगनसम्म गरी यस रथजात्राको बाटो दुइ भागमा मात्र विभक्त थियो भन्ने अनुमान हुन्छ। असनदेखि लगनसम्मको बाटो निकै लामो हुनाले राजा लक्ष्मीनरसिंहले आफ्नो दरवार हनूमान्ढोकाअगाडि रथ रोक्ने प्रथा चलाएको बुझिन्छ। यताबाट हनूमान्ढोकाको प्राङ्गणलाई स्वकम्बु भनिन्थ्यो भन्ने कुरो प्रकारान्तरले खुल्न आएको छ।

अर्को एउटा ठ्यासफुमा वि. सं. १७३६ भाद्रमा शहरमा फैलिएको बिफरको महामारी हटोस् भन्ने ध्येयले स्वकम्बुमा महावलि दिएको कुरो लेखिएको छ। महाबलि दिइएका टोलका

---

१. त्यसमा यस्तो लेखिएको छ –
"सम्वत् ७५० चैत्रशुद्धि १० थ्व कुन्हुं सोकंबुस जमलयात दएका, चाक्रमत, महादीप, महाराजा श्री २ लक्ष्मीनरसिंहमल्ल प्रभुष्यन, थ्वतेया क्रया कर्त्ता याको सिकोमुगुडी श्री मणिरत्न ।।" (ठ्यासफु)

२. "सम्वत् ७४७ चगुला थ्वक एकादशि कुन्हु जमलदेवया लगनयात कुन्हु, ज्याथवाहारस, रथ भेत वुव दिन जुरो ।। थन थाकुलया आदेशन गुरुभराड पनि बोङाव, समधारण, रथन पिकायाव ज्याथवाहारया फलेस तया." (ठ्यासफु )

नाउँ क्रमशः लेख्दै जांदा थसमंदु (बांगेमुढा), वंकरो (इन्द्रचोक), सोकनबु (स्वकम्बु), मंदु (मरु) तथा लगनको उल्लेख त्यहाँ गरिएको छ[1] । देशबलि दिंदा केही दशकअगाडिसम्म पनि हनूमान्ढोकाको प्राङ्गणमा समेत गरी उक्त सबै ठाउँमा वेशबलि दिने चलन थियो[2] । यो देख्ने मान्छे काठमाडौंमा छन् ।

वि. सं. १७६८ वैशाख शुक्ल पञ्चमीको दिन रानी भुवनलक्ष्मीले मरुसत्तल नगीचैको प्रदेशमा (कान्तिपुरे काष्ठमण्डपे) शिवलिङ्ग स्थापना गरी देवल बनाउन लगाएकी थिइन् । सो देवल बनाई राखिएको शिलापत्रको नक्कल सारिएको एउटा पुरानो कागतबाट यो कुरो बुझिएको छ[3] । यसको चर्चा एउटा ठ्यासफुमा पनि परेको छ। सोही तिथिमितिमा सोही व्यक्तिले स्वकम्बु भन्ने ठाउँमा शिवलिङ्गको लागि मन्दिर बनाइदिएको कुरो त्यहाँ लेखिएको छ[4] । यताबाट स्वकम्बु मरुसत्तलकै आसपासमा पर्दथ्यो भन्ने बुझिन्छ ।

वास्तवमा भुवनलक्ष्मीले बनाएको सो मन्दिर कागेश्वरको मन्दिर थियो । मखनटोलमा बस्ने मोहिनीविनोद शर्माको संग्रहमा रहेको वंशावलीमा कागेश्वर मन्दिरको पुरानो नाम भुवनेश्वर भनी लेखिएको छ[5] । त्यसका पुजारीको भनाइअनुसार यस मन्दिरको वास्तविक

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट ६ पृ.; "सम्वत् ७६६ भाद्रपद शुक्ल ।। चतुर्थी प्र पंचमी, स्वातिनक्षेत्र शनैश्चरवार कुन्हु देशछिस्कें ह्लायाव थसमंदुस, वंकरोस, सोकनवुस, मंदुस, लगणस, थ्व ङा थायसं वलि विया" ।।

२. वि.सं. १८५८ मा देशबलि दिंदा हनूमान्ढोकाको प्राङ्गणमा बलि दिइएको थियो। असन तछेबहालमा बस्ने देवहर्ष वज्राचार्यसँग रहेको टिपोटे कागतमा यस्तो लेखिएको छ–"सम्वत् ९२१ वैशाष शुक्ल अंगवार थ्वकुन्हु श्री ३ गीर्वाणयुद्धमहाराजान देशस ३२ त्वालस वलि वियकल असं थहिति ओंगल लायकु मदु लगं ... "

३. परिशिष्ट ५७ संख्याको अभिलेख

४. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३३ पृ.; "सं. ८३१ चैत्रकृष्ण ।। त्रयोदशी पूर्व्व भद्र प्र. उत्तुभद्रनक्षत्र बुधवार ।। थ्वकुन्हु कोत्याहुति यज्ञया अग्निस्थापन ।। वैशाख शुक्ल ।। चतुर्थी प्र पंचमी, मृगशिर नक्षत्र बुधवार थ्वकुन्हु गंजुलि छार ।। श्री ३ पशुपति चंगुनारायजु, वज्रयोगिन, सेगुदेव तरवया भिमसेन, सकेवश बोको देव सकल्यं बिज्यातकु ।। ज्येष्ठ शुक्ल ।। पूर्ण्णमी ज्येष्ठ नक्षत्र सोमवार थ्वकुन्हु पूर्ण्णा यात ।। श्री ३ चतुर्मुख अष्टधातुया माहादेव, रोहोदेवल सोकनवुस । श्री २ भास्करमल्ल जुजु, श्री भुवनेलक्ष्मी माजुन ।। भैरवं गणेशं स्थापना यात ।"

५. "...भुवनलक्ष्मी महाराणीका नामले अष्ट धातु मिलाई भुवनेश्वर नाम राखि ...स्थापना गरि दि धेरै खेत् गुठि राखि नित्यार्चन गरायाका हुन् । यस महादेवलाई भाद्र शुदि ८ कायाष्टमीका दिन दरवारका मानिस दुनियाहरूस्मेत धेरै आई काकेश्वर भनि पूजा गर्न आउँछ. आजकल काकेश्वर भनि नाउँ प्रख्यात भयेको छ ।" (वंशावली)

नाम भुवनलक्ष्मीश्वर देवल हो। रानी भुवनलक्ष्मीले राखेको हुनाले यसको नाम भुवनलक्ष्मीश्वर भन्ने रहन गएको थियो। माथि उल्लिखित शिलापत्रको नक्कल सारिएको कागतमा पनि रानीले स्थापना गरेको धातुनिर्मित शिवलिङ्गलाई भुवनलक्ष्मीश्वर भनी लेखिएको छ। काकेश्वर मन्दिरमा रहेको शिवलिंग पनि धातुकै छ। मरुसत्तलनजीककैको प्रदेशमा योबाहेक धातुको अरू कुनै शिवलिङ्ग छैन। यसरी काकेश्वर देवल नै भुवनलक्ष्मीले स्वकम्बुमा स्थापना गरेको मन्दिर हो भन्ने देखिनाले त्यतातिरको प्रदेशलाई स्वकम्बु भनिन्थ्यो भन्ने देखिन्छ।

फेरि सोही ठ्यासफुमा वि. सं. १७७० आषाढमा राजा भास्करमल्ल र राजमाता भुवनलक्ष्मीले स्वयम्भूमा देवता स्थापना गरेको उपलक्ष्यमा देशका सबै देवदेवतालाई निमन्त्रणा गरी स्वकम्बुमा भेला गरी एक रात त्यहीँ राखी भोलिपल्ट सबै देवदेवतालाई विदा गरिपठाएको कुरो लेखिएको छ[1]। यसरी सबै देवदेवताहरूलाई निमन्त्रणा गरी भेला गर्ने काम प्रत्येक बाह्र वर्षमा अथवा अरू कुनै विशेष उपलक्ष्यमा आजभोलि पनि गरिन्छन्। यस रीतिलाई सम्यक् भन्ने चलन छ। मल्लकालिक ऐतिहासिक सामग्रीमा यसको चर्चा पाइन्छ[2]। वज्राचार्य, शाक्य आदि बौद्ध धर्मावलम्बी नेवारहरू यस विषयमा विशेष अभिरुचि राख्दछन्। सम्यक्मा देवताहरूलाई बोलाई भेला गर्दा हनूमान्ढोकाकै प्राङ्गणमा भेला गरिन्छन्। यस कारण राजा भास्करमल्ल र उनका आमाले स्वकम्बुमा सबै देवदेवतालाई भेला गरे भनी जुन लेखिएको छ, सो हनूमान्ढोकाकै प्राङ्गणलाई लक्ष्य गरी लेखिएको बुझिन्छ।

यस कुरालाई राष्ट्रिय अभिलेखालयमा रहेको स्वयम्भू चैत्य-प्रस्थापनवर्णन नामक हस्तलिखित ग्रन्थले अझ बढी प्रमाणित गरेको छ। त्यस ग्रन्थमा राजा भास्करमल्ल र राजमाता भुवनलक्ष्मीले स्वयम्भूदेवता स्थापना गरेको उपर्युक्त घटनाको वर्णन विस्तारपूर्वक गरिएको छ। तर त्यसमा देवदेवताहरू भेला गरेको ठाउँको उल्लेख गर्दा स्वकम्बु भन्नुको सट्टा राजदरबार (राजघर) भनी लेखिएको छ[3]। यिनै प्रमाणको आधारमा हनूमान्ढोका दरबारको

---

१. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३४ पृ.; "सं. ८३३ आषाढ शुद्धि। प्रतिपदा थ्वकुन्हु श्री ३ सेगुदेव पेह्मं थङाओ दयकाओ थ्वकुन्हु देअरोक सकरें विज्यातकाओ देश फुयकाओ जात्रा याङाओ स्वकंवुस चच्छि विज्यातकु थ्वयान सतिकुन्हु सेगुदेव सेगु विज्यातकाओ जात्रा याङाओ देवरोक सकरेंस्यनं सर विज्याक थ्वयान सतिकुन्हु स्थापना याक जुरो, श्री २ भास्करमल्ल महाराजा भुवनलक्ष्मी माजु थ्वपनि नेह्मं माचास्यन दयकाओ सेगुदेव हिरा दिन जुरो॥"

२. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" २७७ पृ.

३. "..खतस तस्यं देस जात्रा याङाओ नानावाद्य गित ह्नन्ये पंचताल, धिमचा, नार्यषि, काहार थ्वते थानाओ मंगल यास्यं देश जात्रा याङाओ राजघरस दूत यनाओ, श्रीराजास्यनं मान्ने भाव पूजाभाव याङाओ हस्यलि देश उयकाओ हस्यं सेगुस थतयनाओ र स्वजोलं तयाओ दुकास्यं सरंसोरास चोन देवपनि स्वचाक्र तुयकाओ तया॥ ... श्री ३ भाष्करमल्ल राजा भुवनरक्ष्मी माजुनं स्यगुया पिओखालसं तया देवह्मं ४ दयकेया क्रश पूजा यास्यं शिथ पूजा याङाओ वेपालियात लओह्लानाओ विया जुलो॥"

प्राङ्गण मल्लकालमा स्वकम्बु भन्ने नामले प्रसिद्ध थियो भन्ने थाहा पाइन्छ ।

## कुमारीचोक

गद्दीबैठकनजीकै पश्चिम-दक्षिण कुनामा कुमारीचोक रहेको छ । काठमाडौंका अन्तिम मल्ल राजा जयप्रकाशले यो चोक बनाउन लागेका हुन् भनी भाषावंशावलीमा लेखिएको छ । हाले पाइएको एउटा ठ्यासफु ले यो कुरो प्रमाणित गरेको छ । उक्त ठ्यासफुको वर्णनअनुसार वि. सं. १८१३ फागुनमा जग हाली सोही साल भाद्रसम्ममा संपूर्ण चोकको निर्माणकार्य सिद्धिएको थियो । यस उपलक्ष्यमा भाद्रशुक्ल दशमीको दिन राजा जयप्रकाशले स्वयम्भू, पशुपति आदि प्रसिद्ध देवताहरूलाई निमन्त्रणा पठाई आफैले स्वागत गरी हनूमान्ढोकामा ल्याएका थिए । बज्राचार्य-हरूको रीतिथितिअनुसार सबै पूजाविधि संपन्न गरिसकेपछि भाद्र शुक्ल एकादशीको दिन बज्रा-हरूलाई पंचविंशतिका पाठ गर्न लगाई उनले नयाँ बनेको कुमारीचोकमा कुमारीलाई ल्याई संकल्प गरी राखे । त्यस दिन देशका सारा कानफट्टा योगीहरूलाई बोलाई कुमारीचोकमुनि राखी भोज खुवाइएको थियो । त्यसको भोलिपल्ट द्वादशीको दिन स्वयम्भू, पशुपति आदि सबै निमन्त्रित देवदेवताहरूलाई आफ्-आफ्नो खटमा राखी धूमधामसँग जात्रा गरी फिर्ता पठाइयो । यसरी तीन रात चार दिनसम्म देशभर ठूलो उत्सव मनाइएको थियो[1] ।

---

१. काठमाडौं लायकुवहीमा बस्ने श्रीभोजमानपतिको संग्रहमा रहेको उक्त ठ्यासफुमा यस्तो लेखिएको छ– "सम्वत् ८७७ फाल्गुणकृष्ण द्वितीया सोमवार थ्वकुन्हु कुमारीमाजुयात छे दयेकेयात पाद स्थापना निक सोना। पूजाकरशपूजा, पूजाकर्म बज्राचार्य विमलप्रभानन्दया मराङाओ तोयुख्वारन यातका जुरो ।। ।। चैत्रशुक्ल तृतीया कुन्हुया रात्रिस भुजादेओ छेन पितकायाओ बाहारकुनछेस ह्लेयाव तया पूजा मधेसारिजु १ दयकं तुफि थु १ सा दुदु धार थसें याङा । श्रावणकृष्ण पञ्चमी थ्वकुन्हु चुका छाया पूजाहोम जोरन विधिथें याङा जुरो ।। ।। भाद्रओ शुक्ल द्वितीया कुन्हुया चास भुजादेओ न्हुरछेस स्थापना याङा पूजा पंचसार दयकं याङा महांगु बाहा ह्मं ५ बोङा जुरो ।। ।। थ्वनं सतिकुन्हु गजुरिदेश ङ्यकं र सोसें दुकासें दुशरकर्म याङा विधिथें स्नानकर्म करश दयकं गजुरियां छेयां दुशर कर्म थाङा जुरो ।। ।। भाद्रवशुक्ल चथाक वृहस्पतिवार थ्वकुन्हु छे प्रतिष्ठा गजुरी पु ३ छास्यें पताप छास्यं विधिथें प्रतिष्ठा याङा इन्द्रकरशं पूर्णकरशं श्री २ जुजुस्त विया एर खोप आदि मारकोस्त विया जुरो पूजाकर्म्म मारको विमलानंदन याङा उपाध्या तम्रोछें जयपतिदेव खओस गुणपति मखंबाहार रणपति आदि ह्मं १४ भाद्रवशुक्ल सप्तमि कुन्हु देवदववस्के निमन्त्रणा पूजा ओङा । दशमिकुन्हु सेगुदेव पशुपति इत्यादि देओदकों राजा श्री २ जयप्रकाशमल्लदेवन सिन्धजात्रा यासें र सोसें दुकाया जुरो ।। देवह्मं पुरुयात १ आसंषदिकुत १ क्र प्र. २ विसें चछि जात्रा याङं तया पूजा करशपूजा यासें बलिपान ६ विया जुरो ।। ।। थ्वनं सति एकादसि वृहस्पतिवार थ्वकुन्हु सेगुदेवया ह्लओने इन्द्रकरश दयकं जज्ञ थापनायासें पूजा याङा देशस दको गुवाहारं पंचविंशतिका पाठ यातका थ्वकुन्हु

कुमारीचोकको निर्माण उपत्यकामा बनेका बौद्ध विहारको शैलीमा गरिएको छ। यस चोकलाई कोही कोही कुमारीबहाल पनि भन्दछन्। यस चोकमा उचित आङ्गिक लक्षणले युक्त बालिकाको चयन गरी कुमारीदेवीको रूपमा सन्मानपूर्वक राख्ने चलन अद्यापि चलेर आएको छ। बालिकाको चयन बौद्ध धर्मावलम्बी नेवारहरूको परिवारबाट हुन्छ तापनि कुमारीलाई तलेजु-भवानीको अवतार मान्ने चलन छ। यसैले तलेजुका पुजारीहरू कुमारीलाई शैवमतअनुसार पूजा गर्छन्। नेपालमा धार्मिक समन्वयको एक उज्ज्वल झलक यसले प्रस्तुत गरेको छ।

कुमारीचोक पस्ने मूलढोकाको दायाँ बायाँ उत्तराभिमुख प्रस्तरका दुइ सिंह उभिएका छन्। करीब चार हात जति अग्ला ती दुइ आकृति प्रस्तरका टुक्राहरू जोडेर बनाइएका छन्। प्रायः विहार मन्दिरआदिको मूलढोकाको दायां बायाँ सिंहका मूर्ति द्वारपालको रूपमा राख्ने चलन प्राचीन कालदेखि यहाँ चलेर आएको छ। सिंहमूर्तिको दायाँ बायाँ दुवैतिर पेटी छन्। पेटीमाथि कुमारीको रथमा प्रयोग गरिने काठका मूढा राखिएका छन्।

मूलद्वारको माथि काठको सुन्दर तोरण बनेको छ। प्रायः मूलढोकाको माथि गरुडले नागलाई लिएर उडिरहेको दृश्य देखाइएको हुन्छ। गरुड पक्षीहरूको राजा मानिन्छ। नागराज-सँग उनको शत्रुता थियो भन्ने पौराणिक कथा हाम्रो यहाँ प्रसिद्ध छ। यही कुरा नेपालका धातु र प्रस्तर अथवा काठका तोरणमा विभिन्न रूपले देखाइएको हुन्छ। धेरैजसा तोरणमा नागराज-लाई आधा मनुष्य आधा सर्पको रूपमा चित्रण गरिएको हुन्छ। कुमारीचोक पस्ने यस मूलद्वारको तोरणमा पनि अर्द्ध मनुष्याकार नागदम्पतीको आकृति कुँदिएका छन्। तर गरुडको आकृति भने त्यहाँबाट लुप्त भइसकेको छ। तोरणको मध्य भागमा विहार अथवा मन्दिरभित्र रहेको मुख्य-देवता जुन संप्रदायका हुन् सोही सम्प्रदायको देवताको मूर्ति राख्ने चलन छ। कुमारीचोकको यस तोरणमा शाक्तसंप्रदायको प्रसिद्ध देवी महिषमर्दिनी भगवतीको मूर्ति अंकित छ। भगवतीले महिषको रूप लिएर आएको महिषासुर दैत्यलाई मारेको दृश्य त्यहाँ देखाइएको छ। कुमारी बौद्धसंप्रदायकी देवी भए पनि शाक्तसंप्रदायसँग पनि कुमारीको सम्बन्ध छ भन्ने कुरो यसले दर्शाएको छ।

मूलढोकाको खापामा मुण्डमाला, घण्ट र फूलबुट्टा कुँदिएका छन्। ढोकाको दायाँबायाँ

---

श्री ३ सद्यकुमारि राजकुर विज्याचकाव पूजा याङाव कुतुंवया पराथ दको वियाश्रो श्री २ जुजुन न्हुरछेंस ससें संकल्प याङ ताथु जुरो ॥ थ्व छेकोस स्वदेगरस दको कांफारा बोङाश्रो जुगिचक्र नकु जुरो। द्वादशि शुक्ल कुन्हु सेगु पशुपति आदिं देवदको सिन्ध्र जात्रा यासें श्री २ जुजुन ससें देश ङुयकं थव रथस रिहां विज्याचकु जुरो। देश्रोदकों स्वचा पेन्हु जात्रायासें विज्याचकु जुरो। देशप्रजा भोज वोङ वजिकुर १ राकुर ८ विसे भोज नकु जुरो॥ ॥ थ्वतिया क्रियाकर्मया वज्राचार्य श्रीविमलप्रभानन्दन याङा जुरो। पाठयाकोस्त ह्मं दक्षिणां दं ८ विश्रो जुरो ॥ (श्रीहेमराज शाक्यको सौजन्यबाट मैले यो उद्धरण पाएको हुँ, जसको लागि म उहाँप्रति कृतज्ञता प्रकट गर्दछु।)

लहरै दुवैतिर ग्राँखिझ्याल छन् । दायाँतिर चाहिं एउटा सानो ढोका पनि देखापर्दछ ।

बौद्धविहारको शैलीमा बनेको कुमारोचोकका चारै लङ कलापूर्ण झ्याल ढोकाले सिंगारिएका छन् । चारैतिर जम्मा तीन तला छन् । यसको पूर्वी लङको केही भाग पछि थपिएको देखिन्छ । यो कुरा चोकबाहिर सडकबाट हेर्दा थाहा पाइन्छ । सडकतिर फर्केको यस लङ्गमा बायाँतिर रहेका सबै किसिमका झ्याल दायाँतिर पनि बनेका छन् तापनि छेउको केही भाग बायाँ भागसँग सामञ्जस्य राख्दैन ।

सडकबाट देखिने कुमारीचोकको अग्रभाग विशेष रूपले अलंकृत छ । यसको दोस्रो तलामा बीचमा ठूलो ग्राँखिझ्याल छ । त्यसमाथि पनि महिषमर्दिनी भगवतीको मूर्ति अंकित तोरण छ । त्यसको दायाँ बायाँ सानसाना ग्राँखिझ्याल छन् । तिनको तोरणमा गणेश र महाकालका मूर्ति कुँदिएका छन् । त्यसभन्दा पर दुवैतिर गोलाकार सुन्दर ग्राँखिझ्याल छन् । पखेटा फिंजाएर नाचिरहेका मुजुरको ग्राकारमा ती ग्राँखिझ्याल बनेका छन् । त्यसभन्दा ग्रझ पर ग्ररू दुइटा गोलाकार ग्राँखिझ्याल छन् । तिनमा चाहिं सातघोडे रथमा चढिरहेका सूर्यको मूर्ति अङ्कित छ । सातघोडे रथमा चढेर सूर्य ग्राकाशमा घुमिरहन्छ भन्ने लोकधारणाग्रनुसार सो ग्राँखिझ्याल बनेको छ । सुरक्षाको दृष्टिले अग्र भागको पहिलो र दोस्रो तलामा बनेका कुनै पनि झ्याल खोल्नु हुने खालका छैनन् । प्राचीन शैलीमा बनेका सबैजसा नेपाली घरमा सुरक्षाका लागि यही तरीका ग्रपनाइएको पाइन्छ ।

तेस्रो तलाको मध्य भागमा तीनवटा खोल्नु हुने खालका झ्याल छन् । तिनमध्ये बीचको झ्यालचाहिं सुवर्णनिर्मित हुनाले विशेष ग्राकर्षक देखिन्छ । यी झ्याल बार्दली जस्तै गरी ग्रलिकता बाहिर निकालिएका छन् । धुरीदेखि सलामी पर्दै ग्राएको छानाले यी झ्याल टम्म छोपिएका छन् । यस्तो झ्याललाई गाझ्याल भन्ने चलन छ । यस्ता झ्याल बनाउँदा ग्रलिकता सलामी पारेर बाहिरतिर झुकाइएका हुन्छन् । सुवर्णनिर्मित झ्यालको दायाँ बायाँ कमलासना देवीको मूर्ति राखिएका छन् । गाझ्यालसंग दायाँ बायाँ खोल्नु हुने चाक्ला दुइ झ्याल छन् । त्यसभन्दा पर दायाँ बायाँ ग्ररू तीन तीनवटा झ्याल देखापर्दछन् । दायाँपट्टि थपिएको जस्तो देखिने ग्रलग्ग रहेको भागमा माथिल्लो तलामा स्वस्तिक चिह्न अंकित ग्राँखिझ्याल देखापर्दछ ।

उत्तरपट्टिको लङ्ग दुइनाले हुनाले ढोकाबाट पस्नेबित्तिकै एउटा सानो छिंडी ग्राउँछ । त्यसपछि चोकतिर फर्केको खुला दलान ग्राउँछ । चोकको चारैतिर पेटीमुनि माटाका सुन्दर मूर्ति दर्शनीय छ । मुजुर, सुगा, हात्ती ग्रादि पशुपक्षीका भालेपोथी, शिकार, दम्पतीको प्रेमप्रदर्शन, नाचगान ग्रादिको दृश्य त्यहाँ देखाइएका छन् । दक्षिणपट्टिको लङमा भुईंतलामा भगवान् बुद्धका तीन मूर्ति राखिएका छन् । त्यहाँ पस्ने कलापूर्ण ढोकाले कुमारीचोकको शोभा बढाएको छ । ढोकाको तोरणमा बौद्धदेवताको मूर्ति अंकित छ । ढोकाको दायाँ बायाँ सानसाना ग्राँखिझ्याल छन् । त्यसभन्दा पर दुवैतिर सानसाना ढोका छन् । यस लङमा बाहेक चोकभित्र ग्ररू सबै लङमा खुला दलान बनाइएका छन् ।

दक्षिणपट्टिको लङ्मा दोस्रो तलामा ठूलो आँखिझ्याल छ । बाँकी अरू तीनै लङ्मा बीचमा लहरै खोल्नु हुने तीन तीन झ्याल बनाइएका छन् । ती झ्यालको बाहिर दायाँ बायाँ राखिएका पुरुषाकृति रहरलाग्दा छन् । त्यसभन्दा पर दुवैतिर आँखिझ्याल छन् । हरेक आँखिझ्यालको माथि तोरणमा भगवतीदेवीका विभिन्न मूर्ति अङ्कित छन् ।

तेस्रो तलामा चारै लङ्मा छानामुनि बनाइएका गाझ्यालले नेपाली वास्तुकलाको सुन्दरताको प्रदर्शन गरिरहेका छन् । चारैतिर झिंगटीको छाना छ । उत्तरी लङ्को धुरीमा सुवर्णको तीनवटा गजूर छन् । यसरी कुमारीचोकले विहारशैलीको मल्लकालिक वास्तुकलाको राम्रो उदाहरण प्रस्तुत गरेको छ ।

कुमारीचोकको उत्तरी लङ्मा माथिल्लो तलाको कोठामा कलापूर्ण भित्तिचित्रहरू छन् । नेपाली कलाको इतिहासमा ती भित्तिचित्रहरूको विशिष्ट स्थान छ । सोही तलाको भित्री कोठामा चंदुवामुनि कुमारीको सिंहासन राखिएको छ । सुवर्णनिर्मित सो सिंहासन राजकीय सिंहासन जस्तै भव्य छ ।

भाद्र महीनामा कुमारीको जात्रा हुन्छ । मन्दिरको आकारमा बनेको चारपाङ्ग्रे रथमा कुमारीलाई राखेर काठमाडौं शहरको विभिन्न भागमा लगिन्छ । यो कुमारी जात्रा पनि राजा जयप्रकाशले नै चलाएको हो भन्ने कुरो वंशावलीहरूमा लेखिएको छ ।

## त्रैलोक्यमोहनको मन्दिर

गद्दीबैठकको अगाडि कुमारीचोकको नजीकै त्रैलोक्यमोहनको मन्दिर रहेको छ । इन्द्रजात्राभरि यस मन्दिरमा भगवान् विष्णुका दशावतारसम्बन्धी रमाइला प्रदर्शन देखाइन्छन् । यसैले यस मन्दिरलाई बोलचाली भाषामा दशावतार देखाउने देवल पनि भनिन्छ ।

पाँच तह पेटीमाथि यो मन्दिर उठाइएको छ । मन्दिरको तल्लो तलामा चारैतिर प्रदक्षिणापथमा काठका स्तम्भपंक्ति बनेको छ । चारै दिशामा एकेकवटा ढोका छन् । तापनि मन्दिरको मूलद्वार पश्चिमतिर फर्केको छ । प्रत्येक ढोकाको दायाँ बायाँ सानसाना याकुझ्याल बनाइएका छन् । टुँडालमा वैष्णवसंप्रदायका देवदेवताका मूर्तिहरू कुँदिएका छन् । यस मन्दिरमा जम्मा तीन छाना छन् । प्रत्येक छानामुनि मूलगारामा गःझ्याल बनाइएका छन् । छानामा ठूलठूला टायलको प्रयोग गरिएको छ । सुनको सानो गजूर साधारण किसिमको छ ।

मन्दिरको बाहिरी भित्ता चुनले लिपेर सेतो बनाइएको छ । तल्लो तलामा रहेका स्तम्भ आदि काठका सबै भागमा रातो रंग लगाइएको छ । दोस्रो र तेस्रो तलाको टुँडाल आदिमा भने कालो रंग लगाइएको छ ।

मन्दिरको मूलद्वारको सामुन्ने पश्चिममा गरुडको ठूलो पाषाणमूर्ति रहेको छ । मनुष्यको

आकारमा बनेको गरुडको सो मूर्ति नमस्कार मुद्रामा घुँडा टेकेर बसेको छ । दाहिने कानमा फुलबुट्टे गहना र बायाँ कानमा जोडा नमिल्ने गरी वर्तुलाकार गहना लाएका यस गरुडको मुखमा भक्तजनमा हुने सौम्यभाव झल्कन्छ । गलामा आभूषणको रूपमा सर्पको माला लगाइएको छ । बाहुमा पनि सर्पाकार आभूषण छ । नाडीमा फेरि अर्कै रत्नजडित गहना छ । चूल्ठो जस्तो गरी सजाएको घुम्रेको केशमाथि पानबुट्टे मुकुट छ । काँधसम्म केशगुच्छ लट्किरहेका छन् । फराकिलो काँधमा दुवैतिर फिंजिएको बुट्टेदार पखेटाले यस मूर्तिलाई अझ बढी भावपूर्ण बनाएको छ ।

पखेटाबाहेक अरू सबै अंग मनुष्यकै आकारमा गरुडको मूर्ति बनाउने नेपालको प्राचीन परम्परा छ । सोही परम्पराअनुसार यस मूर्तिको निर्माण भएको छ । चाँगुनारायण स्थान, हाँडिगाउँ सत्यनारायण स्थान, नारायणहिटी नारायणस्थानमा रहेका लिच्छविकालमा बनेका गरुडका भव्यमूर्ति नेपाली कलाको इतिहासमा महत्त्वपूर्ण छन् । तिनै गरुडका मूर्तिसँग जोडा लाग्ने गरी यो मूर्ति बनाइएको छ । मल्लकालमा बनेका कलापूर्ण पाषाणमूर्तिमा यसको गणना हुन्छ । एउटै शिलामा बनेको यति राम्रो आङ्गिक अनुपात मिलेको मूर्ति मल्लकालमा दुर्लभ छ ।

त्रैलोक्यमोहनको मन्दिर वि. सं. १७३७ मा बनेको थियो[1] । गरुडको मूर्ति चाहिं यसको नौ वर्षपछि वि.सं. १७४६ मा निर्माण गरिएको थियो[2] । यो कुरो मल्लकालमा लेखिएको ठ्यासफु र उक्त गरुडका पादपीठमा कुँदिएको अभिलेखबाट बुझिन्छ । ठ्यासफुको वर्णनअनुसार सारछेँ भन्ने ठाउँमा रहेको घर भत्काएर यो मन्दिर बनाइएको थियो । राजा नृपेन्द्रको मृत्यु भएको लगत्तै एक महीनापछि उनैको संझनामा यो मन्दिर बनाउने काम प्रारम्भ गरिएको थियो । आषाढमा थालिएको मन्दिर निर्माणको काम कार्तिक महीनामा सिद्धियो र मन्दिरभित्र दिवंगत राजाको नाममा त्रैलोक्यमोहन नारायणको स्थापना गरियो । नृपेन्द्रमल्लका भाइ पार्थिवेन्द्रमल्ल यस बेला काठमाडौंको राजगद्दीमा थिए । परन्तु यस मन्दिरको अगाडि ठूलो गरुडको मूर्ति स्थापना गरिंदा राजा पार्थिवेन्द्रको मृत्यु भइसकेको थियो । त्यस बेला उनकी रानी ऋद्धिलक्ष्मीले बालक राजा

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १०–१२ पृ.; "सम्वत् ८०० ज्येष्ठकृष्णः ।। एकादशि प्र द्वादशी, शनैश्चर, थ्वकुन्हुया रात्रिस जिमच्याघरिस श्रीश्रीजयनृपेन्द्रमल्ल महाराजा मोक दिन ।। ... सम्वत् ८०० आषाढकृष्ण ।। चतुर्थी, शतभिषनक्षत्र सौभाग्ययोग, सोमवार थ्वकुन्हु श्रीश्रीनृपेन्द्रमल्ल महाराजा दिवंगत जुया, ओयात नामन देवल दयकेया, सारछेंस छे थुङाव वास्तु पेङाव, भुधार कया दिन, उपाध्या श्री उपेन्द्रजु, जोशि विश्वेश्वर उग्रमाल ।। ... सं. ८०१ कार्तिक शुक्ल ।। द्वितीया विशाख प्र अनुराधानक्षेत्र, सौभाग्य-योग वृहस्पतिवार, थ्वकुन्हु सारछेस दयका देवलस चूलिका छाया दिन ।। सं. ८०१ कार्तिक शुक्ल ।। त्रयोदशी, रेवतीनक्षेत्र, वज्रयोग सोमवार, थ्वकुन्हु सारछेँस श्रीनृपेन्द्रमल्लया नामन दयका देवरस श्रीश्रीश्रीत्रैलोक्यमोहन नारायणदेवस्थापना यांङाव गजुरी छाया दिन ... " (ठ्यासफु)

२. परिशिष्ट, ४७ संख्याको अभिलेख

भूपालेन्द्रलाई काखमा राखेर प्रधानमन्त्री लक्ष्मीनारायणको सल्लाहबमोजिम राज्यको रेखदेख गरिरहेकी थिइन् । गरुडको सो भव्यमूर्ति अविकल हाम्रो अगाडि खडा छ । तर त्रैलोक्यमोहन नारायणको मन्दिरचाहिं प्रारम्भकै रूपमा रहेको देखिंदैन । यस मन्दिरमा प्रयोग भएका ठूलठूला टाइलको छानाले यो कुरा बताउँछ ।

## मरुसत्तल

गद्दीबैठकको सामुन्ने पश्चिमतिर चौबाटोमा रहेको तीन छाने विशाल भवन मरुसत्तल भन्ने नामले प्रसिद्ध छ । काष्ठमण्डप यसको अर्को नाउँ हो । यही भवनले गर्दा नेपालको राजधानीको नाउँ काठमाडौं रहन गएको छ । नेपाली वास्तुकलाको इतिहासमा यस भवनको विशिष्ट स्थान रहेको छ ।

यस भवनको भुईंतलामा गोरखनाथको मूर्ति रहेको छ । तापनि यसको निर्माण मन्दिरको शैलीमा गरिएको छैन । पाटी वा सत्तलको रचनासँग यसको निर्माणविधि मेल खान्छ । अहिले बचेका पाटी वा सत्तल जस्ता सर्वसाधारण जनताको लागि बनेका प्राचीन भवनहरूमा मरुसत्तल सबभन्दा पुरानो र सबभन्दा ठूलो आकारको देखिएको छ ।

मरुसत्तलको विशाल भवन खुला हुनाले जुनसुकै दिशाबाट पनि त्यहाँ भित्र पस्न सकिन्छ तापनि यसको मूलद्वार पूर्वतिर फर्केको छ । मूलद्वारको दायाँ बायाँ प्रस्तरका दुइ सिंह खडा छन् । तीन चार तह सिढी चढेपछि सत्तलको भुईंतलामा पुगिन्छ ।

सत्तलको चार कुनामा कोणाकार गारा बनेका छन् । ती गारा दोस्रो तलासम्म गएका छन् । सत्तलको मध्य भागमा गोरखनाथको मूर्ति रहेको छ । त्यसको वरिपरि ठूलठूला चारवटा काठका स्तम्भ गाडिएका छन् । मुख्यतया तिनै कोणाकार गारा र काठका स्तम्भले माथिल्लो तलाको बोझ अडचाएको छ ।

सत्तलको भुईंतलामा चार कुनामा चारवटा सुन्दर मञ्च बनेका छन् । तिनै कोणाकार गारामा ती मञ्च जोडिएका छन् । पहिलो तलाको छानाले ती मञ्च छोपिएका छन् । सुन्दर काष्ठकलाले सिंगारिएका ती मञ्च निकै आकर्षक देखिन्छन् ।

सत्तलको पश्चिमी लङ्मा दोस्रो तलामा जान काठको भऱ्याङ्ग बनाइएको छ । दोस्रो तलामा चारैतिर बार्दली निकालिएका छन् । झिंगटीको छानाले सो बार्दली छोपिएको छ । कोणाकार गारा यस तलासम्म आइपुगेका छन् तापनि भुईंतलामा झैं यसमा कुनै मञ्च बनाइएका छैनन् । भुईंतलाभन्दा यो तला सानो छ तर भुईंतलामा जस्तै बीचमा चार स्तम्भ गाडी त्यसभन्दा माथिल्लो तलाको भार अडचाइएको छ । तर यस तलामा प्रयोग भएका स्तम्भ भुईंतलाका स्तम्भभन्दा साना छन् ।

सबभन्दा माथिल्लो तलामा कुनै गारो छैन । सलामी परेका टुंडालले छानाका टुप्पा अड्याइएका छन् । यस तलाको आकारप्रकार दोस्रो तलाभन्दा अझ सानो छ । मध्य भागमा प्रयोग गरिएका चार स्तम्भ पनि अझ बढी झीना छन् ।

मन्दिरको टुप्पामा कलशाकार गजूर राखिएको छ । कलशको बिर्को जस्तो भाग सुनको छ तापनि कलशचाहिं माटोको छ । कलशसँगै एउटा ध्वजा पनि फर्फराइरहेको देखिन्छ ।

मरुसत्तलको सम्बन्धमा अनेकन् कथाहरू सुनिन्छन् । तिनमध्ये एउटा रमाइलो कथा यस प्रकारको छ :–

काठमाडौंका राजा लक्ष्मीनरसिंहमल्लको पालामा मछिन्द्रनाथको लगनजात्राको दिन मानिसको रूप लिएर कल्पवृक्ष जात्रा हेर्न आइरहेका थिए । मछिन्द्रनाथका एकजना पुजारीले ती कल्पवृक्षलाई चिनेछन् र टचाप्प समातेछन् । एउटा सिंगो रूखले एउटा सत्तल बनाइदिने प्रतिज्ञा नगरुन्जेल पुजारीले कल्पवृक्षलाई छोडेनछन् । यसको चार दिनपछि कल्पवृक्षले एउटा सालको रूख पठाइदिए । पुजारीले राजासँग अनुमति मागी त्यस रूखलाई काटेर त्यसैको काठ-द्वारा काठमाडौंमा एउटा सत्तल बनाई मरुसत्तल भन्ने नाउँ राखे । एउटै रूखको काठबाट बनेको हुनाले यस सत्तललाई काष्ठमण्डप याने काठको माँडु भन्ने चलन चल्यो र यस शहरको नाउँ नै काठमाडौं रहन गयो ।

परन्तु यस कथामा सत्यता छैन भन्ने कुरा इतिहासज्ञहरूले चाल पाएका छन् । किनभने यस कथामा उल्लेख भएका राजा लक्ष्मीनरसिंह सत्रौं शताब्दीको उत्तरार्धका हुन् । उनीभन्दा झण्डै पाँच शताब्दीअघिनै यस शहरको काष्ठमण्डप भन्ने नाउँ रहिसकेको थियो भन्ने कुरा तात्का-लिक हस्तलिखित ग्रन्थ तथा शिलापत्रहरूबाट थाहा पाइएको छ[1] । मरुसत्तलभित्रै पनि भित्तामा टांगिएका पुराना ताम्रपत्रहरू पाइएका छन् । तिनमध्ये सबभन्दा पुरानो ताम्रपत्र विक्रमको चौधौं शताब्दीको छ[2] । परन्तु यो भव्य सत्तल कहिले कसले बनाएको हो भन्ने कुरा चाहिं अहिलेसम्म पत्ता लागेको छैन ।

लिच्छवि राजाहरूको समयमा काठमाडौं शहर दक्षिणकोलिग्राम र कोलिग्राम यी दुइ भागमा विभक्त थियो । लिच्छविहरूको अन्त्यपछि काठमाडौंको दक्षिण भागलाई यङ्गल र उत्तरी भागलाई यम्बु भन्ने चलन बढी चल्यो । यस कुराको चर्चा हामीले माथि गरिसकेका छौं । काठ-माडौंको यस विभाजनअनुसार मरुसत्तल त्यस बेलाको यंगलको इलाकाभित्र पर्दथ्यो । यस कारण त्यस सत्तलमा रहेको एउटा ताम्रपत्रमा यस सत्तललाई यंग्रमण्डो अर्थात् यङ्गलको मण्डप भनी लेखिएको छ[3] । यम्बुको इलाकाभित्र पनि यस्तै एउटा मण्डप थियो । सो मण्डपचाहिं थसमण्डु

१. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" ११०–११५ पृ.

२. परिशिष्ट, ५ संख्याको अभिलेख

३. परिशिष्ट, ६ संख्याको अभिलेख

नामले उहिले प्रसिद्ध थियो[1] । आजभोलि चाहिं सो मण्डपलाई थाय्‌मदु भनिन्छ। सोही मण्डपको नाउँले थाय्‌मदु टोल भन्ने नाउँ रहेको हो।

काठमाडौं शहरको दक्षिणी भागमा अर्थात् पुरानो यङ्गलको इलाकामा मनाइने जात्रा-मध्ये एउटा प्रसिद्ध जात्रा पचलिभैरवको जात्रा हो। मरुसत्तलको अगाडि बाह्र, बाह्र वर्षमा पचलिभैरवको खड्गसँग गद्दीनसीन राजाको खड्ग साट्ने जात्रा परम्परादेखि चलेर आइरहेको छ। माथि उल्लिखित मरुसत्तलको सबभन्दा पुरानो ताम्रपत्रमा पचलीभैरवलाई पाञ्चालिभह्लाह्र भनिएको छ[2]। यसरी पचलिभैरवसँग मरुसत्तलको केही सम्बन्ध देखिन्छ।

सत्तल पाटी बनाउँदा त्यससँगै एउटा धारा बनाउनु अनिवार्य थियो। पुगिसरी आएकाहरू अक्सर गरेर गैह्रीधारा बनाउँथे। परन्तु धेरै टाढादेखि ढल बनाएर पानी ल्याई गैह्रीधारा बनाउनु सजिलो काम नहुनाले अक्सर सत्तल पाटीको नगीचै एउटा कुवा खनेर त्यससँगै टुटेधारा बनाइन्थ्यो। धेरै टाढादेखि हिंडेर आएका थाकेका बटुवाहरूलाई पानी खुवाउनाले, बास दिनाले धर्म हुन्छ, परलोक सप्रन्छ भन्ने कुरामा उनीहरूको विश्वास थियो। काठमाडौं मरुसत्तलको पश्चिमोत्तर कुनामा रहेको मरुहिटी पनि मरुसत्तलकै एक अंगको रूपमा बनेको देखिन्छ।

उठानमा काष्ठमण्डपको निर्माण सार्वजनिक भवनको रूपमा गरिएको देखिए तापनि पछि आएर स्थितिमल्लको समयमा यो मण्डप कापालिक धर्मका अनुयायीहरूको हातमा परयो[3]। ती कापालिकहरू प्रत्येक वर्ष गोसाईंकुण्डमा मेला भर्न जान्थे। त्यताबाट फर्केर आएपछि चक्रपूजा (एक किसिमको विशेष पूजा) गरी भोज खान्थे[4]। यसको लागि एउटा भिन्नै गुठी थियो। काष्ठ-मण्डपमा घरजम गरेर बस्ने कुसलेहरू तिनै कापालिक मतानुयायीहरूका सन्तान हुन्। श्री ५ को सरकारले काष्ठमण्डपको जीर्णोद्धार गरेपछि मात्र तिनीहरू त्यताबाट हटाइएका हुन्।

मरुसत्तलको मध्य भागमा गोरखनाथको मूर्ति छ। त्यसको चार कुनामा चारवटा गणेशका मूर्ति रहेका छन्। कानफट्टा महन्तहरू बिहान बिहान गोरखनाथको पूजा गर्छन्। काठ-माडौं उपत्यकामा अहिलेसम्म पाइएका गोरखनाथका जम्मा तीन मूर्तिमध्ये यो एक हो। अक्सर गरेर गोरखनाथको पूजा उनको मूर्ति बनाएर होइन कि उनको पादुकालाई उनको प्रतीक रूप मानी गरिन्छ। यसैले गोरखनाथको मूर्ति यहाँ विरलै छन्।

परम्परागत जनश्रुतिअनुसार काष्ठमण्डपको प्रतिष्ठा (घर तयार भइसकेपछि गर्ने

---

१. रेग्मी, 'मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट ६ पृ.

२. परिशिष्ट, ५ संख्याको अभिलेख

३. योगी नरहरिनाथ, "काष्ठमण्डप" संस्कृत–सन्देश (काठमाडौं, वि.सं. २०१० आश्विन) १ वर्ष ६ अंक ५–६ पृ.

४. सोही ४ पृ.

धार्मिक विधि) अझसम्म सम्पन्न भएको छैन। जहिले नून र तेल एउटै भाउमा बेचिन्छ, त्यसै वेला मात्र यस मण्डपको प्रतिष्ठा हुन्छ भन्ने आहान छ ।

काष्ठमण्डपले चर्चेको भूभाग आजभोलि मरुटोल भन्ने नामले प्रसिद्ध छ । मरु शब्द मण्डप शब्दकै अपभ्रंशबाट बनेको छ । मल्लकालका लेखहरूमा यस ठाउँलाई बुझाउन मंदु भनी लेखिएको पाइन्छ । यसरी मण्डपबाट मंदु र मंदुबाट मरुको रूपमा परिवर्तित भएको बुझिन्छ ।

मरुसत्तलको नगीचै पूर्वोत्तर कुनामा सुनको छाना भएको मरुगणेशको सानो मन्दिर छ । सो गणेशको मन्दिर मरुसत्तलकै एक अङ्गको रूपमा बनेको देखिन्छ । यसैले यसको नाम मरुगणेश (मण्डपगणेश) भन्ने रहन गएको छ । बाङ्गेमुढामा रहेको थसमन्दु (थाय्मदु) सत्तलको नगीचै पनि यस्तै गणेशको मूर्ति स्थापना गरिएको छ । यताबाट सत्तलको नगीचै गणेश स्थापना गर्ने प्राचीन परम्पराको ज्ञान हुन्छ ।

मरुगणेशको मन्दिर आकारप्रकारमा सानो छ तापनि धार्मिक तथा सांस्कृतिक दृष्टिले यसको ठूलो महत्त्व छ । कुनै पनि पूजाआजा गर्दा आफ्नो घरको सामुन्ने रहेको गणेशलाई स्थानगणेश मानी पूजा गर्ने हाम्रो चलन छ । सोही चलनअनुसार हनूमान्ढोका राजदरवारको स्थानगणेशको रूपमा यी देवता संमानित छन् । हनूमान्ढोकाको वरपर अरू पनि गणेशका मूर्ति ठाउँठाउँमा छन् । परन्तु मरुगणेशलाई नै स्थानगणेश मानिनामा विशेष कारण हुनुपर्छ भन्ने अनुमान हुन्छ ।

हनूमान्ढोका राजदरवारसँगको यही सम्बन्धबाट राजदरवारमा हुने धार्मिक कार्यमा राजकीय संमानपूर्वक मरुगणेशको पूजा गरिन्छ । राजकुमारको पास्नीको उत्सवमा विधिविधानपूर्वक प्रोसेशनसहित राजकुमारलाई मरुगणेशको दर्शन गराउन ल्याइन्छ । यसै गरी राज्याभिषेकमा सिन्दूरजात्रा शुरू हुनुभन्दा अघि हनूमान्ढोकाबाट बाहिर सवारी भई मरुगणेशको दर्शन गर्न श्री ५ को सवारी हुन्छ । यसरी नेपालको सांस्कृतिक र धार्मिक क्षेत्रमा मरुगणेशको विशिष्ट स्थान रहेको छ ।

मरुगणेशको मन्दिरमा सुनको छाना हाल्ने काम वि. सं. १९०४ मा श्री ५ सुरेन्द्रवीर विक्रम शाहको पालामा भएको थियो । यो कुरो त्यस मन्दिरको छानामा अंकित अभिलेखबाट ज्ञात हुन्छ । यस मन्दिरको दर्पणाकार गजूर मन्दिरको टुप्पामा होइन कि छानामा राखिएको छ । अक्सर गरेर अरू भवनसँग जोडिएर बनेको मन्दिरमा गजूर हाल्दा छानामा हाल्ने चलन छ । हनूमान्ढोकाभित्र नासलचोकमा रहेको नरसिंहको सानो मन्दिरमा पनि यसै गरिएको छ । गणेशको यो मन्दिर आजभोलि अरू भवनसँग जोडिएको छैन तापनि मन्दिरको अग्रभाग रित्त राखेर छानामा गजूर हालिएको छ । यसैले यस मन्दिरको सम्बन्धमा एउटा अनौठो किंवदन्ती प्रसिद्ध छ । गजूर नभएको हुनाले नै यस मन्दिरको नाम नेवारीमा मरुगणेश भन्ने रहन गएको हो भन्ने त्यस किंवदन्तीको भनाइ छ । परन्तु मरुसत्तलको एक अंगको रूपमा बनेको हुनाले नै मण्डपगणेश वा मरुगणेश भन्ने संज्ञा रहेको हो भन्ने कुरो स्पष्ट हुनाले सो किंवदन्ती तथ्यविहीन देखिन्छ ।

# कवीन्द्रपुर

मरुसत्तलको नगीचैं पूर्वदक्षिण कुनामा रहेको तीनछाने मन्दिर कवीन्द्रपुर भन्ने नामले प्रसिद्ध छ। राजा प्रतापमल्लले यस मन्दिरको निर्माण गराएका थिए। यस मन्दिरको भुइँतलामा नासलदेवता (नाटयेश्वर शिव) को मूर्ति स्थापना गरिएको छ । यसैले कोही कोही यस मन्दिरलाई नासलदेवताको मन्दिर पनि भन्दछन् ।

राजा प्रतापमल्लको नाच गानमा मात्र होइन कविता लेखनमा पनि ठूलो अभिरुचि थियो। ती विषयमा म विशेष रूपले कुशल छु भन्ने कुरामा राजा प्रतापमल्ललाई गर्व थियो। उनी आफ्नो प्रशस्तिमा "शस्त्रशास्त्रसंगीतादिसकलविद्यापारग (शास्त्र विद्या शस्त्र तथा संगीत आदि सबै विद्यामा पारङ्गत) भनी लेखाउँथे[1] । उनले कवीन्द्र भन्ने उपाधि पनि लिएका थिए। यसैले उनले बनाएको नासलदेवताको मन्दिरको नाम कवीन्द्रपुर रहन गएको छ ।

कवीन्द्रपुरको भुइँतलामा रहेको अभिलेखमा राजा प्रतापमल्लले यो भवन बनाउनामा के हेतु थियो भन्ने कुराको चर्चा परेको छ। संस्कृत तथा नेवारी भाषामा लेखिएको त्यस अभिलेखको नेवारी भागमा राजा प्रतापमल्लको जीवनकालमा घटेको एउटा विचित्रको घटना लेखिएको छ। एक पटक प्रतापमल्ल आफैं नरसिंहको रूप लिएर रङ्गशालामा उत्रेका थिए। त्यस वेलाको चलनअनुसार रङ्गशालामा सानो वेदिका बनाई नरसिंहको पूजा गरिएको थियो। नाच सिद्धिसकेपछि त्यस वेदिकाबाट विचित्रको आवाज निस्कन थाल्यो। सो आवाज त्यस वेदिकामा अदृश्य रूपले उपस्थित भएका स्वयं नरसिंहको आक्रोश थियो। यो कुरा बुझी राजा प्रतापमल्लले नरसिंहलाई शान्त पार्न कवीन्द्रपुर बनाई त्यहाँ नरसिंह, नासलदेवता, नन्दी, महाकाल आदि देवताको स्थापना गरिदिए [2] । प्रतापमल्लले स्थापना गरेका ती देवता कवीन्द्रपुरको भुइँतलामा अद्यापि विद्यमान छन्। परन्तु उपर्युक्त अभिलेख खण्डित हुनाले कवीन्द्रपुर बनाएको मिति लेखिएको भाग पढ्न नसकिने अवस्थामा छ।

नासलदेवता नाटयेश्वर शिवको नेवारी नाम हो। हाम्रो यहाँ नासलदेवताको ठूलो प्रसिद्धि छ। नेपाल उपत्यकामा विभिन्न स्थानमा नासलदेवताका मन्दिर बनेका छन्। परन्तु यस देवताको भव्य मन्दिर भने विरल छन्। राजा प्रतापमल्लले बनाइदिएको कवीन्द्रपुर नै नासलदेवताको सबभन्दा भव्य र विशाल मन्दिर हो। विशेष गरी नृत्यविद्या र संगीतविद्या सिक्नाको लागि यस देवताको पूजा गरिन्छ। नाच गानको अभ्यास प्रायः पाटी पौवा आदि सार्वजनिक भवनमा बसेर गरिने हुनाले त्यस्ता सार्वजनिक भवनमा पनि नासलदेवता स्थापना गरिएको हुन्छ। राइटको वंशावलीअनुसार कवीन्द्रपुर पनि नासलदेवता स्थापना गर्न बनाइएको एउटा पाटी मात्र हो[3] ।

१. परिशिष्ट, २९,३०,३३ संख्याका अभिलेख

२. परिशिष्ट, ३९ संख्याको अभिलेख

३. डेनियल राइट, "हिस्ट्री अफ् नेपाल" (कलकत्ता, सुशील गुप्त प्राइभेट् एल् टि डि ई.सं. १९५८ [वि.सं. २०१५] द्वितीय संस्करण १२९ पृ.

उपत्यकामा बनेका नासलदेवताका मन्दिरहरूको अध्ययन गरी हेरचौं भने यी मन्दिर अरू प्रचलित मन्दिरभन्दा केही बेग्लै किसिमले बनेको हामी देख्छौं। कुनै पाटी वा घरको गारो पर्खाल आदिमा अडेस लगाएर प्रायः ती मन्दिर बनेका हुन्छन्। ती मन्दिरको चारैतिर परिक्रमा गर्ने प्रदक्षिणापथ बनाउनै पर्ने आवश्यकता संझिदैन। कवीन्द्रपुरको निर्माण पनि अलग्ग छुट्टिएको मन्दिरको रूपमा गरिएको छैन न त यसमा परिक्रमा गर्ने प्रदक्षिणापथ बनाइएको छ। यसैले यस मन्दिरको पश्चिमाभिमुख अग्रभाग मात्र कलापूर्ण झ्याल ढोकाले सिंगारिएको छ। पृष्ठ-भागमा साधारण गारोबाहेक विशेष सजधज केही छैन।

झ्वाट्ट हेर्दा एकनाले प्राचीन घर जस्तो देखिने आयताकार यो भवन तीन भागमा विभक्त छ। भवनको मध्य भाग दुइ हात जति निकाली दायाँ बायाँ कोण उत्पन्न गरिएका छन्, जसले गर्दा भवनको शोभा विशेष रूपले बढेको छ। नेपाली शैलीमा बनेका अरू प्राचीन भवनहरूमा पनि यस शैलीको प्रयोग ठाउँ ठाउँमा देखिन्छ।

यस भवनको भुईंतलामा तीन हात जति अग्लो पेटी बनेको छ। पेटीमा लहरै थाम हाली पाटीको रूप दिइएको छ। ती थाममाथि पहिलो तलाको छाना अडचाइएको छ। थाममा रांगाका सीङ झुण्डचाइएका छन्। नासलदेवतालाई पशुबलि दिई मन्दिरको भित्ता वा थाममा यसरी सीङ झुण्डचाउने पुरानो चलन छ। प्राचीन कालमा फुकेर बजाउने बाजा बजाउन सीङ प्रयोगमा ल्याइने हुनाले नासलदेवतालाई पशुबलि दिंदा पशुको सीङ त्यहाँ चढाउनु आवश्यक मानिएको देखिन्छ।

भुईंतलामा मूल गारोको मध्य भागमा काष्ठनिर्मित सुन्दर द्वार छ। द्वारका दायाँ बायाँ लहरै राजा प्रतापमल्लले स्थापना गरेका देवदेवीका मूर्तिहरू र शिलापत्र रहेका छन्।

कवीन्द्रपुरको रचना सत्तल पाटीसंग मात्र होइन विहारमा बनाइएका आगमछेँसँग पनि केही मात्रामा मेल खान्छ। विहारको आगमछेँमा जस्तै कवीन्द्रपुरमा पनि दोस्रो तलाको मध्य भागमा पाचुखाझ्यालको प्रयोग गरिएको छ। त्यसको दायाँ बायाँ बाकुझ्याल राखिएका छन्। त्यसभन्दा पर भवनको दायाँ बायाँको भागमा पनि स्वखा झ्याल जडिएका छन्। यसमा प्रयोग गरिएका टुँडाल साधारण किसिमका छन्।

यसको तेस्रो तलाका मध्य भागमा र त्यसको दायाँ बायाँ सलामी परेका बार्दली जस्ता विधिझ्याल बनेका छन्। खुला सभाकक्षाको रूपमा बनाइएको यो तेस्रो तला सत्तलको रचनासंग मिल्ने गरी बनाइएको छ। कुनै वेला नाचगानको अभ्यास सो सभाकक्षामा गरिन्थे भन्ने अनुमान हुन्छ। यसैले वंशावलीकारले यस भवनलाई पाटी भन्ने संज्ञा दिएको हुनुपर्छ।

## सिंहसत्तल

मरुसत्तलको नगीचै दक्षिणपट्टि चारकुनामा चारवटा ढलौटे सिंह भएको तीनतले भवन

खडा छ। सिंहसत्तल भन्ने नामले सो भवन प्रसिद्ध छ। काष्ठमण्डप जस्तै सो भवन पनि सत्तल पाटीको निर्माणविधिअनुसार बनेको छ। यस सत्तलको माथिल्लो तलामा गरुडवाहन नारायणको प्रस्तरमूर्ति रहेको छ। मूर्तिकलाको दृष्टिले सो मूर्ति दुइ शताब्दीभन्दा पुरानो देखिंदैन। काष्ठ मण्डपमा जस्तै यहाँ पनि अघिदेखिको सत्तलमा देवताको मूर्ति स्थापना गरी यसलाई मन्दिरको रूप दिइएको छ। मोहिनीविनोद शर्माले संग्रह गरेको वंशावलीमा वि. सं. १९२० मा सुब्बा धर्मनारायण साल्मीको घरमा आगलागी भई नयाँ घर बनाउन जग खन्दा पाइएको गरुडनारायणको मूर्ति यस सत्तलमा स्थापना गरियो भनी लेखिएको छ।

यस भवनको भुईंतलामा चारैतिर स्तम्भ गाडिएका छन्। ती स्तम्भमाथि दोस्रो तलामा बनेको कौसीको छाना अडेको छ। आजभोलि स्तम्भले घेरिएको त्यस भवनको भुईंतलामा चारैतिर विभिन्न पसल थापिएका छन्। स्तम्भपंक्तिको पछाडि मूल गारो बनेको छ। मूल गारोले घेरिएको भित्री भागमा यस भवनको निर्माण कसरी गरिएको छ भन्ने कुरो जान्न सकिएको छैन। काष्ठ-मण्डपमा जस्तै भवनको मध्य भागमा ठूलठूला स्तम्भ हाली दोस्रो तलाको भार मुख्यतया त्यसमाथि अडयाइएको छ कि भन्ने अनुमान हुन्छ। परन्तु सो ठाउँ व्यक्तिगत अधिकारमा रहेको हुनाले भित्र गई हेर्न अनुमति पाउन सकिएको छैन।

यस भवनको दोस्रो तलामा जान भवनको दक्षिणपट्टिको लामो कौसीमा प्वाल पारी भरयाङ हालिएको छ। भरयाङ बनाउने यो उचित ठाउँ नहुनाले प्रारम्भदेखि नै त्यहाँ भरयाङ थियो भन्ने देखिंदैन। आजभोलि यसको दोस्रो तलामा गारो लाएर गृहस्थीहरूको भण्डार कोठा बनाइएको छ। परन्तु उठानमा मरुसत्तलमा जस्तै गारोभन्दा स्तम्भको बढी प्रयोग गरी खुला ठाउँ बनाइएको अनुमान हुन्छ। यस भवनको तेस्रो तलाचाहिं आजभोलि सत्तललाई सुहाउने गरी खुला राखिएको छ। तर त्यहाँ बनाइएका खापा दलिन आदि धेरैजसा उपकरण पुराना देखिंदैनन्। यस तलामा चारैतिर बार्दली निकालिएका छन्। गाईजात्रा, मछेन्द्रनाथको जात्रा आदिमा मानिसहरू त्यहाँ बसी जात्रा हेर्न मनपराउँछन्। गरुडनारायणको अगाडि यहाँ दिनप्रति-दिन भजनको कार्यक्रम चल्दछ। यस तलामा भरयाङसँगै गरुडको सानो प्रस्तरमूर्ति पनि राखिएको छ।

यो भवन कहिले बन्यो भन्ने कुरा जान्ने कुनै साधन प्राप्त भएको छैन। यसको कौसीको चार कुनामा रहेका सिंहको मुनि अभिलेख छन् तापनि ती अभिलेख वि.सं. १९८६ मा मात्र स्थापना गरिएका हुनाले सत्तलको प्राचीनता थाहा पाउन मद्दत गर्दैनन्। एकजना साधारण जानपदले सिंहका ती मूर्ति स्थापना गरेको कुरा ती अभिलेखमा लेखिएका छन्।

प्रचलित दन्त्यकथाअनुसार यो सत्तल मरुसत्तल बनाएर बाँकी रहेको काठले बनाइएको थियो। यसैले नेवारीमा यस सत्तललाई कोही कोही सिल्यँ सत्तल (बाँकी रहेका काठले बनेको सत्तल) भन्दछन्। यस दन्त्यकथामा के कति सत्यता छ भन्ने कुरो भविष्यमा गरिने अन्वेषणकार्यपछि मात्र थाहा हुन सक्नेछ।

## लक्ष्मीनारायणको मन्दिर

मरुसत्तलको पूर्वोत्तर कुनामा रहेको तीनतले दुइछाने आयताकार भवन लक्ष्मीनारायणको मन्दिर भन्ने नामले प्रसिद्ध छ। परन्तु काष्ठमण्डप र सिंहसत्तल जस्तै यो भवन पनि प्रारम्भमा मन्दिर नभएर एउटा सत्तल मात्र थियो। यो कुरा यस भवनको निर्माणशैलीबाट व्यक्त हुन्छ।

यस भवनको उठेको पेटीमा काठका स्तम्भपंक्ति हाली फले बनाइएको छ। स्तम्भपंक्तिको पछाडि गारा लगाइएका छन्। ती गारा दोस्रो तलासम्मै गएका छन्। यसरी भुईंतला र दोस्रो तला खुला छैनन्। तेस्रो तलामा भने तलदेखि आएका ती मूल गारामाथि पर्ने गरी थाम गाडी खुला बुर्जा जस्तो बनाइएको छ। परन्तु आजभोलि त्यहाँ भित्ता बनाई सानसाना कोठा निकालिएका छन्। यस तलामा मरुसत्तलको दोस्रो तलामा जस्तै बार्दली बनाइएको छ। आजभोलि सो बार्दली जीर्ण भइसकेको छ। तापनि जङ्गबहादुरको समयमा नेपालमा आएका ओल्डफील्डको स्केचेज् फ्रम् नेपालमा छापिएको काठमाडौंको बजारको दृश्यसम्बन्धी चित्रमा देखिने यस भवनको अलिकता भागले प्राचीन रूपलाई संझाउँछ, जुन अति सुन्दर थियो।

यस भवनको उत्तरपट्टि यही भवनमा जोडेर लक्ष्मीनारायणको मन्दिर बनाइएको छ। पछि थपिएको यही मन्दिरले गर्दा यस सत्तलको नाम लक्ष्मीनारायणको मन्दिर भन्ने रहन गएको छ। सो मन्दिर यस भवनमा जोडेर बनाइनुभन्दा पहिले यो भवन सुन्दर सत्तलको रूपमा थियो भन्ने कुरो स्पष्ट देखिन्छ। सत्तलको छानामा गजूरको प्रयोग गरिएको छैन। लक्ष्मीनारायणको मन्दिर भएको भागमा मात्र सुनको गजूर राखिएको छ। त्यस मन्दिरको भुईंतलामा लक्ष्मीनारायणको मूर्ति रहेको छ। मूर्तिकलाको दृष्टिले सो मूर्ति उल्लेखनीय देखिंदैन। विक्रमको उन्नाइसौं शताब्दीतिर मात्र सो मूर्तिको निर्माण भएको देखिन्छ। सत्तलको माथिल्लो तलामा पनि विष्णुको पाषाणमूर्ति बनाई स्थापना गरिएको छ। शारीरिक अनुपातमा भन्दा अलङ्कारको प्रयोगमा विशेष ध्यान दिएर बनाइएको सो मूर्ति पनि उन्नाइसौं शताब्दीतिर मात्र बनेको देखिन्छ। यसै गरी सत्तलको पश्चिमी भागमा भुईंतलाको प्रदक्षिणापथमा स्थापना गरिएका हनूमान् र महाकालको मूर्ति पनि विशेष आकर्षक छैनन्।

सत्तलको रूपमा बनाइएको यो भवन आजभोलि न त सत्तलको काममा प्रयोग भएको छ न त मन्दिरकै रूपमा सम्मानित छ। यसको भुईंतलामा चारैतिर पसल थापिएका छन् तथा पसलेहरूको भण्डार बनाइएको छ। दोस्रो तला र तेस्रो तलामा चाहिं अनेक गृहस्थीहरूले आफ्आफ्नो स्थायी बास जमाइ बसेका छन्।

## माजुदेवल

गद्दीबैठक पर्ने मूल ढोकाको सामुन्ने त्रैलोक्यमोहननारायणको मन्दिरदेखि पश्चिमोत्तर कुनामा रहेको विशाल मन्दिर माजुदेवल भन्ने नामले प्रसिद्ध छ। नौ तह पेटीमाथि यो मन्दिर

उठाइएको छ। हनूमान्ढोका दरवारभित्र र प्राङ्गणमा रहेका मन्दिरहरूमा तलेजु र देगुतलेजुको मन्दिरपछि माजुदेवल सबभन्दा अग्लो र ठूलो देवलमा गनिएको छ। भूपालेन्द्रकी आमा ऋद्धि-लक्ष्मीले वि. सं. १७४७ मा यो मन्दिर बनाउन लगाएका थिए[1]। मुमा महारानीले बनाएको हुनाले नै यस देवलको नाम माजुदेवल अर्थात् मुमा महारानीको देवल भन्ने रहन गएको देखिन्छ।

मन्दिरको विशाल आकारलाई सुहाउने गरी बनाइएका हुनाले पेटी टुँडाल ढोका आदि सबै अरू साधारण मन्दिरभन्दा ठूलठूला छन्। यस मन्दिरमा जम्मा तीन छाना छन्। ठूलठूला टाइलका छाना छाइएका छन्। मन्दिरभित्र विशाल शिवलिङ्ग छ। मन्दिरको तल्लो तलामा चारैतिर स्तम्भपंक्ति हाली प्रदक्षिणापथ बनाइएको छ। फराकिलो सो प्रदक्षिणापथमा काठका फल्याक हालिएका छन्। यहाँबाट काठमाडौं शहरको चारैतिरको दृश्य देखिने हुनाले आगन्तुकहरू यस मन्दिरमाथि गई दृश्यावलोकन गर्न मनपराउँछन्। मन्दिरमा चार ढोका छन्। मूलद्वार पूर्वतिर फर्केको छ। मूलद्वारको सामुन्ने पेटीलाई काटेर मन्दिर चढ्ने सिंढी गएको छ। सिंढी चढ्ने ठाउँमा तल सडकमा शिखरशैलीको सेतो मन्दिर खडा छ। आजभोलि यस मन्दिरभित्र देवता छैन। बरु यस मन्दिरपछाडि कामदेवको पाषाणमूर्ति देखापर्छ। शिवजीको मन्दिरको नगीचै कामदेवको मूर्ति राख्ने पुरानो चलन छ। माजुदेवल शिवजीकै मन्दिर हुनाले कामदेवको सो मूर्ति माजुदेवल बनाउँदाखेरि नै स्थापना गरिएको देखिन्छ।

माजुदेवलको टुँडालमा स्त्रीपुरुषका कामकेलिको दृश्य देखाइएका छन्। हनूमान्ढोकाको सुवर्णद्वार सामुन्ने रहेको जगन्नाथमन्दिरको टुँडालमा पनि यस्ता दृश्य प्रदर्शन गरिएका छन्। मन्दिरमा बज्र नपरोस्, भूत पिशाच आदिले दुःख नदिउन् भन्ने ध्येयले यस्ता आकृति कुँदिएका हुन् भन्ने अनुश्रुति छ।

यस मन्दिरको गजूर विशेष प्रकारको छ। शिवजीको यस मन्दिरको टुप्पामा सानो बौद्ध स्तूप बनाइएको छ। त्यसमाथि धातुको गजूर राखिएको छ। मन्दिरको टुप्पामा अर्को कुनै सानो मन्दिरको आकार गजूरको रूपमा राख्ने चलन ठाउँ ठाउँमा देखिन्छ। उदाहरणार्थ पाटनको तलेजुमन्दिरमा तथा हनूमान्ढोकाकै सुवर्णद्वारमाथिको आगमछेँमन्दिरमा शिखर शैलीको धातुनिर्मित सानो मन्दिर गजूरको रूपमा राखिएको छ। परन्तु शिवको मन्दिरमा बौद्ध स्तूपसहितको गजूरचाहिं अन्त कतै देखापरेको छैन। यो यस मन्दिरको विशेषता हो।

## शिवपार्वतीको मन्दिर

त्रैलोक्यमोहन नारायणको मन्दिरको उत्तरतिर दोबाटोको बायाँपट्टि शिवपार्वतीको मन्दिर रहेको छ। यस मन्दिरको निर्माण नेपाली वास्तुकलाकै शैलीमा भएको छ तापनि यस मन्दिरका केही विशेषताहरू छन्।

---

१. परिशिष्ट, ४६ संख्याको अभिलेख

श्री ५ रणबहादुर शाहको शासनकालमा पृथ्वीनारायणका कान्छा छोरा बहादुर शाहले यो मन्दिर बनाउन लगाएका थिए[1] । स्वदेशमा विदेशी कलाको प्रभाव हटाउन नेपाली कलालाई प्रोत्साहन दिने नीति पृथ्वीनारायण शाहको थियो । यसैले उनले आफ्नो दरवार पूर्णतया नेपाली शैलीमा बनाउन लगाएका थिए । बहादुर शाहले यस नीतिको महत्त्व बुझेका थिए । नेपाली वास्तु-कलाको शैलीमा बनेको यस मन्दिरले यस कुराको संझना गराउँछ ।

दुइ तह पेटीमाथि यस मन्दिरको निर्माण गरिएको छ । पहिलो तहको पेटी निकै फराकिलो हुनाले डबलीको रूप लिएको छ । यस मन्दिरको पूर्वपट्टि पेटीमुनि एउटा सानो शिलालेख छ । राजा लक्ष्मीनरसिंहले वि. सं. १६९८ मा सो शिलालेख राख्न लगाएका थिए[2] । सो अभिलेख नेपाल उपत्यकामा नेपाली भाषामा लेखिएको सबभन्दा पहिलो अभिलेखको रूपमा प्रसिद्ध छ । डबलीमुनि शिलापत्र राख्ने चलन ठाउँ ठाउँमा देखिनाले बहादुर शाहले शिवपार्वतीको यो मन्दिर बनाउनुभन्दा अघि यहाँ कुनै डबली थियो कि भन्ने अनुमान हुन्छ । यो ठाउँ खुला दोबाटोनिर रहेको हुनाले यहाँनिर डबली बन्नु धेरै संभावना छ । एउटा तात्कालिक ठ्यासफुमा हनूमान्‌ढोकाको कह्लेहोलचोकबाहिर डबलीमा नाच देखाएको उल्लेख आएको छ । कह्लेहोलचोक यस मन्दिरको पूर्वपट्टि सडकपारि पर्ने हुनाले यो उनै ठ्यासफुमा उल्लिखित डबली हुनुपर्छ भन्ने देखिएको छ ।

शिवपार्वतीको दुइतले यो मन्दिर दक्षिणाभिमुख खडा छ । मन्दिरको सामुन्ने फराकिलो पेटीमा दुइटा ठूलठूला सिंह द्वारपालका रूपमा उभिरहेका छन् । आयताकार यस मन्दिरको भुईं-तलामा दक्षिणाभिमुख पांच द्वार छन् । तर बीचको द्वार मात्र चलनचल्तीमा ल्याइएको छ । तल्लो तलाको पूर्वी र पश्चिमी भित्तामा पनि आँखिझ्याल छन् । मन्दिरभित्र भुईंतलामा नव-योगिनीका मूर्ति स्थापना गरिएका छन् ।

यस मन्दिरको दोस्रो तला वैशिष्टयपूर्ण छ । दोस्रो तलामा मन्दिरको चारैतिर टुँडालको सट्टा सलामी परेका आँखिझ्याल तथा अरू विभिन्न आकारका झ्याल छन् । बार्दली जस्तै गरी लहरै निकालिएका त्यस्ता झ्याललाई विधिझ्याल भनिन्छ । बीचको एउटा खुला झ्यालमा शिवपार्वतीको काष्ठमय मूर्ति साह्रै आकर्षक ढंगले राखिएको छ । यस मन्दिरको यो प्रमुख विशेषता हो । आफ्ना भक्तजनहरूलाई दर्शन दिन अथवा शहरको दृश्य हेर्न झ्यालबाट चियाइ-रहेका जस्ता ती देखिन्छन् । श्रीखण्डको काठबाट ती मूर्ति बनाइएका हुन् भनिन्छ । विशेषतया शिवपार्वतीको दायाँ बायाँ रहेका कलापूर्ण गोलाकार दुइ आँखिझ्याल दर्शनीय छन् । मन्दिरमाथि तीनवटा सुनका गजूर छन् । तीनमाथि सुनैको पुष्पवल्लरी र छत्र देखापर्छन् ।

---

१. वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा" १४६ पृ. "जौना श्री ५ सिंहप्रताप महाराजाका आत्मज श्रीरणबहादूरबाट हुकुम् पाएर श्री ५ पृथ्वीनारायणका विद्वतीया आत्मज श्री–बाहादुर साहले अर्द्धनारीश्वर मूर्ति झ्यालमा राषेर श्रीखण्डकाष्ठले विचित्र ऐटले शोभाय-मान भयाका अष्टमातृकासहित नवग्रहका पीठकन ठुला घण्टासमेत पीठ बनाउंदा भया ।"

२. परिशिष्ट, १२ संख्याको अभिलेख

# भगवतीको मन्दिर

शिवपार्वतीको मन्दिरसंगै पूर्वतिर सडकपारि तीनछाने एउटा मन्दिर छ। यस मन्दिरभित्र नुवाकोटको प्रसिद्ध देवी महिषमर्दिनी भगवतीको प्रतिनिधिस्वरूप सानो प्रतिमा स्थापना गरिएको छ। यसैले यस मन्दिरलाई कोही कोही नुवाकोट भगवतीको मन्दिर पनि भन्दछन्। हनूमान्-ढोकाभित्रको कह्लेहोलचोकको पूर्वी लङ्मा यो मन्दिर पर्ने हुनाले कह्लेहोलचोक भगवतीको देवल भन्ने नामले पनि प्रसिद्ध छ। तर प्रारम्भमा यो मन्दिर भगवतीको मन्दिर नभएर महीपतीन्द्र नारायणको मन्दिर थियो। यस देवलको यो अनौठो इतिहास यही देवलको छानाको किनारामा रहेको धातुको पातामा अंकित अभिलेखबाट ज्ञात हुन्छ। वि. सं. १८१३ को त्यस अभिलेखमा राजा जयप्रकाशले महीपतीन्द्रनारायणको देवलमा सुनको छाना हालेको कुरा लेखिएको छ[1]। प्रतापमल्लका कान्छा छोरा महीपतीन्द्रमल्लको संझनामा नारायणको प्रतिमा स्थापना गरिएको हुनाले यस मन्दिरको नाम महीपतीन्द्रनारायण भन्ने रहन गएको बुझिन्छ। राजा प्रतापमल्लले आफ्नो मृत्युपछि कान्छा छोरालाई राजगद्दीमा राख्ने बन्दोवस्त गरेर गएका थिए। तर भक्तपुर र पाटनका राजाहरू यस कुरामा सहमत थिएनन्। यसैले महीपतीन्द्रमल्ल राजा हुन पाएनन्। तर प्रतापका जीवित छोराहरूमा जेठा नृपेन्द्रको चाँडै मृत्यु भएको र माहिला पार्थिवेन्द्रमल्ल विषकाण्डमा परेका हुनाले पार्थिवेन्द्रका बालक छोरा भूपालेन्द्रमल्ललाई राजगद्दीमा राखी प्रधानमन्त्री लक्ष्मीनारायण जोशीले हैकम चलाउँदा सम्म पनि महीपतीन्द्रमल्ल जीवित थिए। यस कारण लक्ष्मीनारायण जोशीलाई आफ्नो शक्ति बढाउने काममा महीपतीन्द्रमल्ल र उनका समर्थकहरूबाट विघ्न पर्न आउने संभावना थियो। यसैले पार्थिवेन्द्रमल्ल मारिएको दुइ महीनापछि नै वि. सं. १७४४ भाद्रमा देउपाटनमा पशुपतिका पुजारी राघवानन्द स्वामीको घरमा बसेका महीपतीन्द्रमल्ललाई लक्ष्मीनारायणले आफ्ना मान्छे पठाई क्रूरतापूर्वक मार्न लगाए। यसरी महीपतीन्द्रमल्ल मारिंदा विधिपूर्वक अग्निसंस्कारसम्म पनि गर्न दिइएको थिएन। उनको मृत्यु भएको २५ वर्षपछि राजा भास्करमल्लको पालामा उनको जन्मपत्रिकाको अग्निसंस्कार गरिएको थियो[2]।

भास्करमल्लको मृत्युपछि काठमाडौंको राजगद्दीमा बस्ने उनका कोही छोरा भएनन्। यस कारण जगज्जयमल्ल काठमाडौंको राजगद्दीमा राखिए। राजगद्दीमा आफ्नो हक साबित गर्न उनले आफ्नो टकमा एकातिर महीपतीन्द्रमल्लको नामोल्लेख गरी राजकुमार महीपतीन्द्रसँग आफ्नो वंश सम्बन्ध देखाएका छन्। यस कारण यसै ताका महीतोपन्द्रमल्लको संझनामा नारायण स्थापना गरी यो मन्दिर बनेको अनुमान हुन्छ। जगज्जयमल्लका छोरा जयप्रकाशले महीपतीन्द्र नारायणको मन्दिरमा सुनको छाना हाल्ने काम पनि सोही सिलसिलामा भएको देखिन्छ।

१. परिशिष्ट, ६६ संख्याको अभिलेख

२. गौतमवज्र वज्राचार्य ,"ठ्यासफुको ऐतिहासिक व्याख्या" पूर्णिमा (वि. सं. २०२४ माघ) ४ वर्ष ४ अंक ३८०–३८२ पृ.

यस मन्दिरभित्र भगवतीको मूर्तिसँगै राजा प्रतापमल्ल र उनका रानी इन्द्रमती तथा अनन्तप्रियादेवीको संझनामा स्थापना गरिएका तान्त्रिक देवदेवीका सुवर्णप्रतिमा पनि त्यहाँ छन्। तर नारायणको कुनै प्रतिमा त्यहाँ देखिंदैन। यो रहस्यात्मक कुरोको उद्घाटन राजा जयप्रकाशको शासनकालमा लेखिएको एउटा ठ्यासफुले गरेको छ। उक्त ठ्यासफुमा वि. सं. १८२३ वैशाखमा महीपतीन्द्रनारायणको मूर्ति चोरहरूले चोरेर लगेको र त्यसको शान्तिस्वस्ति गरेको वर्णन दिइएको छ[2]। यसरी वि. सं. १८२३ को उठानदेखि यो मन्दिर नाउँमात्रको महीपतीन्द्र नारायणको मन्दिरको रूपमा रहेको थियो। मूलदेवताको मूर्ति चोरी भएर खाली भइरहेको यस मन्दिरमा पछि भगवतीको प्रतिमा स्थापना गरिएको हुनाले भगवतीको मन्दिर भन्ने नामले यो प्रसिद्ध हुन गएको देखिन्छ।

वंशावलीहरूमा यस भगवतीको सम्बन्धमा एउटा मनोरञ्जक कथा लेखिएको पाइन्छ। त्यस कथाअनुसार श्री ५ पृथ्वीनारायण शाहले वि. सं. १८२५ मा काठमाडौं उपत्यकामा हमला गर्दा आफैंले नुवाकोटदेखि खल्तीमा हालेर भगवतीको सो मूर्ति ल्याएका थिए। काठमाडौं विजय गरेको केही दिनपछि नै श्री ५ पृथ्वीनारायण शाहले त्यहाँको दरवारमा तीनछाने मन्दिर बनाई सो देवता स्थापना गरी प्रतिवर्ष काठमाडौंदेखि नुवाकोटसम्म भगवतीको खटजात्रा गर्ने रीति चलाई गुठी राखिदिए इत्यादि।

वि. सं. १८१३ भन्दा अघि नै मल्ल राजा जयप्रकाशको समयमै यो मन्दिर बनिसकेको हुनाले वंशावलीको यो भनाइ अतिरञ्जित देखिन्छ। तर ऐतिहासिक उपकरणहरूको आधारमा विचार गरी हेर्दा श्री ५ पृथ्वीनारायण शाहको समयमा यस मन्दिरमा भगवतीको स्थापना भएको कुरोचाहिं सत्य देखिन आएको छ। यस भगवतीको भण्डारमा रहेका भांडाकुँडामा प्रतापसिंहले वि. सं. १८२६ मा भगवतीलाई उक्त भाँडाकुँडा चढाएको कुरा लेखिएका छन्[3]। गोरखालीहरूले काठमाडौं जितेको एक वर्ष जति पछिको कुरो यो हो। यसरी काठमाडौंको अन्तिम राजा जयप्रकाशको समयमा वि. सं. १८२३ सम्म महीपतिनारायणको रूपमा प्रसिद्ध देवल गोरखालीहरूले काठमाडौं जितेको केही समयपछि नै भगवतीको मन्दिरको रूपमा बदलिएको देखिनाले श्री ५ पृथ्वीनारायण शाहको समयमा महीपतीन्द्रनारायणको अघिदेखिको मन्दिरमा भगवतीको प्रतिमा स्थापना भएको देखिन आउँछ। पृथ्वीनारायणले काठमाडौंको नुवाकोट भगवतीलाई गुठी राखि-

---

१. परिशिष्ट, ४१,४२ संख्याका अभिलेख

२. गौतमवज्र वज्राचार्य, "ऐतिहासिक घटनावलि" पूर्णिमा (वि. सं. २०२५ कार्तिक) १९५ पृ.; "सं. ८८६ वैशा शु ६ थ्वकुन्हु श्री ३ महीपतीन्द्र नारायणजुस्के खुयाश्रो यन, थ्वया शान्ति याङा देवपूजा वरी पूत तया ङान्हुकुन्हु वेनका होम याङा समुद्रकलश ग्व ४ मूर्ति चोया शिवशक्ति ताहाप्वनं तया मृत्तिका जोरण तीर्थलख गंगाजल दयकाश्रो प्रतिष्ठा कथनं शान्ति कथनं याङा दान तिलपात्र लुं ८१ रति। षत्तिशत्तत्त्वन सोधन याङा देवस्त।"

३. परिशिष्ट, ७५, ७६ संख्याका अभिलेख

दिएको कुरोसँग सम्बन्ध राख्ने वि. सं. १८५२ तिर लेखिएको कागत पाइएको छ[1] । त्यताबाट पनि यस कुराको पुष्टि हुन्छ ।

गद्दीबैठकको द्वारदेखि श्वैतभैरवको मन्दिरसम्म तेर्सिएर गएको नेपाली शैलीमा बनेको लामो गृहपंक्तिसँग जोडिएर भगवतीको यो मन्दिर रहेको छ । यस मन्दिरको भुइँतलामा मल्लकालमा बनेको कलापूर्ण होचो काष्ठद्वार छ । त्यस द्वारको माथिल्लो भागमा गरुडासन विष्णुको सानो मूर्ति कुँदिएको देखापर्छ । मल्लकालमा महीपतीन्द्रनारायणको मन्दिर पस्ने मूलद्वार त्यही नै थियो भन्ने देखिन्छ । तर आजभोलि त्यताबाट यस मन्दिरमाथि गईंदैन । बायाँतिर अग्लो पेटीमाथि रहेको अर्को सानो द्वारबाट यस मन्दिरभित्र पसिन्छ तथा त्यहींनिर माथि जाने ठाडो भरयाङ्ग भेटिन्छ । यस मन्दिरको पहिलो तहको छानामुनि विधिझ्याल बनेको छ । सोही विधिझ्याल भएको तलामा नुवाकोट भगवती र अरू देवताका मूर्ति विराजमान छन् । यस मन्दिरका माथिल्ला दुइ छाना सुनका छन् तथा गजूर पनि सुनैको छ । यो मन्दिर वि. सं. १८८८ तथा वि. सं. १९०४ मा जीर्णोद्धार गरिएको थियो । यो कुरो यस मन्दिरको दोस्रो छानाको किनारामा अंकित अभिलेखले बताउँछ ।

यस मन्दिरमा सुनका दुइ प्रतिमा र भगवतीको मूर्तिबाहेक इन्द्रजात्रामा प्रदर्शित गरिने भैरवको धातुनिर्मित मूर्ति पनि राखिएको छ । मन्दिरको बायाँतिर भरयाङ्गसँगै सानो बेदीमाथि सो मूर्ति विराजमान छ । इन्द्रजात्राको समय सो मूर्ति त्यहाँबाट झिकी माजुदेवलको मुनि दोबाटोमा राखेर प्रदर्शित गरिन्छ । कलाको दृष्टिले विक्रमको अठाह्रौं शताब्दीतिर सो धातुमूर्ति निर्माण गरिएको बुझिन्छ ।

इन्द्रजात्राको समयमा भगवतीको मन्दिरमुनि पनि देवदेवीका तीन मूर्ति प्रदर्शित गरिन्छन् । धातुका ती मूर्ति मूलचोकमा रहेको नुवाकोट भगवतीको भण्डारकोठाबाट झिकी सिंहढोकाको बाटो गरी ल्याइन्छन् । तिनमा एउटा मूर्तिको पादपीठमा अंकित अभिलेखबाट आनन्दभैरव आनन्दभैरवी तथा कुमारका मूर्ति ती हुन् भन्ने कुरा थाहा पाइन्छ । राजा भूपालेन्द्रको देहावसान भएको केही समयपछि उनकी रानी भुवनलक्ष्मीले वि. सं. १७५९ भाद्रमा आफ्ना लोग्ने, आफू र बालक छोरा भास्करमल्लको नाममा ती मूर्ति बनाउन लगाएका थिए । इन्द्रजात्राका दिन बाहिर सबैले देखिने ठाउँमा ल्याएर ती मूर्ति प्रदर्शित गर्ने कुरा पनि त्यहाँ लेखिएको छ[2] । शाहकालको एउटा पत्रमा पृथ्वीनारायण शाहले इन्द्रजात्राको दिन बाहिर प्रदर्शन गर्न लैजाँदा आफ्नै बाहुलीबाट पूजासामा संकल्प गरी ती मूर्तिलाई पूजा गरेको कुरो लेखिएको छ[3] ।

दसैं, चैतदसैं माघे संक्रान्ति आदि पर्व दिनमा भगवतीको विशेष पूजा हुन्छ तथा ज्येष्ठशुक्ल पूर्णिमामा वर्षवन्धन पूजा गरिन्छ । यसै गरी वैशाख कृष्ण चतुर्थीको दिन जात्रा गरी भग-

१. यसको उद्धरण 'मूलचोक' शीर्षकअन्तर्गत टिप्पणीमा गरिएको छ ।
२. परिशिष्ट, ५० संख्याको अभिलेख
३. त्यस पत्रको उद्धरण 'मूलचोक' शीर्षकअन्तर्गत टिप्पणीमा गरिएको छ ।

वतीलाई नुवाकोट लैजाने र वैशाख कृष्ण द्वादशीको दिन फर्काएर ल्याउने रीतिथिति प्रतिवर्ष चल्दैआएको छ। यो चलन श्री ५ पृथ्वीनारायण शाहले नै चलाएको भनिन्छ। शाह राजाहरूको नुवाकोट भगवतीप्रति विशेष श्रद्धा रहेको हुनाले शाहकालमा यस देवताको विशेष संमान थियो भन्ने देखिन्छ।

## ठूलो घण्टा

शिवपार्वतीको मन्दिर नगीचै पछिल्तिर ठूलो घण्टा रहेको छ। श्री ५ रणबहादुर शाहले यो घण्टा बनाउन लगाएका हुन्। यस घण्टाको विशाल रूप आश्चर्यलाग्दो छ।

दुइ तला जति अग्लो वेदीमा दुइटा पत्थरको स्तम्भ गाडी त्यसमाथि अर्को प्रस्तरस्तम्भ तेर्स्याई यो घण्टा झुण्ड्याइएको छ। घण्टाको गुरुत्व विचार गरी हेर्दा घण्टाको दायाँ बायाँ रहेका ती दुइ स्तम्भ वेदीभित्र मात्र सीमित नरही तल भुइँसम्मै पुगेको अनुमान हुन्छ। घण्टामाथि धातुको सुन्दर छाना र गजूर हालिएका छन्। यस घण्टाले दरवारको शोभा निकै बढाएको छ।

यस घण्टाको किनारामा चारैतिर अभिलेख अङ्कित गरिएको छ। सो अभिलेखअनुसार वि. सं. १८५४ आषाढमा देवीलाई प्रसन्न पार्न श्री ५ रणबहादुर शाहले यो घण्टा चढाएका थिए।[1] यसैताका लेखिएको त्रिरत्नसौन्दर्यगाथा नामक ग्रन्थमा पनि रणबहादुर शाहले यो घण्टा बनाउन लगाएको वर्णन लेखिएको छ। भूत प्रेत पिशाच डाकडाकिनीहरूलाई भगाउन रणबहादुर शाहले यो घण्टा स्थापना गरे भन्ने भावको कुरा त्यहाँ परेको छ[2]।

रणबहादुर शाहले बनाएको यो घण्टाबाहेक भक्तपुर र ललितपुरमा पनि मल्ल दरवारको प्राङ्गणमा ठूलठूला घण्टा देखापर्छन्। आफ्नो दरवारअगाडि ठूलठूला घण्टा बनाउने प्रतिस्पर्धा मल्लकालदेखिनै चलेर आएको देखिन्छ। भक्तपुर दरवारको सुवर्णद्वारको अगाडि रहेको ठूलो घण्टा रणजित्मल्लले वि. सं. १७९३ पौषमा बनाउन लगाएका थिए[3]। पाटन दरवारअगाडिको ठूलो घण्टाचाहिं राजा विष्णुमल्लले वि. सं. १७९३ माघमा स्थापना गरेका थिए[4]। श्री ५

१. परिशिष्ट, ७८ संख्याको अभिलेख

२. वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा" १४७ पृ.; "... श्री ५ रणबहादुर शाहदेवबाट श्रीइष्टदेवता प्रीति गरि ठूलो घण्टा अर्पण गर्दा भया. कस्तो घण्टा भन्या आकाशगंगाका तरंग जस्तो सपेत तेज भयाको कैलास पर्वतका शिखरसमान ठुलो भयाको गति नपाई मर्‍याका जंतु वायु भयाकालाई भूत भन्नु भैरव भैरवीले आसन गर्‍याकालाई प्रेत भन्नु मसानमा बसी अभक्ष्य भक्ष्य सबै थोक षान्यालाई पिशाच भन्नु पाक्यालाई डाक भन्नु एस्ता २ अत्युग्र भयंकर भूत प्रेत पिशाच डाकडाकिनीकन त्रास दिन्या सोरले दिव्य ध्वनि भयाको पारो आदि अष्टधातुले पूर्ण धार्‍याको ॥"

३. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" १९४–१९५ पृ.

४. सोही, १९५ पृ.

रणबहादुर शाहलाई ती दुइ ठूला घण्टाभन्दा निकै ठूलो घण्टा स्थापना गर्ने इच्छा भयो र यो विशालकाय घण्टाको निर्माण गरिएको थियो। नेपालमा नेपाली कलाकारहरूले बनाएको यो ठूलो घण्टाले नेपाली धातुकलाको गौरव बढाएको छ। देगुतलेजुको पूजा गर्दा यो घण्टा बजाइन्छ।

## श्वेतभैरव

देगुतलेजुको मुनि श्वेतभैरवको विशाल प्रतिमा विद्यमान छ। ठूलो आँखिझ्यालभित्र रहेको यो प्रतिमा वर्षको एक पल्ट इन्द्रजात्रामा खुलाएर राखिन्छ। यो मूर्ति श्री ५ रणबहादुर शाहले वि. सं. १८५२ भाद्रमा स्थापना गरेका थिए। यो कुरो यस मूर्तिको गलानेर स्वर्णपट्टमा कुँदिएको अभिलेखबाट बुझिन्छ[1]। सुन्दरानन्द बाँडाले लेखेको त्रिरत्नसौन्दर्यगाथामा पनि यस कुराको वर्णन गरिएको छ। सो वर्णनअनुसार श्री ५ रणबहादुरले इन्द्रजात्राको शोभा बढाउन र डाकिनी पिशाचिनी आदिहरूलाई भगाउन सुनको यो मूर्ति बनाउन लगाएका थिए[2]। यस मूर्तिलाई शरभमुख भैरव भन्ने संज्ञा त्यहाँ दिइएको छ। शरभ सिंहभन्दा पनि बढी शक्तिशाली मानिने माथितिर पनि खुट्टा भएको हिंस्रक जन्तुको नाम हो। उत्तर भारतका सम्राट् हर्षका दरवारिया कवि वाणले यस जन्तुको वर्णन गरेका छन्। आजभोलि यस जन्तुको लोप भइसकेको छ। वाणकै पालामा यो जन्तु दुर्लभ भइसकेको थियो। तात्कालिक आम्दानी खर्च टिपिएको एउटा कागतमा यो भैरव मूर्ति बनाउन सुन किन्दा त्यस वेला चार हजार रूपैयाँ लागेको कुरो लेखिएको छ[3]।

भैरव शिवको संहारक रूप हो। यसैले भैरवको मूर्ति बनाउँदा ठूलठूला भयानक आँखा, ठाडाठाडा केश, धारिला दाह्रा आदिको चित्रण गरिन्छ। हाम्रो यहाँ भैरवको ठूलो प्रसिद्धि छ। प्रायः शिवजीको मन्दिरको दक्षिणतिर उन्मत्त भैरवको विशाल मूर्ति बनाई स्थापना गर्ने चलन छ। पशुपति, पाटनको कुम्भेश्वर तथा पनौतिको इन्द्रेश्वरको मन्दिरनिर रहेका उन्मत्त भैरवका मूर्तिहरूबाट यो कुरो ज्ञात हुन्छ। उन्मत्त भैरवका मूर्ति बनाउँदा कामोन्मत्त भैरवको खुट्टादेखि शिरसम्म संपूर्ण अवयव प्रदर्शित गरिन्छ। परन्तु इन्द्रजात्रामा देखाइने भैरवको मूर्तिचाहिँ घाँटीदेखिको शिरोभाग मात्र हुन्छ। इन्द्रजात्रामा बाटाबाटामा काठ माटो इत्यादिबाट बनेका यस्ता भैरवका मूर्ति प्रशस्त मात्रामा देख्न पाइन्छन्। ती मूर्तिका पछाडि जाँड राख्ने माटोको घ्याम्पा

---

१. परिशिष्ट, ७७ संख्याको अभिलेख

२. वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा" १४८ पृ.; "...श्रीरणबहादुर साहबाट स्वाराट्तुष्टचै भन्नु इंद्रयात्राको शोभा बढाउननिमित्त मत्स्य मांस मदिरा मुद्रा मैथुन मकार पंचका आलो रगत षान्या भयंकर रूप पनि नहुन्या सौम्य रूप पनि नहुन्या एस्ता मध्यम रूपका सुवर्णका शरभमुखनामा भैरवका निर्माण गर्दा भया. आफ्ना अमल्विषेका मज्जा मेद बोसो रगत आंद्रा मासु इत्यादि षान्या प्राणीका जीउमा दुःख दिन्या डाकिनी शाकिनी भूतिनी पिशाचीहरूका मुक्ति गर्नानिमित्त योगमूर्ति भयाका शरभमुख भैरव स्थापित गर्दा भया।"

३. सोही, १४८ पृ.को टिप्पणी.

राखिन्छन् र बाँसको सानो नली जोडी भैरवको मुखबाट जाँड निकालिन्छ। रोगव्याधि तथा विघ्न वाधा हटाउन प्रसादको रूपमा सो ग्रहण गरिन्छ। इन्द्रजात्रामा देखाइने यस किसिमका भैरवहरूमा इन्द्रचोकमा रहेको आकाशभैरव र हनूमान्ढोकाको यो श्वेतभैरव प्रसिद्ध छन्। रणबहादुरले स्थापना गरेको धातुनिर्मित श्वेतभैरवको यो मूर्ति इन्द्रजात्रामा देखाइने अरू सबै भैरवमूर्तिभन्दा विशाल र भयंकर छ। सर्पको मालामा मुण्ड र खप्पर जडी बनाइएको अलंकारले विभूषित निधार, अग्निज्वाला जस्ता आँखिभुइ, क्रोधविस्फारित तीन नेत्र देख्दैमा सातो लिने खालका छन्।

यस देवताका पूजारीहरू वज्राचार्यहरू छन्। तान्त्रिक विधिअनुसार यसको पूजा हुन्छ।

## प्रस्तरको विष्णुमन्दिर

ठूलो घण्टानजीकै उत्तरपट्टि अनौठो किसिमको एउटा मन्दिर छ। ढुङ्गै ढुङ्गाले बनेको त्यस मन्दिरको केही भाग व्यक्तिगत बगैंचाभित्र, केही भाग सडकतिर परेको छ। यसमा प्रस्तर स्तम्भ हाली प्रदक्षिणापथ बनाइएको छ तापनि बगैंचाको पर्खालले छेकेका हुनाले प्रदक्षिणा गर्न चाहिं सकिंदैन। प्रदक्षिणापथको माथि कौसी छ। त्यस कौसीमाथि गुम्वज शैलीको ढुङ्गे मन्दिर उठाइएको छ। माथि कौसीमा र तल भुईंतलामा पनि विष्णुको मूर्ति स्थापना गरिएका छन्।

वि.सं. १९९० सालको भूकम्पभन्दा पहिले खिचिएको एक तस्वीरमा यस मन्दिरको पूर्वरूप देखापरेको छ। आजभोलि यस मन्दिरको रूप निकै भद्दा देखिन्छ तापनि उहिले यो एक सुन्दर देवल थियो। पाटन मंगलबजारको कृष्णमन्दिर जस्तै शिखरशैलीमा यसको निर्माण भएको थियो। आजभोलि कौसी बनेको ठाउँमा उस वेला लहरै सानसाना शाखामन्दिर बनेका थिए। शाखामन्दिरहरूको बीचमा सुलत्त परेको अग्लो मूल देवल निर्माण गरिएको थियो। भूकम्पपछि भएको पुनर्निर्माणले मात्र यस मन्दिरको रूप विकृत भएको देखिन्छ।

यस मन्दिरमा कुनै अभिलेख प्राप्त भएको छैन। कुनै ऐतिहासिक सामग्रीमा पनि यसको उल्लेख देखिएको छैन। यस कारण यसको इतिहासदेखि हामी अपरिचित छौं।

## सरस्वतीमन्दिर

माथि वर्णित विष्णुमन्दिरसँगै उत्तरपट्टि कृष्णदेवलको मुनि सरस्वतीको एकछाने सानो मन्दिर छ। अग्ला पेटीमाथि रहेको यो देवल पनि व्यक्तिगत बगैंचाको पर्खालसँग जोडिएको हुनाले प्रदक्षिणा गर्न नसकिने अवस्थामा रहन गएको छ। यस मन्दिरको प्रदक्षिणापथमा प्रयोग गरिएका काठका स्तम्भ र तिनका अगल बगलमा रहेका काठका अरू अवयवहरू पनि कलापूर्ण छन्। कुमारीजात्राको दिन यस मन्दिरमा मैनका विभिन्न फूल बनाई प्रदर्शन गरिन्छ। यसैले यो मन्दिर 'सीस्वाँ ब्वैगु देगः' अर्थात् मैनका फूल देखाइने देवल भन्ने नामले पनि प्रसिद्ध हुन गएको छ। यस मन्दिरभित्र सरस्वतीको सानो मूर्ति विराजमान छ।

वि. सं १८८५ टिपिएको विशेष गरेर हनूमान्ढोका र त्यसको वरिपरि रहेका देवल-हरूको नापोसम्बन्धी टिपोटमा सरस्वतीमन्दिरको उल्लेख आएको छ। यो त्यही सरस्वतीमन्दिर हो भन्ने देखिन्छ। त्यस टिपोटअनुसार सो सरस्वतीमन्दिर ३५ हात ६ अंगुल अग्लो थियो[1]। परन्तु आजभोलिको यो सरस्वतीमन्दिर भने १५ हात जति भन्दा बढी अग्लो छैन। यस कारण वि. सं. १८९० तथा १९९० सालका दुइ महाभूकम्पले यस मन्दिरको रूप निकै बदलिएको अनुमान हुन्छ।

## कृष्णमन्दिर

देगुतलेजुको पश्चिमोत्तर कुनामा नजीकै सडकपारि ठूलो घण्टासँगै कृष्णमन्दिर रहेको छ। राजा प्रतापमल्लले वि. सं. १७०५ मा यो मन्दिर बनाउन लाएका हुन्[2]। आठकुने यो मन्दिर वास्तुकलाको दृष्टिले विशेष महत्त्व राखदछ।

प्रतापमल्लको प्रारम्भिक राज्यकालमा पाटनमा सिद्धिनृसिंहको शासन चलेको थियो। नाताको दृष्टिले सिद्धिनृसिंह प्रतापमल्लका काका थिए तापनि परस्परमा यी दुइ राजाको मेल थिएन। सिद्धिनृसिंह एक धर्मात्मा राजा थिए। उनका धार्मिक गतिविधिदेखि दुनियाँ प्रभावित थिए। मानिसहरू उनलाई श्रद्धाको दृष्टिले हेर्दथे। यो कुरा देखी प्रतापमल्ल र उनका भारादार-हरू भित्रभित्रै जलेका थिए। वि. सं. १६९३ मा राजा सिद्धिनृसिंहले पाटनमा धूमधामसँग कोटिहोम गरी आफ्नो दरवारअगाडि कृष्णमन्दिर स्थापना गरेका थिए। पाटनका राजा कोटिहोमको काममा लागिरहेको अवसर पारी राजा प्रतापमल्लले पाटनमा हमला गरेका थिए। परन्तु केही कोट हात लाउनु सिवाय अरू विशेष फाइदा राजा प्रतापमल्ललाई भएन। बरु अर्काले गरेको धार्मिक काम बिगार्न खोजेकोमा उनको केही बदनामी मात्र भयो[3]। यसैको प्रतिक्रियास्वरूप राजा सिद्धिनृसिंहले जस्तै आफ्नो दरवारको प्राङ्गणमा राजा प्रतापमल्लले कृष्णमन्दिर बनाएको देखिन्छ।

राजा प्रतापमल्लका धेरै रानी थिए। विहारकी राजकुमारी रूपमती र कर्णाटदेशकी राजमतीसंग पनि उनले विवाहसम्बन्ध जोडेका थिए। यस विवाहसम्बन्धमा राजा प्रतापमल्ललाई ठूलो गर्व थियो। उनले अनेक अभिलेखमा त्यो कुरो व्यक्त गरेका छन्। परन्तु वि. सं. १७०५ भन्दा अघि नै ती दुवै पत्नीको मृत्यु भइसकेको थियो। यस वेला प्रतापमल्ल २६ वर्ष मात्रका थिए। यसरी जवानीमै आफ्ना ती दुइ रानीहरूको असामयिक मृत्युले राजा प्रतापमल्ललाई मनमा ठूलो चोट लागेको थियो। कृष्णमन्दिरमा रहेको उनको अभिलेखमा उनै दुइ रानीको संझनामा उनले सो मन्दिर निर्माण गराएको कुरा लेखिएको छ। उक्त अभिलेखअनुसार मन्दिरभित्र उनले

---

१. परिशिष्ट, मन्दिर र चोकहरूको नापोसम्बन्धी पुरानो कागतपत्र (पहिलो)

२. परिशिष्ट, १६ संख्याको अभिलेख

३. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" ६३–६४ पृ.

स्थापना गरेका तीन मूर्तिमध्ये बीचको कृष्णको मूर्ति आफ्नै प्रतिकृतिको रूपमा र दायाँ बायाँ रहेका रुक्मिणी र सत्यभामाको मूर्तिचाहिं तिनै दुइ रानीको सालिकस्वरूप बनाउन लगाएका थिए। यी दुइ रानीसँग जन्मजन्मान्तरसम्म पनि विछोड नहोस् भन्ने इच्छाले उनले यसो गरेका थिए[1]। हाम्रो यता आफ्नो प्रतिकृतिको रूपमा देवताको मूर्ति बनाउने चलन दुर्लभ छ। राजा प्रतापमल्लले स्थापना गरेको कृष्णको यो मूर्तिबाहेक अर्को यसको उदाहरण दुइटै मात्र देखापरेका छन्। तिनमा पहिलो लिच्छविकालका शक्तिशाली राजा विष्णुगुप्तले आफ्नो रूपसँग मिल्ने गरी बनाएको पशुपति वाग्मतीपारि रहेको रामचन्द्र भनी प्रसिद्ध विष्णुको विशाल मूर्ति[2], दोस्रोचाहिं भक्तपुर त्रिपुरसुन्दरीको अभिलेखमा उल्लिखित राजा यक्षमल्लले वि. सं. १५२४ मा आफ्ना दिवंगत छोरा राजमल्लदेवको संझनामा उनकै सालिकको रूपमा बनाएको हृषिकेशको मूर्ति[3]। यसरी नेपालको मूर्तिकलाको इतिहासमा कृष्णमन्दिरभित्र रहेका मूर्ति विशेष महत्त्वपूर्ण छन्। विष्णुको मूर्ति बनाउँदा त्यसको अगाडि भक्त गरुडको रूपमा आफ्नो सालिक बनाउने परम्पराचाहिं यहाँ खूप चलेको छ।

राजा सिद्धिनृसिंहले बनाएको पाटनको कृष्णमन्दिर शिखरशैलीमा बनेको छ। राजा प्रतापमल्लको यो कृष्णमन्दिरचाहिं नेपालको आफ्नो शैलीमा बनाइएको छ। यस मन्दिरमा झिंगटीका तीन छाना छन्। अरू साधारण नेपाली मन्दिर जस्तै चारकुने आकारमा यसको निर्माण गरिएको छैन। यो मन्दिर आठकुना परेको छ। यसैले नेवारीमा यसलाई च्यासिङ देवल पनि भन्दछन्। टाढाबाट झट्ट हेर्दा यो मन्दिर गोलाकार देखिन्छ।

पाँच तह पेटी बनाई त्यसमाथि मन्दिर उठाइएको छ। मन्दिरको द्वार पूर्वतिर फर्केको छ। द्वारको सामुन्ने तह तह परेको पेटीलाई काटेर मन्दिरको द्वारसम्म जाने सिंढी बनाइएको छ। सिंढीको सामुन्ने दायाँ बायाँ दुइटा शिलास्तम्भ उभ्याइएका छन्। एउटा स्तम्भमाथि तान्त्रिक विचारको आधारमा बनाइएको हनूमान्को मूर्ति स्थापना गरिएको छ। परन्तु त्यससँगैको अर्को स्तम्भमाथिको मूर्ति लुप्त भइसकेको छ।

आठकुने छानालाई सुहाउने गरी मन्दिरको मूलभित्ता पनि आठकुने पारी बनाइएको छ। मन्दिरको भुइँतलामा चारैतिर काठका स्तम्भ गाडी मूल गारो र सो स्तम्भपंक्तिमाथि टम्म दलिन हाली दोस्रो तलाको भार अडचाइएको छ। सोही मूल गारो र स्तम्भपंक्तिको बीच बीचबाट प्रदक्षिणापथ बनेको छ तापनि मन्दिरको पछाडि कुनै गृहस्थीको बगैंचामा बार लगाएको पर्खाल-सँग प्रदक्षिणापथ जोडिएको हुनाले मन्दिरको शोभा घट्न गएको छ। यस मन्दिरमा प्रयोग

१. परिशिष्ट, १६ संख्याको अभिलेख
२. श्लसर, वज्राचार्य, "सम् नेपालीज् स्टोन स्कल्पचर्स..." आर्टिबस् एशिया ३५ वर्ष १–२ अंक १२७–१३१ पृ.
३. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" १३१ पृ.

भएका कति टुँडाल सर्पाकारका छन् । पछि राखिएका कति टुँडालचाहिँ साधारण किसिमका छन् । यस मन्दिरमा धेरै कुना हुनाले छाना राम्रोसँग अडाउन अरू मन्दिरमा भन्दा बढी टुँडाल र दलिनको प्रयोग भएको देखिन्छ । मन्दिरको भित्तामा रातो रंग पोतिएको छ । मन्दिरभित्र पस्ने मूलद्वारको दायाँपट्टि राजा प्रतापमल्लको शिलालेख भित्तामा अडचाइएको छ । लौहलेप गरिएको सो शिलालेखले मल्लकालको प्रस्तरकलाको परिचय दिन्छ । त्यस शिलालेखमा राजा प्रतापमल्लले आफ्ना दुइ रानी रूपमती तथा राजमतीको वंशावली सगर्व लेखाएका छन् । आफूले जितेका विभिन्न देश र युद्धको वर्णन पनि त्यहाँ गरिएको छ । यसरी ऐतिहासिक दृष्टिकोणले पनि सो अभिलेख महत्त्वपूर्ण मानिएको छ । यस अभिलेखको माथिल्लो भाग संस्कृतमा र तल्लो भाग नेवारी भाषामा लेखिएको छ । आफ्ना दुइ रानी रुक्मिणी र सत्यभामाको रूपमा मूर्ति स्थापना गरेको कुरा दुइटै भाषामा लेखिएको छ तापनि कृष्णको रूपमा आफूलाई त्यहाँ प्रस्तुत गरेको कुराचाहिँ संस्कृत भाषामा मात्र लेखिएको छ ।

तेस्रो तलामा चीर आकारको सानसाना झ्याल दर्शनीय छन् ।

## ठूला नगरा

कृष्णमन्दिरको मुनि बायाँपट्टि पाटी जस्तो घरमा दुइटा ठूलठूला नगरा राखिएका छन् । देगुतलेजुलाई पूजा गर्दा ठूलो घण्टा सँगसँगै यो नगरा बजाइन्छन् । श्री ५ गीर्वाणयुद्धविक्रमको राज्यकालमा वि. सं. १८६४ श्रावणमा यो नगरा बनाइएका थिए । यो कुरा सो नगरा बजाउने नगार्चिसँग रहेको तामापत्रबाट बुझिन्छ[1] । त्यस तामापत्रमा बडा दसैं र चैत दसैंमा नगरालाई पूजा गरी रांगो र बोका बलि दिने कुरा लेखिएका छन् तथा सो नगरा बजाउने नगार्चिलाई जीवनवृत्तिको लागि चार किल्ला छुटचाइदिएको जग्गाको व्यहोरा दिइएको छ ।

यस्ता ठूलठूला नगरा भक्तपुर दरवारमा सुनढोकाको दायाँपट्टि दलानमा पनि राखिएका छन् । तलेजुभवानीलाई प्रसन्न पार्न वि. सं. १७४७ कार्तिकमा राजा जयजितामित्रमल्लले र वि. सं. १७८४ वैशाखमा रणजित्मल्लले ती नगरा बनाउन लगाएका थिए[2] । तिनमा अङ्कित अभिलेखको आधारमा यो कुरो ज्ञात हुन्छ ।

## जगन्नाथको मन्दिर

कृष्णमन्दिरको सामुन्ने पूर्वपट्टि जगन्नाथको ठूलो मन्दिर छ । यस मन्दिरको पूर्वी द्वारनिर

---

१. परिशिष्ट, ८३ संख्याको अभिलेख

२. उक्त नगरामा यस्तो लेखिएको छ– "श्रीश्रीसुमतिजयजितामित्रमल्लदेवसन दयका थ्व नगारा ॥ सम्वत् ८११ कार्तिकशुदि वुधवार थ्वकुन्हु ॥ शुभं ॥ श्रीश्रीश्रीतलेजुस्के श्रीश्रीजयरणजिन्मल्लदेवसन दुंता सं. ८४७ चैत्र कृष्ण अमावास्यां ॥"

भित्रपट्टि भित्तामा जगन्नाथ (कृष्ण) सुभद्रा र बलरामको मूर्ति रहेका छन्। यसैले यस मन्दिरको नाम जगन्नाथ देवल भन्ने रहन गएको छ। परन्तु यस मन्दिरको मध्य भागमा चतुर्मूर्ति विष्णुको प्रस्तरनिर्मित प्रतिमा स्थापना गरिएको छ। त्यस प्रतिमाको पादपीठमा अङ्कित हाल पाइएको अभिलेखबाट राजा महेन्द्रमल्लले वि. सं. १६१६ माघमा सो देवप्रतिमा स्थापना गरेका थिए भन्ने पत्ता लागेको छ[1]। हनूमान्ढोकामा अहिलेसम्म पाइएका मल्ल राजाहरूका सबै अभिलेखमध्ये पुरानो अभिलेखको रूपमा यो देखिएको छ।

त्यस अभिलेखमा जगन्नाथदेवताको कुनै चर्चा गरिएको छैन। यस कारण यस मन्दिरमा जगन्नाथको मूर्ति यसभन्दा पछिमात्र स्थापना गरिएको अनुमान हुन्छ। देवमाला वंशावलीअनुसार राजा प्रतापमल्लले जगन्नाथको स्थापना गरेका थिए तथा जगन्नाथको यो मन्दिर पनि तिनै राजाले बनाएका थिए[2]। तर यस मन्दिरको पूर्वपट्टिको द्वारमा लक्ष्मीनरसिंहको वि. सं. १६८६ को ताम्रपत्र टाँगिएको छ[3]। यताबाट प्रतापमल्ल (१६९८–१७३१) को समयभन्दा अघि नै यो मन्दिर बनिसकेको थियो भन्ने प्रमाणित हुन्छ। यस कारण राजा महेन्द्रमल्लले वि. सं. १६१६ मा चतुर्मूर्ति विष्णुप्रतिमा स्थापना गरी बनाएर गएको मन्दिरको एक भागमा राजा प्रतापमल्लले पछिमात्र जगन्नाथको मूर्ति स्थापना गरेका थिए भन्ने बुझिन्छ।

वासुदेव, संकर्षण, प्रद्युम्न, अनिरुद्ध यी चार देवताको संयुक्त मूर्तिलाई चर्तुमूर्ति विष्णु भन्ने चलन छ। यस किसिमको एउटा प्राचीन मूर्ति नारायणहिटीको नारायणमन्दिरभित्र रहेको छ[4]। त्यसैको अनुकरणमा जगन्नाथदेवलमा रहेको चतुर्मूर्ति विष्णुको प्रतिमा बनेको देखिन्छ। विक्रमको सत्रौं शताब्दीको उठानमा बनेको यो मूर्ति कलाको दृष्टिले त्यति उत्कृष्ट छैन तापनि यसताका बनेका अभिलेखयुक्त यस्ता देवमूर्ति दुर्लभ हुनाले नेपाली मूर्तिकलाको इतिहासमा विशेष महत्त्व राख्दछ।

जगन्नाथको प्रसिद्ध मन्दिर भारतको उडीसाप्रदेशअन्तर्गत पुरी नामक स्थानमा रहेको छ। राजा प्रतापमल्लले नेपालमै बसी जगन्नाथको दर्शन गर्न पाइयोस् भन्ने भावनाले आफ्नो दरवारअगाडि रहेको मन्दिरमा जगन्नाथको मूर्ति स्थापना गरेको देखिन्छ। भारतको जगन्नाथको मन्दिरमा रहेको जगन्नाथ (कृष्ण) बलराम र सुभद्राका मूर्ति काठका छन्। बाह्र बाह्र वर्षमा

---

१. परिशिष्ट, ७ संख्याको अभिलेख

२. योगी देवीनाथ, "देवमाला वंशावली" (काठमाडौं, ज. सूरशम्शेर ज.व.रा. वि. सं. २०१३) १०० पृ.

३. परिशिष्ट, १० संख्याको अभिलेख

४. म्यारी श्लसर, गौतमवज्र वज्राचार्य, "अर्लि नेपालीज् स्कल्प्चर्स्" दि इलुस्ट्रेटेड लण्डन न्यूज् २६० वर्ष ६८९३ अंक (ई. सं. १९७२ डिसेम्बर) ७३ पृ.

ती काठका मूर्ति फेरिन्छन् र भूमिभित्र विधानपूर्वक गाडिन्छन्[1] । तर हाम्रो यहाँ यसरी मूर्ति फेर्ने र गाड्ने चलन छैन । यहाँका ती मूर्ति बाक्लो रंग लाएर बनाइएका हुनाले काठका हुन् वा माटाका हुन् छुट्याउन सकिंदैन ।

जगन्नाथको यस मन्दिरमा तीन फराकिला पेटी छन् । पश्चिमपट्टिको तल्लो पेटी प्रताप-मल्लको स्तम्भ रहेको डबलीसँग जोडिएर बनेको छ । पूर्वपट्टिको पेटीको शिलामा राजा प्रताप-मल्लको विस्तृत शिलालेख रहेको छ । त्यस अभिलेखमा उनले आफ्नो इष्टदेवता तलेजुभवानीको स्तुति लेखाएका छन् । अभिलेख कुँदिएका ती शिला प्रारम्भमा जलद्रोणीको रूपमा दरवारको प्राङ्गणमा राखिएका थिए भन्ने देखिन्छ । जलद्रोणीबाट पानी निस्कने प्वाल ती शिलामा अद्यापि देखापर्छन् ।

दुइ छाने यस मन्दिरको तल्लो तलामा चारैपट्टि लहरै तीन तीन ढोका छन् । परन्तु ती तीनमुखे ढोकामा बीचको ढोका मात्र काठको खापा हाली खोल्नु हुने गरी बनाइएका छन् । अरू दुइ ढोका वज्र लगाएर टालिएका छन् । बीचमा रहेका ढोकाको खापामा महादेवको चिह्न स्वरूप तीन आँखा र त्रिशूल लेखिएका छन् । टालिएका ढोकामा चाहिं हरेकमा एक एकवटा सानसाना तीनकुने विवर बनाइएका छन् । त्यसमुनि पूर्णकलश लेखिएका छन् । तीनकुने विवर र पूर्णकलश शाक्तसंप्रदायका देवीहरूको प्रतीक मानिन्छ । चतुर्मूर्ति विष्णु, जगन्नाथ आदि देवता स्थापना गरिएको वैष्णवसंप्रदायको मन्दिरमा शाक्तसंप्रदायसँग सम्बन्ध राख्ने यी चिह्न बनाइनुमा विशेष हेतु केही देखिंदैन ।

बाहिरी गारो र भित्री गारो गरी दुइ तह गारो हाली यस मन्दिरको निर्माण गरिएको छ । यस्ता मन्दिरलाई हाम्रो यहाँ तदेवल भन्ने चलन छ । पशुपति चाँगुनारायण आदि केही मन्दिरमा मात्र यस्ता दोहरा गारोको प्रयोग पाइन्छ । आंशिक रूपमा यो कुरा धार्मिक भावनासँग सम्बन्ध राख्दछ । कुनै मन्दिरमा भक्तजनहरू आफै गई देवताको पूजा गर्न सक्दछन्, कुनै मन्दिरमा भने पूजारीको माध्यमबाट देवताको पूजा हुन्छ । भक्तजनहरू आफै गई पूजा गर्न हुने देवताको मन्दिरमा प्रायः दुइ तह गारा बनेका हुँदैनन् । पूजारीको माध्यमद्वारा पूजा हुने ठाउँमा मात्र अक्सर दोहरो गारो हाली मन्दिर बनाइएका हुन्छन् । भित्री तहको गारोले घेरेको ठाउँ गर्भगृह भनिन्छ । गर्भ-गृहमा मन्दिरको मुख्य देवता रहेको हुन्छ । त्यहाँ पूजारीहरू मात्र जान पाउँछन् । भित्री तहको गारो र बाहिरी गारोको बीचमा रहेको अन्तरालसम्म मात्र भक्तजमहरू जान सक्तछन् । जगन्नाथको यस मन्दिरमा पनि भित्री भागसम्म पूजारी मात्र जान पाउँछन् । यही धार्मिक भावना-लाई ध्यानमा राखी यस मन्दिरमा दोहरो गारोको व्यवस्था गरिएको देखिन्छ ।

यस मन्दिरको हरेक टुँडालमा विभिन्न देवदेवीहरूका मूर्ति कुँदिएका छन् । टुँडालको

---

१. जितेन्द्रनाथ बनर्जी, "दि देभ्लोप्मेण्ट अफ् हिन्दु आइकनोग्राफी" (डिल्ली मुन्सीराम मनो-हरलाल पब्लिशर्स् प्राइभेट लिमिटेड् ई, सं, १९७४ तेस्रो संस्करण) २११–२१२ पृ.

मुनितिरको भागमा विभिन्न आसनमा रहेका स्त्री-पुरुषहरूको रतिलीला प्रदर्शन गरिएको छ, जसको लागि यो मन्दिर प्रख्यात छ । वैष्णव र शैवसंप्रदायका देवता तथा तान्त्रिक देवताको मन्दिरमा प्रायः यस्ता रतिलीलासम्बन्धी काष्ठकला देखाइएका हुन्छन् । मन्दिरमा बज्र नपरोस् तथा भूतप्रेत आदिले दुःख नदेउन् भन्ने भावनाले ती बनाइएका हुन् भन्ने अनुश्रुति छ । तर काम भावनासँग पनि यसको सम्बन्ध नभएको होइन । यस मन्दिरको पूर्वी भागको दोस्रो तलाको एउटा टुँडालमा दुइ गोपिनीहरूसँग साधारण भावभङ्गिमामा रहेका कृष्णको मूर्तिले यस विषयमा केही कुरा बुझ्न सहायता पाइन्छ ।

प्रायः हाम्रो यहाँ साहित्य कला आदिसंग सम्बन्ध राख्ने जुनसुकै कुरा पनि धार्मिक भावनामा आधारित हुन्छन् । देवताको कथाको आधारमा काव्य बनाइन्छन् तथा देवताको चित्र मूर्ति आदि बनाएर कलाको स्वाद लिइन्छ । धार्मिक भावनासँग सम्बन्ध नभएका चित्र अथवा मूर्ति अति दुर्लभ छन् । राजा तथा प्रजाको सालिकसम्म पनि देवदेवीको अगाडि भक्तजनको रूपमा राख्ने चलन छ ।

कृष्णको जीवन गोपिनीहरूको रासलीला, चीरहरण आदि शृङ्गार प्रधान घटनासँग सम्बद्ध छन् । यस कारण उनको जीवनचरित्रलाई लिई साहित्यमा शृङ्गाररसका कुरा यथेष्ट मात्रामा लेखिन्छ, चित्रकला र मूर्तिकलामा कृष्ण र गोपिनीको रूपमा युवक युवतीको शृङ्गार-प्रदर्शन दुरूस्त उतारिन्छन् । धार्मिक भावनासँग अनुकूल कुरो यो छ । राणाहरूको समयमा अभिनेता अभिनेत्रीहरूको शृङ्गार प्रधान चित्र बजारमा बेच्न पाइँदैनथ्यो । परन्तु कृष्ण र राधाको प्रेमप्रदर्शनको रूपमा बनाइएका युवक युवतीका भड्किला चित्र भने बजारमा खुला रूपमा बेचिन्थे । देवमन्दिरको टुँडालमा स्त्री-पुरुषको यौनक्रिया खुला प्रदर्शन गर्न नहिच्किचाउनामा पनि यस्तै भावनाले काम गरेको देखिन्छ ।

यस मन्दिरको तल्लो र माथिल्लो दुवै छानाको चारै कुनामा एक एकवटा घण्टा झुण्ड्या-इएका छन् । छानाको कुनामा कुँपा भनी प्रसिद्ध चरा आकारको विशेष किसिमको झिंगटी राखि-एका छन् । दुइ छानाको जोर्नीमा बज्रको प्रयोग नगरेर कोपुनामक विशेष किसिमका टाइलको चाँग ठाडो पारेर लहरै राखी छानाका झिंगटी नखस्ने बनाइएका छन् । माथिल्लो छानाको टुप्पामा सुनको पूर्ण कलश र दर्पण गजूरको रूपमा बनाइएका छन् ।

यस मन्दिरको चार कुनामा भिन्नाभिन्नै चारवटा सानसाना मन्दिर बनाइएका छन् । ती सानसाना मन्दिर जगन्नाथको मन्दिरसँग सम्बद्ध हुनाले नेवारीमा ती देवललाई 'कचादेवल' अर्थात् शाखारूपको मन्दिर भन्ने चलन छ । दुइछाने मन्दिरको रूपमा ती बनेका छन् । आकारको दृष्टिले ती मन्दिर निकै साना छन् तापनि तिनको निर्माणको शैली नेपालका अरू ठूलठूला दुइ छाने मन्दिरसँग मिल्दछ ।

# प्रतापध्वज

जगन्नाथदेवल र कृष्णमन्दिरको बीचमा रहेको डबलीमाथि एउटा अग्लो प्रस्तरस्तम्भ छ। त्यस प्रस्तरस्तम्भमाथि राजा प्रतापमल्ल र उनका जहान परिवारहरूका सुनका प्रतिमा विराजमान छन्। राजा प्रतापमल्लले वि. सं. १७२७ भाद्रमा प्रतिमासहित सो स्तम्भ खडा गराएका थिए। यस स्तम्भमा अङ्कित अभिलेखमा यस प्रस्तरस्तम्भलाई प्रतापध्वज भन्ने संज्ञा दिइएको छ[1]।

यसभन्दा अगाडि पनि वि. सं. १७२१ पौषमा राजा प्रतापमल्लले एउटा प्रस्तरस्तम्भ स्थापना गरेका थिए[2]। आफू र आफ्ना दुइ छोरा नृपेन्द्रमल्ल र चक्रवर्त्तेन्द्रमल्लको सालिक राखी बनाएको सो विशाल प्रस्तरस्तम्भ तलेजुको मन्दिरअगाडि त्रिशूलचोकमा रहेको छ।

देवदेवीको मन्दिरअगाडि प्रस्तरस्तम्भमाथि पुरुषको आकारसँग मिल्ने गरुडको प्रतिमा राख्ने चलन लिच्छविकालदेखि नै चलेर आएको थियो तापनि प्रस्तरस्तम्भमाथि भक्तजनको रूपमा मानिसको धातुनिर्मित प्रतिमा राख्ने चलन नेपालमा मल्लकालदेखि मात्र शुरू भएको देखिन्छ। विक्रमको अठाह्रौं शताब्दीतिर यो चलन निकै लोकप्रिय भएको थियो। पाटन र भक्तपुरको दरवार अगाडि रहेका योगनरेन्द्रमल्ल र भूपतीन्द्रमल्लका सालिक यसका उदाहरण हुन्। गोरखा पोखरी थोकमा रहेको पृथ्वीपति शाहको प्रतिमासहित प्रस्तरमूर्ति पनि यही परम्परामा बनेको छ।

पृथ्वीपति शाहको नेपाल उपत्यकाका मल्ल राजाहरूसँग राम्रो सम्बन्ध थियो। वि. सं. १७३५ को दसैंमा काठमाडौं आई उनले काठमाडौंका राजा नृपेन्द्रमल्लसँग मित लाएका थिए[3]। यसै वेला उनले राजा प्रतापमल्लका प्रतिमासहित स्तम्भ देखेका थिए। यसको लगत्तै दुइ वर्षजति पछि वि. सं. १७३७ आषाढमा उनले पोखरीथोकमा उक्त स्तम्भ खडा गराए[4]। त्यस वेला पाटन दरवारअगाडि रहेको योगनरेन्द्रको प्रस्तरस्तम्भ बनिसकेको थिएन। वि. सं. १७४९ माघमा मात्र सो स्तम्भ बनाइएको थियो[5]। यसै गरी भक्तपुर दरवारको भूपतीन्द्रको प्रस्तरस्तम्भ पनि त्यस वेला बनिसकेको देखिंदैन। भक्तपुरको सो प्रस्तरस्तम्भ बनेको ठीक समय पत्ता लागेको छैन तापनि वि. सं. १७३७ मा पृथ्वीपतिले गोरखामा प्रस्तरस्तम्भ बनाउँदा भूपतीन्द्रमल्ल राजा

---

१. परिशिष्ट, ३० संख्याको अभिलेख

२. परिशिष्ट, २९ संख्याको अभिलेख

३. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ६२० पृ.

४. सोही, ५९८–५९९ पृ.

५. हालै पाइएको एउटा ठ्यासफुमा यस विषयमा यस्तो लेखिएको– "सं. ८१३ माघ शु १० मृ. रविदिन श्री २ योगनरेन्द्रमल्लन श्रीदेगुतलेकोस सारिक तया दिन ।।" (लस् अन्जेल्स् काउन्टी म्यूजियम अफ् आर्टका क्युरेटर डा. प्रतापादित्य पालको सौजन्यबाट मैले यस ठ्यासफुको प्रतिलिपि हेर्न पाएको हुँ। जसको लागि म उहाँप्रति कृतज्ञता व्यक्त गर्दछु।)

भइसकेका थिएनन् । वि. सं. १७५३ मा उनी राजगद्दीमा बसेका थिए[1] । यस कारण यसपछि मात्र उनको सालिक स्थापना गरिएको हुनुपर्छ भन्ने देखिएको छ । यसरी सबभन्दा पहिले राजा प्रतापमल्लको तलेजु र देगुतलेजुअगाडिका प्रतिमासहित प्रस्तरस्तम्भ बनेको र त्यसपछि क्रमशः पृथ्वीपति शाह, योगनरेन्द्र र भूपतीन्द्रमल्लको स्तम्भमाथिका सालिक बनेका देखिन्छन् ।

हाम्रो यहाँ सालिक स्थापना गर्दा आफ्नो व्यक्तित्वको प्रदर्शन गर्न होइन कि देवदेवी प्रति आफ्नो श्रद्धा प्रकट गर्न बनाइएका हुन्छन् । केवल व्यक्तित्व प्रदर्शनको लागि बनेको कुनै पनि प्राचीन प्रतिमा अहिलेसम्म भेटिएको छैन । देगुतलेजुको मन्दिरतिर फर्केको यो प्रतापध्वज पनि राजा प्रतापमल्लले आफ्नो इष्टदेवता देगुतलेजुप्रति भक्तिभाव प्रकट गर्न निर्माण गराएका थिए । यसको पृष्ठभागमा अङ्कित अभिलेखको उठानमा उनले आफैले लेखेको चण्डिकादेवीको स्तुति छ । देगुतलेजुको मन्दिरमा सुनको छाना र गजूर हाली त्यसैको उपलक्षमा आफू र आफ्नो परिवारको यो सालिक हालेको कुरा त्यस अभिलेखमा लेखिएको छ ।

करीव साढे पाँच हातको परिधिमा बनेको चारपाटे यस प्रतापध्वजको जमीनबाहिर देखिने भाग तीन तला जति अग्लो छ । यसको यो उचाइको आधारमा विचार गरी हेर्दा देखिने भागको तृतीयांश जति जमीनमुनि गाडिएको हुनुपर्छ भन्ने देखिन्छ । यति ठूलो स्तम्भ बनाउन निकै ठूलो प्रस्तरको आवश्यकता भयो होला भन्ने अनुमान सजिलैसँग गर्न सकिन्छ । आजभोलि जस्तो कुनै वैज्ञानिक साधन नभएको त्यस युगमा त्यति ठूला प्रस्तर तानेर ल्याई निर्दिष्ट ठाउँमा पुऱ्याउनु र त्यसलाई आफूले चाहेको आकारमा बदलेर सोझो पारेर उभ्याउनु निश्चय नै परिश्रमसाध्य कुरो थियो । यस स्तम्भले हाम्रा पूर्वजहरूको जाँगर मात्र होइन ज्ञान र कुशलताको पनि परिचय दिइरहेको छ ।

प्रतापध्वजको माथिल्लो भाग गोलाकार छ । त्यहाँ चारैतिर लहरै बाघ, सिंह, भेंडा आदि विभिन्न जन्तुहरू टाउको बाहिर निकालेर तलतिर हेरिरहेको जस्तो देखिने गरी बनाइएका छन् । त्यसभन्दा माथि त्यस स्तम्भको पुष्पाकार शिरोभाग रहेको छ । त्यसमा चारपाटे सुनको सिंहासन राखिएको छ । त्यस सिंहासनको चारै कुनामा सिंहका आकृति चियाइरहेका छन् । तिनको बीच बीचमा हात्तीका शिरोभाग निस्किरहेका छ न् । यसरी सो सिंहासन सिंह र हात्तीले मिलेर उचालिरहेको जस्तो देखिन्छ । सिंहासनमाथि चारकुनामा चार राजकुमार र अघिल्तिर दुइ रानी नमस्कार मुद्रामा छन् । बीचमा मानिसको आकारभन्दा केही ठूलो राजा प्रतापमल्लको प्रतिमा रहेको छ । नियालेर हेरेको खण्डमा दुइ रानीको बीचमा एउटा सानो मूर्ति पनि देखिन्छ । यसरी यस स्तम्भमाथि जम्मा आठ व्यक्तिको प्रतिमा रहेको छ । देगुतलेजुको कौशीबाट यी सबै दृश्य देख्न सकिन्छ ।

यस स्तम्भमा अङ्कित अभिलेखअनुसार राजा प्रतापमल्लले आफूसहित दुइ रानी अनन्त-

---

१. भोलानाथ पौडेल, "भूपतीन्द्र मल्ल" पूर्णिमा (वि.सं. २०२३ वैशाख) ३ वर्ष १ अंक २३ पृ.

प्रियादेवी, प्रभावतीदेवी तथा पाँच राजकुमार भूपेन्द्रमल्ल, चक्रवर्तेन्द्रमल्ल, महीपतेन्द्रमल्ल, नृपेन्द्र मल्ल र पार्थिवेन्द्रमल्लका सालिक यस स्तम्भमाथि राख्न लगाएका थिए[1] । मूर्ति तथा चित्रमा दायाँतिर जेठी रानी र बायाँतिर कान्छी रानी राख्ने चलन देखिनाले राजा प्रतापमल्लको दायाँतिर रहेको स्त्रीमूर्ति अनन्तप्रियादेवी र बायाँतिरको चाहिं प्रभावतीदेवीको प्रतिमा हुन् भन्ने देखिएको छ। परन्तु अरू पाँच राजकुमारलाई चिन्ने कुनै आधार पाइएको छैन ।

मल्लकालमा सालिक बनाउँदा मूल व्यक्तिको मूर्ति अरू गौण व्यक्तिको मूर्तिभन्दा निकै ठूलो गरी बनाउने चलन थियो। सोही चलनअनुसार यहाँ राजा प्रतापमल्लको सालिक राजकुमार र रानीहरूको सालिकभन्दा झण्डै दुगुना ठूलो गरी बनाइएको छ। उनले दायाँ हातमा अक्षमाला र बायाँ हातमा हस्तलिखित ग्रन्थ (सायद देगुतलेजुको स्तोत्र) लिइरहेका छन् । शिरमा कल्की-समेतको राजसी पगडी छ तथा कण्ठमा वहुमूल्य हार छ । ध्यानपूर्वक हेर्दा उनको पगडीमा एउटा सुन्दर कल्की पनि देखापर्छ। राजकुमारहरूको पगडी पनि राजाको जस्तै छ तापनि तिनमा कल्की देखिदैन। घुंडा टेकेर प्रतापमल्ल बसेका छन् । राजकुमारहरू पनि त्यही आसनमा छन्। परन्तु रानीहरूचाहिं ललितासनमा देखापर्छन् ।

प्रतापको शिरमाथि सर्पफणा छ। जसले गर्दा सालिकको शोभा अझ बढेको छ। राजाको मुखमा राजोचित ओज देखापर्छ भने रानीहरूको मुखमा भद्रमहिलामा पाइने सौम्य भाव स्पष्ट झल्कन्छ। यसै गरी जुंघाको रेखासम्म पनि नबसेका राजकुमारको मुखमा शैशवोचित सरलता र कोमलता प्रतिबिम्बित हुन्छ। मल्लकालका कलाकारहरूले हासिल गरेको सफलताको नमूना यी सालिकले प्रस्तुत गरेका छन् ।

## देगुतलेजुको मन्दिर

प्रतापध्वजको सामुन्ने दक्षिणतिर देगुतलेजुको मन्दिर रहेको छ। हनूमान्ढोकामा रहेका सबै मन्दिरहरूमा तलेजुको देवलपछि सबभन्दा अग्लो मन्दिर यो हो। वि. सं. १८८७ मा टिपिएको देवलको नापोसम्बन्धी कागतमा यस मन्दिरको उचाई ६२ हात दिइएको छ[2] ।

भाषावंशावलीमा यो मन्दिर राजा शिवसिंहले बनाएको भनी लेखिएको छ[3] । श्री ५ प्रतापसिंहले राखेको देगुतलेजुको गुठीसम्बन्धी कौसी तोसाखानामा रहेको एउटा कागतबाट पनि यस कुराको पुष्टि हुन्छ। देगुतलेजुको सबभन्दा पहिले गुठी राख्ने व्यक्तिको रूपमा राजा

१. परिशिष्ट, ३० संख्याको अभिलेख

२. परिशिष्ट, मन्दिर र चोकहरूको नापोसम्बन्धी पुरानो कागतपत्र

३. लंसाल, "भाषावंशावली" ६९ पृ.

शिवसिंहको उल्लेख त्यहाँ आएको छ[1] । पछि वि. सं. १७२७ भाद्रमा राजा प्रतापमल्लले सुनका छाना र गजूर हाली यस मन्दिरको जीर्णोद्धार गरेका थिए[2] । यस मन्दिरको वर्तमान रूप यसै वेलादेखि बनेको बुझिन्छ ।

पाटनको दरवारमा पनि देगुतलेजुको भव्य मन्दिर बनेको छ । परन्तु वर्तमान भक्तपुर-दरवारमा देगुतलेजुको देवलको अस्तित्व हराइसकेको छ । देवलको नापोसम्बन्धी उपर्युक्त कागतमा पाटनको देगुतलेजुको मन्दिर ६४ हात अग्लो भनी लेखिएको छ । यसरी पाटन र काठमाडौंका देगुतलेजुका मन्दिर झण्डै उत्ताउत्तै देखिएका छन् । यी दुवै मन्दिरको निर्माणशैली पनि प्रायः मिल्दाजुल्दा छन् । प्रचलित मन्दिरका रचनाभन्दा अलि पृथक् ढंगले यी मन्दिर बनेका छन् । यी दुइ मन्दिरका तल्लो भागमा माजुदेवल वा त्रैलोक्यमोहनको मन्दिरमा जस्तै तहतह पेटी बनेका छैनन् । तिनको सट्टा घरजम गर्न बनाइने जस्तो नेपाली शैलीका भवन त्यहाँ बनेका छन् । उक्त भवनका फराकिलो कौसीदेखि मात्र तीनछाने मूल मन्दिर उठाइएका छन् ।

पाटनको देगुतलेजुको मन्दिर राजा सिद्धिनृसिंहले वि. सं. १६६७ फागुनमा बनाएका थिए[4] । यस कारण काठमाडौंको देगुतलेजुको मन्दिरको अनुकरणमा पाटनको देगुतलेजुको मन्दिर बनेको देखिन्छ तापनि काठमाडौंको देगुतलेजुको कौसीभन्दा तलको भागमा बाक्लो वज्रलेप गरिएको हुनाले यसको प्रारम्भिक सुन्दरता हराइसकेको छ । पाटनको मन्दिरमा मात्र सो बचेको छ । काठमाडौंको देगुतलेजुको कौसीभन्दा माथिको मूल मन्दिरले भने अद्यापि प्राचीन गौरवलाई बचाएको छ । सुनका छाना हालिएका हुनाले पाटनको भन्दा अझ बढी यो भव्य देखिन्छ ।

दुइटा गारा हाली बनाइने तःदेवल भनिले रचनाशैलीमा देगुतलेजुको यो मूलमन्दिर बनेको छ । हनूमान्‌ढोकाले चर्चेको भू-भागमा तःदेवल रचनाशैलीमा बनेका यस्ता अरू दुइटा मन्दिर देखिएका छन् । तिनमा एउटा जगन्नाथको मन्दिर, दोस्रो तलेजुको ठूलो मन्दिर हुन् । पुजारीको माध्यमबाट पूजा हुने देवताका मन्दिर यस रचनाशैलीमा बनाइन्थे भन्ने कुरो हामीले माथि लेखिसकेका छौं । देगुतलेजुको मन्दिरभित्र दीक्षा पाएका पुजारी आदि सम्बद्ध व्यक्तिहरूद्वारा हुने गोप्य पूजालाई अनुकूल पर्ने गरी उक्त रचनाशैलीमा यो मन्दिर बनेको देखिन्छ ।

---

१. "(प्रतापसिंहसाहको प्रशस्ति)
आगे कांतिपुरका श्री ५ दिगुतलेज्यूकन वर्ष दिनका नित्ये नैमित्तिक पूजाकन सिवसिंहमल्ल, लक्ष्मीनरसिंह मल्ल, प्रतापमल्ल, नृपेन्द्रमल्ल, रिद्धिलक्ष्मी रानी, भुपालेन्द्र मल्ल, भुवनलक्ष्मी रानी, महिन्द्रसिंहमल्ल, जगत्‌जयमल्ल, जयप्रकाशमल्ल, आसामयी देवी, पार्वतीदेवी, विदेश्वरी मैज्यु, मधुकर कुमर, देवाकर भट् येतिले गुठ राष्याको परम्परायदेषि रहेछ ... इति सम्वत् १८३३ साल"

२. परिशिष्ट, ३० संख्याको अभिलेख

३. परिशिष्ट, मन्दिर र चोकहरूको नापोसम्बन्धी पुराना कागतपत्र

४. तेवारी र अरू, "अभिलेख–संग्रह" ६ भाग १० पृ.

यस मन्दिरमा चारैं दिशामा चारवटा तीनमुखे द्वार बनेका छन् । ती द्वारमा मुण्डमाला, फूलबुट्टा,नाग, पूर्णकलश तथा देवदेवीका प्रतिमा आदि कलापूर्ण ढंगले कुँदिएका छन् । यस मन्दिरको मूलद्वार दक्षिणतिर फर्केको छ । तर आजभोलि नयाँ थपेको टहरो जस्तो सानो भवनले सो मूल द्वार छोपिएको छ । उत्तराभिमुख द्वारचाहिं सडकबाट देखिने हुनाले चाँदीको पाताले मोडी आकर्षक पारिएको छ । त्यसमा अङ्कित अभिलेखअनुसार वि. सं. १८७२ मा श्री ५ गीर्वाणयुद्ध-विक्रमले चाँदीको सो द्वार बनाउन लगाएका थिए[1] ।

यस मन्दिरको पहिलो छानाको मुनि प्रयुक्त भएका कुँसल विशेष किसिमका छन् । दुइ सिंहका टाउकामाथि टेकेर भेंडाको जस्तो सींङ भएको हिंस्रक जन्तु बसेको छ । फेरि उसको टाउकोमाथि टेकेर कुँसल उभिएको छ । प्रत्येक टुँडालमा कमलमाथि उभिएका शिवपार्वतीका प्रतिमा कुँदिएका छन् तथा कमलको मुनि पशु वा पक्षीको जस्तो शिर भएका देवताहरू विभिन्न हस्तमुद्रामा देखापर्छन् । प्रत्येक तलामा गःझ्याल र याकु झ्याल बनाइएका छन् तथा छानाको किनारामा लहरै सानसाना घण्ट झुण्डयाइएका छन् । हावाको झोक्कामा ती घण्ट हल्लिरहन्छन तथा मधुर आवाज निकालिरहन्छन् । छानाको चारै कुनामा धातुनिर्मित ध्वजा लट्काइएका छन् । सबभन्दा माथिल्लो छानामा चाहिं ध्वजाको सट्टा लाम्चो खालका कलश झुण्डयाइएका छन् । तलेजुको मन्दिर पनि यही तरीकाले सिंगारिएको छ ।

मन्दिरमाथि गजूर हाल्दा तीनवटा, पाँचवटा वा अरू कुनै बेजोड संख्याका गजूर हाल्ने चलन छ । परन्तु यस मन्दिरमा भने ६ वटा गजूर हालेको कुरो प्रतापमल्लको स्तम्भाभिलेखमा चर्चा गरिएको छ[2] । आजभोलि देगुतलेजुको मन्दिरमाथि ६ गजूर देखा पर्दैनन् । चार कुनामा चारवटा सानसाना गजूर र बीचमा एउटा निकै ठूलो गजूरसमेत गरी जम्मा पाँच वटा गजूर मात्र यहाँ देखिन्छन् ।

देगुतलेजु र तलेजु शाक्तसंप्रदायका एउटै देवताका दुइ रूप हुन् भन्ने देखिएको छ । मल्लकालमा यी दुवै देवता सबभन्दा बढी संमानित देवता थिए । देगुतलेजु जस्तै तलेजुको मन्दिर पनि प्रत्येक मल्लदरबारमा विद्यमान छ । प्रतापमल्ल आदि मल्ल राजाहरूका अभिलेखमा ती दुवै देवतालाई चण्डिका, भवानी, कालिका आदि संज्ञा दिइएका छन् तथा दुवैलाई इष्टदेवता भनी लेखिएका छन्[3] । बोलचालीको भाषामा चाहिं देगुतलेजुलाई देगुलितरेमाजु भन्ने चलन मल्लकालमा थियो[4] ।

---

१. परिशिष्ट, ८५ संख्याको अभिलेख

२. परिशिष्ट, ३० संख्याका अभिलेख

३. परिशिष्ट, १३,२६,३० संख्याका अभिलेख

४. परिशिष्ट, ४५ संख्याको अभिलेख

अक्षयतृतीयाको दिन देगुतलेजुको वर्षवन्धन गरिन्छ । त्यस दिन देगुतलेजुको स्थापना भएको दिन मानिएको छ । यस कारण त्यस दिन तलेजुमा विशेष पूजा हुन्छ । यसै गरी सिठीको दिन पनि त्यहाँ परम्परागत ठूलो पूजा हुन्छ । अक्षयतृतीयादेखि सिठीसम्मका दिन नेपाल उपत्यकाका नेवारहरूको लागि महत्त्वपूर्ण दिन मानिएका छन् । त्यस अवधिभित्र आफ्नो परिवारको इष्टदेवताको मन्दिरमा गएर देवालीपूजा गर्नुपर्ने चलन छ । नेवारीमा देवाली पूजालाई देगुलि पूजा वा देगुपूजा भन्दछन् । सो देवालीपूजा उक्त अवधिभित्र जुनसुकै दिन सम्पन्न गर्न सकिन्छ तापनि सिठीको दिन अन्तिम दिन हुनाले धेरैजसा मानिसहरू सिठीको दिन देवाली मनाउँछन् । परिवारका कुनै पुरुष सदस्यको विवाह भएको वर्ष अक्षयतृतीयादेखि सिठीसम्मको अवधिमा बाहेक अरू दिन पनि देवाली मनाउने चलन राजोपाध्याय आदि परिवारको देखिन्छ ।

देवाली पूजाको परम्परा नेपालमा धेरै शताब्दीअघिदेखि चलेर आएको बुझिएको छ । गोपालवंशावलीमा देवालीपूजाको उल्लेख आएको छ । स्थितिमल्लका छोरा युवराज धर्मदेवको विवाह भएको नौ दिनपछि देघुरि पूजा (देवाली पूजा) गरेको कुरा त्यहाँ लेखिएको छ[1] । एउटा ठ्यासफुमा पनि काठमाडौंका अन्तिम मल्ल राजा जयप्रकाशको विवाह हुँदा त्यसको छः दिनपछि देवाली पूजा मनाएको कुरो टिपिएको छ[2] ।

यसरी मल्ल राजाहरूको देवाली पूजा मनाउने परम्परा देखिनाले तथा देवालीको उठान र अन्तिम दिनमा देगुतलेजुमा विशेष पूजा गरिने हुनाले देगुलिपूजा गर्दा पूजा गरिने इष्टदेवताको रूपमा यस देवीको नाम देगुलितलेजु भन्ने रहन गएको बुझिन्छ ।

सिठीको दिन षष्ठीदेवी र कुमारको पूजा गर्ने विधि वर्षक्रिया कौमुदी आदि ग्रन्थमा लेखिएको छ[3] । षष्ठीदेवीको पूजा लिच्छविकालमा पनि हुन्थ्यो । राजदरबारभित्रै पनि षष्ठी-

---

१. गोपालराजवंशावली २९ ख पत्र, "सम्वत् ५०३...थ्व समछलनवु चेतलाथोव तिराखचा श्रीश्रीधर्म्मलदेवस विवाह ॥ गुन्हुलिव देघुरि पूजा विज्याङा. "

२. गौतमवज्र वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा (वि. सं. २०२३ माघ) ३ वर्ष ४ अंक ३८–३९ पृ.; "सं. ८५३ फाल्गुन कृष्ण द्वितीया कुन्हु जयप्रकाशया परत यिहि यातके यात पिथि पूजा... थ्वनलि मूलचुकस अग्निस्थापन यात ... पेन्हु कुन्हु होमवेला सोयं अलिङय यिनाय लिते ॥ ॥ षुन्हु कुन्हु देगुतलिपूजा ॥"

३. "राजमार्त्तण्डे"

ज्येष्ठे मासि सिते पक्षे षष्ठयां रावण्यसंज्ञितां(?) ।
तां विन्ध्यवासिनीं षष्ठीं पूजयेयुः वने गता ॥
कन्दमूलफलाहारा, लभन्ते सन्तर्ति च ताः ॥
तस्य स्कन्दस्य कर्त्तव्या पूजा सर्व्वोपहारिणी
आरोग्यकामैः बालानां पुत्रवद्भिः विशेषतः ॥

देवीको मन्दिर षष्ठीदेवकुल रहेको हुन्थ्यो तथा सिठीको दिन विशिष्ट दिनमध्ये पर्दथ्यो[1]। यो कुरो अंशुवर्माको हाँडिगाउँको प्राचीन दरवारको व्यवस्थासम्बन्धी शिलालेखबाट थाहा हुन्छ। यताबाट लिच्छविकालको षष्ठीदेवकुलको ठाउँ मल्लकालमा आएर देगुतलेजुको मन्दिरले लिएको देखिन्छ।

## कालभैरव

जगन्नाथको मन्दिरसँगै देगुतलेजुको उत्तरपट्टि कालभैरवको विशाल मूर्ति उत्तराभिमुख खडा छ। भाषावंशावलीअनुसार राजा प्रतापमल्लले हनूमान्ढोका दरवारको भण्डारखालमा बनाएको पोखरीमा पानी राख्न बूढानीलकण्ठदेखि ढल बनाउँदै ल्याउँदा रानीवन भन्ने ठाउँनिर जमीनमुनि कालभैरवको यो मूर्ति भेट्टाएका थिए। यस मूर्तिको भव्यरूप देखेर राजा प्रतापमल्लले त्यहाँबाट परिश्रमपूर्वक उठाएर ल्याउन लगाई आफ्नो दरवारअगाडि राख्न लगाए[2]। वंशावलीको यो वर्णनअनुसार यो मूर्ति प्रतापमल्लको समयभन्दा धेरै अगाडि बनेको देखिन्छ तापनि यस मूर्तिसँग सम्बन्ध राख्ने अरू कुनै उल्लेख नपाइएको हुनाले यस मूर्तिको समय निश्चय गर्न सकिएको छैन।

यो मूर्ति करीब नौ हात अग्लो छ। यस मूर्तिको दायाँ बायाँ दुइटा ठूलठूला प्रस्तरका सिंह बसिरहेका छन्। उत्तानो परेर सुतिरहेको बेतालको शरीरमा कुल्चेर कालभैरवको भयंकर मूर्ति उभिरहेको छ। उनले घुँडासम्म आउने मुण्डमाला लगाएका छन्। कानमा, नाडीमा र पाउमा समेत सर्पको आभूषण छ। उनका जम्मा छः हात छन्। माथिल्ला दुइ हातमा खड्ग र ढाल छ। बीचका दुइ हातमा एउटाले कपाल लिएको छ अर्को चाहिं विन्दुमुद्रामा छ। तलका दुइ हातमा चाहिं एउटाले त्रिशूल अर्कोले तीनवटा नरमुण्ड झुण्डचाइरहेको छ।

कालभैरवको मुकुट पनि खप्परले सिंगारिएको छ। मुकुटको किनारामा चार खप्पर जडिएका छन्। तिनको मध्य भागमा नरमुण्ड छ। डरलाग्दा ठूलठूला आँखा अग्निज्वाला जस्ता आँखिभुईंले सो मूर्ति अझ बढी भयानक देखिएका छन्। हाम्रो यहाँ भैरव शिवको विनाशकारी रूप मानिएको छ। यसैले भैरवको मूर्ति बनाउँदा भयंकर रूपको चित्रण गर्ने चलन छ।

यो मूर्ति एउटै शिलाद्वारा बनेको छ। माथिल्लो भागमा दायाँतिर केही फुटेको हुनाले त्यहाँनिरको केही भाग मात्र अर्को प्रस्तर जोडी बनाइएको छ। मूर्तिका दायाँ बायाँ रहेका चन्द्र

---

४. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३०१–३०२; पृ. यस अभिलेखमा राजदरवारमा रहेको षष्ठीदेवीको मन्दिरको उल्लेख आएको छ तथा सिठीकै दिन (ज्येष्ठ शुक्लषष्ठीमा) सो शिलालेख स्थापना गरिएको छ। सिठी चाडको सम्वन्धमा विशेष कुरा 'कुमारको खटजात्रा" शीर्षकअन्तर्गत तल केही लेखिएको छ।

२. लंसाल, "भाषावंशावली" २ भाग ८७–८८ पृ.

सूर्य र माथितिर रहेको सिंहको मुखाकृति पनि पछि भिन्नै थपिएका देखिन्छन् । एउटै शिलामा बनेको यति ठूलो मूर्ति हाम्रो यहाँ विरलै छन् ।

## इन्द्रपुर

जगन्नाथमन्दिरको उत्तरपट्टि कालभैरवको नजीकै इन्द्रपुर रहेको छ । दुइ तह पेटी-माथि चारैतिर स्तम्भ हालेर यस मन्दिरको निर्माण गरिएको छ । प्रत्येक स्तम्भको मुनि सिंहको आकृति कुँदिएका प्रस्तर ईहिंलोको रूपमा प्रयोग गरिएका छन् । यस मन्दिरको तल्लो तलामा दक्षिणाभिमुख एउटा ढोकाबाहेक अरू कुनै झ्याल वा ढोका छैन । सो ढोका पनि ज्यादै साधारण किसिमको छ । ढोकामाथि तोरणसम्म पनि राखिएको छैन । टुँडाल पनि साधारण किसिमको छ । प्रत्येक स्तम्भमुनि सिंहाकृति कुँदिएको इहिलों हेर्दा यस मन्दिरको निर्माण प्रारम्भमा भव्य रूपमा बनाइएको देखिन्छ । पछि जीर्णोद्धार हुँदाखेरि मात्र यस मन्दिरले आफ्नो पुरानो रूप नपाएको अनुमान हुन्छ ।

यस मन्दिरभित्र सानो शिवलिङ्ग रहेको छ । परन्तु यस मन्दिरको नाम भन्ने इन्द्रपुर भन्ने रहन गएको छ । सो शिवलिङ्ग इन्द्रेश्वर महादेव हुन्, पनौतीमा रहेको प्रसिद्ध इन्द्रेश्वर महादेव साधन गरी सो शिवलिंग स्थापना गरिएको हो भन्ने अनुश्रुति छ । इन्द्रले तपस्या गर्दा आविर्भाव भएका हुनाले त्यस महादेवको नाम इन्द्रेश्वर रहन गएको थियो । यसैले पनौतीको इन्द्रेश्वरको मन्दिरलाई कतै कतै ऐन्द्रकूट भनी लेखिएको पाइन्छ[1] । हनूमान्ढोकाको यो मन्दिर पनि इन्द्रेश्वर महादेवको मन्दिर भएको हुनाले नै इन्द्रपुर भनिएको देखिन्छ ।

इन्द्रजात्रामा यस मन्दिरको माथिल्लो तलामा इन्द्रको मूर्ति राखिन्छ भन्ने कसै कसैको भनाइ छ[2] । परन्तु आजभोलि यो चलन हराइसकेको बुझिन्छ । राइटको वंशावलीअनुसार यस इन्द्रपुरको निर्माण राजा प्रतापमल्लले गराएका थिए[3] । परन्तु यस मन्दिरसम्बन्धी कुनै अभिलेख प्राप्त भएको छैन ।

इन्द्रजात्रामा इन्द्र राखिने हुनाले नै सायद यस मन्दिरको माथिल्लो तलाको निर्माण साधारण दुइछाने मन्दिरभन्दा पृथक् तरीकाले गरिएको हुनुपर्छ । यस मन्दिरको माथिल्लो तलामा चारै कुनामा थाम हाली बुर्जा जस्तो गरी बनाइएको छ । यो यस मन्दिरको विशेषता हो ।

---

१. गोपालराजवंशावली २६ ख–२७ क पत्र, "जौराजिनी श्रीविरमदेवीना कृ(त्य) ऐन्द्रकूट-ध्वजामारोहनम् चारिसय चवुद्रह । वेशाखमास तस्य पुत्र श्रीजयशक्तिदेवेन एन्द्रकूटध्वजा-मारोहनम् ।"

२. रोनाल्ड एम्. बर्नियर्, "द टेम्पल्स् अफ् नेपाल" (काठमाडौं, भ्वाइस् अफ् नेपाल, ई.सं. १९७०) १५७ पृ.

३. राइट्, "हिस्ट्री अफ् नेपाल" १२९ पृ.

यस मन्दिरको दक्षिणपट्टि पेटीमुनि गरुडको सुन्दर मूर्ति भुईंमा गाडिएर रहेको छ। गरुडको यो मूर्ति इन्द्रपुरीतिर फर्केको छ तापनि गरुड विष्णुको वाहन हुनाले त्यस मन्दिरसँग यसको कुनै सम्बन्ध देखिंदैन। यस गरुडको शिरोभाग खण्डित छ तापनि पृष्ठभागमा कुँदिएको पखेटाको बुट्टा पुष्ट बाहु अनुपात मिलेको छाती र कम्मरको भागले यस मूर्तिको सफल कलाकारिता-को परिचय दिइरहेको छ। लिच्छविकालमा बनेको हाँडिगाउँ सत्यनारायणस्थानमा रहेका गरुडसँग यसको तुलना हुन सक्दछ। यस कारण लिच्छविकालमै यस गरुडको निर्माण भएको अनुमान गरिन्छ। हनूमान्ढोकाले चर्चेका भू-भागमा पाइने लिच्छविकालका केही प्रस्तरमूर्तिमध्ये यो पनि एउटा हो। यस मूर्तिको उत्खनन गरी हेर्न सकेको खण्डमा यस मूर्तिको पादपीठमा अभिलेख पाइने संभावना नभएको होइन।

## कोटिलिङ्गेश्वर महादेवको मन्दिर

कालभैरवको उत्तरपट्टि रहेको ढुङ्गाको देवल कोटिलिङ्गेश्वर महादेवको मन्दिर भन्ने नामले प्रसिद्ध छ। वंशावलीअनुसार राजा महेन्द्रमल्लले सो मन्दिर बनाउन लाएका थिए[1]। तीन तह पेटीमाथि यो मन्दिर बनेको छ। यस मन्दिरको निर्माण गुम्बज शैलीमा गरिएको छ। विक्रमको सोह्रौं अथवा सत्रौं शताब्दीतिर बनेका गुम्बज शैलीका विरल मन्दिरमध्ये यसको गणना हुन्छ।

यस मन्दिरको पेटीको कुनामा कुँदिएका ढुङ्गाका साँढे दर्शनीय छन्। ढुङ्गाको बाहिर देखिने कोणमा दायाँ बायाँ दुवैतिर साँढेको आकार विशेष तरीकाले बनाइएका छन्। ढुङ्गाका दायाँ बायाँ बाटामा दुइ साँढेको आकृति कुँदिएका छन्, तर शिर भने दुवैको एउटै छ। ढुङ्गाको कोणमा दुइ जन्तुको एक शिर गरी आकृति बनाउने चलन हाम्रो यहाँ लिच्छविकालमा पनि चलेको थियो[2]। सोही परम्परामा साँढेका ती आकृति बनेका देखिन्छन्।

यस मन्दिरको मूलद्वार दक्षिणतिर फर्केको छ। प्रवेशद्वारमा दायाँबायाँ स्तम्भ हाली त्यसमाथि मुख्य गुम्बजभन्दा केही सानो अर्को गुम्बज बनाइएको छ। दुवै गुम्बजमा धातुको गजूर राखिएका छन्।

मन्दिरको चारै ढोकाको तोरणमा मकर, सर्प र गरुडको आकार कुँदिएका छन्। ढोकाको दायाँ बायाँ स्तम्भको तल्लो भागमा महाकाल, गणेश आदि देवताका मूर्ति कलापूर्ण तरीकाले बनाइएका छन्। मन्दिरभित्र चाहिं चतुर्मुखी शिवलिङ्ग विद्यमान छ।

---

१. लंसाल, "भाषावंशावली" २ भाग ५७ पृ.

२. उदाहरणार्थ ढोकाबहालमा रहेको लिच्छवि लिपियुक्त चैत्यमा अङ्कित सिंहका मूर्ति प्रस्तुत गर्न सकिन्छ।

वि. सं. १९९० को महाभूकम्पले यसको केही भाग भत्केको थियो। तर त्यसको लगत्तै केही वर्षपछि यस मन्दिरको जीर्णोद्धार गरिएको थियो[1]।

## महाविष्णुको मन्दिर

कोटिलिङ्गेश्वर महादेवको नगीचै पूर्वोत्तर कुनामा सडकपारि महाविष्णुको मन्दिर रहेको छ। चार तह पेटीमाथि मन्दिर बनेको छ। यस मन्दिरमा दुइ छाना छन्। यसमा प्रयोग भएका टुँडाल साधारण किसिमका छन्। ढोका पनि साधारण नेपाली घरमा प्रयोग हुने छाँटको छ। परन्तु यस मन्दिरको गजूर भने भव्य छ, कलशाकार सुनको गजूरमाथि सुनकै छत्र चढाइएको छ। यस मन्दिरभित्र हाल कुनै देवता छैन। वि. सं. १९९० को महाभूकम्पमा यो मन्दिर भत्किएको थियो। यसभित्र रहेको महाविष्णु भनी प्रसिद्ध लक्ष्मीसहित बैकुण्ठको सुनको मूर्ति हराउने संभावना हुनाले त्यहाँबाट झिकी नासलचोकको पूर्वी दलानमा लगेर राखिएको थियो। सो मूर्ति आजभोलि त्यहीं रहेको छ। मन्दिरबाट उठाएर ल्याउँदा यस मूर्तिभित्र एउटा सुनको सानो जन्त्र पाइएको थियो। सो जन्त्र आजभोलि असनमा बस्ने महाविष्णुका पुजारी श्रीबालगोपालजीको संग्रहमा छ। त्यस जन्त्रमा नबुझिने मन्त्र कुँदिएको छ तथा एक छेउमा राजा जगज्जयमल्ल (वि. सं. १७७९–१७९२) को नामोल्लेख गरिएको छ। यताबाट सो मूर्ति र मन्दिर जगज्जयमल्लले बनाएको बुझिन्छ। वि. सं. १८८७ मा टिपिएको देवलको नापोसम्बन्धी कागतमा हनूमान्ढोका दरवारअगाडि रहेको राजा जगज्जयमल्लले राजेन्द्रमल्लको संज्ञनामा बनाएको ३७ हात अग्लो देवलको उल्लेख आएको छ[2]। यो उनै मन्दिर हुनुपर्दछ भन्ने देखिएको छ।

राजेन्द्रमल्ल राजा जगज्जयमल्लका जेठा छोरा थिए[3]। उनीप्रति राजाको विशेष स्नेह थियो। परन्तु पिताको जीवनकालमै राजेन्द्रमल्लको देहावसान भयो। यस घटनाले राजा जगज्जयमल्ललाई ठूलो आघात परेको थियो। यसैले उनले आफ्ना जेठा छोराको नाममा यो मन्दिर निर्माण गराएको बुझिन्छ।

महाभूकम्पपछि यस मन्दिरको पुनर्निर्माण गरिएको थियो तापनि यस मन्दिरको भव्य गजूरलाई सुहाउने छाँटले यसको निर्माण गरिएको देखिदैन। महाभूकम्पको कितापमा भूकम्पभन्दा अघि लिइएको हनूमान्ढोकाको प्राङ्गणको तस्वीरमा यस मन्दिरको पूर्वरूप देखापर्दछ[4]।

---

१. श्रीमोहिनीविनोद शर्माको वंशावलीबाट यो कुरो बुझिन्छ।

२. परिशिष्ट, मन्दिर र चोकहरूको नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो)

३. परिशिष्ट, ६३ संख्याको अभिलेख

४. ब्रह्मशम्शेर जङ्गबहादुर राणा, "नेपालको महाभूकम्प" (काठमाडौं वि.सं. १९९०) "हनूमानढोका अगाडिका देवलहरू" भन्ने शीर्षकको चित्र

# महेन्द्रश्वरको मन्दिर

तलेजुको देवलबाट अलिकता पर पश्चिमोत्तर कुनामा सडकपारि महेन्द्रेश्वर महादेवको मन्दिर रहेको छ । वि. सं. १६१८ फागुनमा राजा महेन्द्रमल्लले यो मन्दिर बनाउन लगाएका हुन्[1] । यसैले यस देवलको नाम महेन्द्रेश्वर मन्दिर भन्ने रहन गएको छ ।

राजा यक्षमल्लले भक्तपुरमा आफ्नो दरबारको नजीकै मन्दिर बनाई पशुपतिनाथको स्थापना गरेका थिए[2] । दिनप्रतिदिन पशुपतिनाथको दर्शन पाइयोस् भन्ने कामनाले उनले सो काम गरेका थिए । राजा यक्षमल्लले बनाएको हुनाले सो मन्दिर यक्षेश्वरको मन्दिर भन्ने नामले प्रसिद्ध भयो । रत्नमल्लले काठमाडौं जितेपछि उनी र उनका सन्तानहरू काठमाडौंको दरबारमा बस्न लागेका हुनाले उनीहरूलाई पनि भक्तपुरमा जस्तै आफ्नो दरबारअगाडि पशुपतिनाथको मन्दिर बनाउनु आवश्यक भयो र राजा महेन्द्रमल्लको पालामा यो मन्दिर बन्यो ।

यस मन्दिरको निर्माण राजा महेन्द्रमल्लले गराएका हुन् तापनि मन्दिरको वर्तमान रूप वि. सं. २०२० मा गरिएको जीर्णोद्धारपछि मात्र बनेको छ ।

यस मन्दिरमा फराकिला दुइ तह पेटी छन् । मन्दिरको मूलद्वार दक्षिणतिर फर्केको छ । मूलद्वारको सामुन्ने पहिलो तहको पेटीमा तामाले मोडेको चार पाटे मण्डलको रूपमा धर्मशिला रहेको छ । शिवजीको मन्दिरको दक्षिणतिर प्रायः यस्तो धर्मशिला बनाइएको हुन्छ । मन्दिर भित्र गई शिवलिङ्ग छोएर ढोग्ने नियम नहुनाले भक्तजनहरू धर्मशिलामा ढोगेर शिवजीप्रति आफ्नो भक्ति प्रकट गर्दछन् ।

मन्दिरभित्र चतुर्मुखी शिवलिङ्ग विराजमान छन् । मूलद्वारको दायाँबायाँ दुइ घण्टा झुण्ड्याइएका छन् । पहिलो पेटीको उठानमा प्रस्तरका दुइ सिंह छन् दोस्रो पेटीमा पनि दायाँ-बायाँ धातुनिर्मित सिंहका आकृति विद्यमान छन् । मन्दिरका सबै टुँडालमा शैवसंप्रदायसँग सम्बद्ध देवदेवताका मूर्ति अङ्कित गरिएका छन् । छानाको किनारामा लहरै सानसाना घण्ट झुण्ड्याइएका छन् । माजुदेवल आदि शिवजीको अरू मन्दिरमा जस्तै यसमा रतिलीलाको दृश्य

---

१. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा (वि. सं. २०२३ माघ ) ३ वर्ष ४ अंक ३० पृ. "सम्वत् ६८२ फाल्गुण शुक्ल ।। तृतीयान्तिथौ, उत्तभद्र नक्षत्र, शुक्रवार ।। थ्वकुन्हु श्रीश्री-महेन्द्रेश्वर प्रतिष्ठा याङा दिन चोस्यं तया जुरो ।। थ्वलपने तरव भीम बोया दिन जुरो ।। यंङ्या अजुनित्वं बोया जुरो ।। थंवहिरिया सिद्धिनाय बोया जुरो ।। श्रीरामतों बोया जुरो ।। थ्वल सतलिका माल ह्नसस माल कुन्तलन तियकं यात याङा जुरो श्रीश्रीजयमहेन्द्रमल्लदेव प्रभु थाकुलस्य दयका जुरो ।।" (ठ्यासफु)

२. भोलानाथ पौडेल, "यक्षेश्वर-मन्दिर" पूर्णिमा (वि.सं. २०२२ वैशाख) २ वर्ष १ अंक १६–२१ पृ.

देखाइएका छैनन् । सुवर्णनिर्मित डमरु, त्रिशूल, कलश तथा त्यसमाथि छत्र गजूरको रूपमा राखिएका छन् ।

पशुपतिको मन्दिरमा जस्तै यस मन्दिरको सामुन्ने शिवजीको वाहन साँढेको प्रस्तर मूर्ति छ । तर आकारमा यो साँढे निकै सानो छ । पश्चिमोत्तर कुनामा प्रस्तरका दुइ कलश छन् । शक्तिको चिह्नस्वरूप ती कलश त्यहाँ राखिएका हुन् । पूर्वोत्तर कुनामा चाहिं कामदेवको पाषाण मूर्ति विराजमान छ । शिवजीको जीवनचरित्रसँग कामदेवको सम्बन्ध हुनाले प्रायः प्रत्येक शिव-मन्दिरको नगीचमा कामदेवको मूर्ति राख्ने परम्परा छ ।

## कोत र मजाकदेवल

महेन्द्रेश्वर महादेवको पश्चिमपट्टि कोत पर्दछ । उहिले यो राजकीय शस्त्रागार तथा सभाभवनको रूपमा थियो । वि. सं. १९०३ मा राजकीय सभा बस्दा यहाँ ठूलो रोमाञ्चकारी नरसंहारको घटना घटेको थियो । कोतपर्व भन्ने नामले सो प्रसिद्ध छ । त्यस पर्वमा त्यस वेलाका धेरैजसा ठूलठूला भारादारहरू परेका थिए । सोही पर्वले राणा शासन प्रारम्भ गराएको थियो । यसैले नेपालको इतिहासमा यस ठाउँको ठूलो प्रसिद्धि छ ।

कोतले चर्चेकै भू-भागमा उत्तरपट्टि मजाकदेवल रहेको छ । भाषावंशावलीअनुसार भीममल्लले यो मन्दिर बनाउन लगाएका थिए । तलेजुको देवलभन्दा पनि ठूलो गरी यस मन्दिरको निर्माण गर्ने उनको विचार थियो । तर यो कुरो तलेजुभवानीको इच्छा विरुद्ध हुनाले दिनभरि बनाएको देवल रातभरिमा भत्केर जस्तातस्तै हुन्थ्यो । यसैले मन्दिरको निर्माणकार्य कहिल्यै पूरा भएन र यसको नाउँ मजाकदेवल (नसिद्धिएको देवल) भन्ने रहन गयो भन्ने किंवदन्ती छ[1] ।

भीममल्ल प्रतापमल्ल (वि. सं. १६६८–१७३१) को समयका राजवंशसँग सम्बद्ध प्रसिद्ध भारादार थिए । प्रतापमल्लले उठानमा यिनैको सहायताले आफ्ना बाबु लक्ष्मीनरसिंहलाई कैद गरी राज्याधिकार हात लाएका थिए । पछि उनलाई पनि खतम गरी प्रतापमल्लले राज्यमा आफ्नो एकाधिकार सुरक्षित राखेका थिए[2] । भोटसँग काठमाडौंको ब्यापार बढाउने काममा भीममल्लको ठूलो हात थियो ।

मजाकदेवलको निर्माण तलेजुको मन्दिर जस्तै तहतह पेटी हाली बनाइएको छ । तर यो मन्दिर तलेजुको मन्दिरभन्दा पुरानो हुनुपर्छ भन्ने देखिएको छ । यस मन्दिरमा संघारको रूपमा राखिएको प्रस्तरमा अङ्कित भारवाहकको आकृति कलाको दृष्टिले मल्लकालको प्रारम्भ हुनुभन्दा अघिका देखिन्छन् । यस कारण भीममल्लले यस मन्दिरको निर्माण गराए भन्ने वंशावलीको कथनमा

१. लंसाल, "भाषावंशावली" २ भाग ८४ पृ.

२. यसको प्रमाण भाग 'निर्माणको सिलसिला" शीर्षकमा उद्धृत गरिसकेका छौं ।

शंका उत्पन्न हुन्छ । धेरै समयअघिदेखि भत्केर बाँकिरहेको कुनै प्राचीन मन्दिरको अधोभाग यो हुनुपर्छ भन्ने मेरो विचार छ । यस कुराको निर्णय भविष्यमा गरिने अन्वेषणकार्यमा निर्भर गर्दछ ।

भीमसेन थापाको प्रधानमन्त्रित्वकालमा वि. सं. १८६७ तिर कोतमा सीसमहल नामक विशाल भवनको निर्माण शुरू गरिएको थियो । कौसी तोसाखानामा रहेको एउटा कागतमा यस भवन बनाउँदा लागेको केही खर्च टिपिएका छन्[1] । नासलचोकको डबलीमा अङ्कित अभिलेखमा पनि यसको चर्चा गरिएको छ[2] ।

नेपालमा ऐनाका झ्याल ढोका हाल्ने चलन त्यति साह्रो नभएको समयमा विदेशबाट ऐना झिकाई झ्यालढोका आदिमा सजधजसंग ऐना हाली बनाइएको हुनाले यस भवनको नाउँ सीसमहल भन्ने राखिएको थियो । आजभोलि यस महलको अस्तित्व गइसकेको छ । वि. सं. १८८७ मा टिपिएको भवनहरूको नापोसम्बन्धी कागतमा कोतमा रहेको महलको अटालिको उच्चाई ५२ हात दिइएको छ[3] । श्री ५ सुरेन्द्रवीरविक्रम शाहको शासनकालमा नेपालमा आएका प्रसिद्ध डाक्टर डेनियल राइटले पनि कोतमा बनेको उक्त विशाल भवन देखेका थिए । उनको वर्णनअनुसार सो महल अर्द्धयूरोपीय शैलीमा बनेको थियो[4] ।

कोतभित्र आजभोलि सैनिक गुल्म रहेको छ । त्यहाँभित्र कसैलाई आवतजावत गर्न दिइँदैन । परन्तु दसैंमा हनूमान्ढोका दरवारबाट खड्गजात्रा निस्कँदा कोतभित्रैको बाटो गरी आउने रीति छ तथा शवयात्रा लैजाँदा त्यहींबाट लैजाने चलन छ । यताबाट मल्लकालमा सो ठाउँ मूल बाटोमा पर्दथ्यो भन्ने बुझिन्छ ।

## काकेश्वरको मन्दिर

महेन्द्रेश्वर मन्दिरको दक्षिणपट्टि सिंहढोकाको सामुन्ने काकेश्वर महादेवको मन्दिर रहेको छ । यो मन्दिर वि. सं. १७६८ मा रानी भुवनलक्ष्मीले बनाएको हुनाले प्रारम्भमा यस मन्दिरको नाम भुवनलक्ष्मीश्वर थियो भन्ने कुरो 'स्वकम्बु' को विषयमा विचार गर्दा लेखिसकेका

---

१. "संवत् १८६७ ... श्रीनाथकंपुका कोतमा सिसमहल बनाउनके चुनमोह्रमध्ये चैत्रशुदि २ रोज पैसा रू. ४०"

२. परिशिष्ट, ८६ संख्याको अभिलेख

३. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो)

४. डेनियल राइट्, "हिस्ट्री अफ् नेपाल" दोस्रो संस्करण ६–७ पृ. "About two hundred yards from the palace stands a large semi-European building, called the Kot, which is famous as being the place where, in 1846, the massacre took place of almost all the leading men of the country, by which event the present prime minister was established in power."

छौं। पछि मात्र मानिसहरूले यिनलाई काकेश्वर महादेवको रूपमा पूजा गर्न थालेका हुन्। काकेश्वर महादेवको मूलस्थान काठमाडौंदेखि तीन कोश जति पर उत्तर पूर्व कुनामा पर्दछ। श्रावणशुक्ल द्वादशीको दिन त्यहाँ मेला लाग्छ। यो तिनै महादेवको प्रतिनिधि मानिएको हुनाले यहाँ पनि त्यस दिन मन्दिरको वरिपरि भक्तजनको ताँती लाग्छ तथा मन्दिरमा विशेष पूजा हुन्छ।

वि. सं. १९९० सालको भूकम्पमा यो मन्दिर भत्केको थियो[1]। हाल बनेको मन्दिर शिखरशैली र नेपाली शैलीको अनौठो संमिश्रणबाट बनेको छ। दुइ तह पेटीमाथि चारैतिर थाम हालेर यस मन्दिरको तल्लो तलाको निर्माण गरिएको छ। दोस्रो तलामा मन्दिरको वरिपरि कौसी बनाइएको छ। कौसीको पर्खालबाट तीन चार हातको छाना निकाली त्यसमाथि ठूलठूला टाइल छाइएको छ। यसरी तल्लो तला नेपाली मन्दिर शैलीसँग केही मिल्दोजुल्दो छ तापनि कौसीदेखि माथिको भाग शिखरशैलीमा बनेको छ। यस शैलीमा बनेका भवन पहाडको टाकुरा जस्तो माथि चुच्चिँदै जाने हुनाले यस शैलीको नाम शिखरशैली भन्ने रहन गएको छ। मल्लकालमा यो शैली ग्रन्थकूट भन्ने नामले प्रसिद्ध थियो[2]। शिखरशैलीमा बनेको काकेश्वर मन्दिरको त्यो भाग चूनले पोतिएको छ तथा त्यसको टुप्पामा कलशाकार गजूर राखिएको छ। यस मन्दिरको द्वार दक्षिण-तिर फर्केको छ। स्तम्भ र मूल गारोको बीचमा पर्खाल लाएर प्रवेशद्वार बनाइएको छ। भुइँतलाको भित्ताको मध्य भागमा काष्ठनिर्मित नागको आकार दर्शनीय छ।

## सिंहढोका

काकेश्वर मन्दिरको ठीक सामुन्ने पूर्वपट्टि तलेजुदेवलको मुनि रहेको द्वार सिंहढोका भन्ने नामले प्रसिद्ध छ। चाँगुनारायण दरबार भित्र्याउँदा यही ढोकाबाट भित्र लगिन्छ तथा दसैंमा खड्गजात्रा निस्कँदा यही ढोकाबाट आउने चलन छ। यसै गरी हनूमान्ढोका दरबारसंग सम्बद्ध अरू सांस्कृतिक गतिविधिसँग पनि यस द्वारको सम्बन्ध देखिन्छ। यसैले यस द्वारको विशेष महत्त्व रहेको छ।

यस ढोकाको दायाँ बायाँ दुइटा ठूलठूला प्रस्तरका सिंह छन्। छ सात हात जति अग्ला सिंहका ती मूर्ति प्रस्तरका टुक्राहरू मिलाएर बनाइएका छन्। राजा प्रतापमल्लले वि. सं. १७२० मा भक्तपुरमा आक्रमण गर्दा त्यहाँबाट यी सिंह उठाएर ल्याएका थिए। ठ्यासफुमा यस कुराको

---

१. राणा, "नेपालको महाभूकम्प" "हनूमानढोकाअगाडिका देवलहरू" भन्ने शीर्षकको चित्र। मोहिनीविनोद शर्माले संग्रह गर्नुभएको वंशावलीबाट पनि यस कुराको ज्ञान हुन्छ।

२. तेवारी र अरू, "अभिलेख–संग्रह" ६ भाग ८ पृ., "श्रीश्रीजयपुरन्दरसिंह देवठाकुरसनं ददा नरसिंहजु परलोक विज्याङा थासते निमित्तनं देवल ग्रन्थकूट दयक नरसिंहमूर्ति प्रतिमा स्थापन याङ."

चर्चा गरिएको छ[1] । यसरी यी दुइ सिंह अठाह्रौं शताब्दीको ऐतिहासिक घटनासँग सम्बद्ध छन् ।

यस द्वारमा दुइ तह चौकोसको प्रयोग गरिएको छ। दुवै चौकोस प्रस्तरका छन्। बाहिरी तहको चौकोसमा दायाँ बायाँ दुबैतिर देवदेवताका मूर्ति द्वारपाल र मकरका आकृति कुँदिएका छन्। चौकोसको माथिल्लो भागको टुप्पामा द्वारको मुख्य देवताको रूपमा कुमारको मूर्ति कुँदिएको छ। तलेजुको मन्दिर जाने बाटोको ढोकामा मुख्य देवताको रूपमा कुमारको मूर्ति राखिनु विशेष महत्त्वको कुरो छ।

भित्री तहको चौकोसमा दुवैतिर कलश, स्तम्भ, महाकाल, मकर, किन्नर, नागराजका मूर्ति एकमाथि अर्को पर्ने गरी क्रमशः कुँदिएका छन्। द्वारको माथिल्लो भागमा बीचमा दुइतिर दुइटा नागराजलाई समातेर उडिरहेको गरुडको आकार बनाइएको छ ।

द्वारका ती दुवै चौकोस द्वारगृहको भित्ताले च्यापिएका छन् । द्वारगृहका भित्तामा चुन लाइएको छ । द्वारका खापाचाहिं फलामका सानसाना टोपी जस्ता बुट्टाले सिंगारिएका छन्। दाहिने खापामा माथितिर जयप्रकाशमल्लको तामापत्र टाँगिएको छ[2] । त्यस तामापत्रमा साँखु चाँगुको वनदुर्गको व्यवस्थासम्बन्धी कुरो लेखिएको छ। राजदरवारबाट जाहेर गरिएको प्रशासन व्यवस्थासम्बन्धी सो ताम्रपत्र सबैले देखून् भन्ने ध्येयले राजद्वारमा टाँगिएको बुझिन्छ ।

द्वारगृहको माथिल्लो भागमा चिटिक्क परेको आयताकार सानो बुर्जा बनेको छ। त्यस बुर्जाको मध्य भागमा राजसी पगडी लाएका मल्ल राजाको सानो सालिक राखिएको छ। निश्चित आधार नपाइएको हुनाले यो कुन मल्ल राजाको सालिक हो भन्ने कुरो ठम्याउन सकिएको छैन।

यस द्वारको केही पर दायाँ बायाँ दुइटा सानसाना दुइछाने मन्दिर छन्। यस द्वारकै अंगको रूपमा ती मन्दिर बनाइएका देखिन्छन्। यी दुइ मन्दिरको मध्य भागमा सो द्वार पर्ने हुँदा टाढाबाट हेर्दा ती दुइ मन्दिरले द्वारको शोभा निकै बढाएको छ ।

## विष्णुमन्दिर

जगन्नाथ मन्दिरको उत्तरपट्टि नगीचै विष्णुमन्दिर रहेको छ। यो मन्दिर कहिले बन्यो भन्ने कुरा निश्चित रूपले पत्ता लागेको छैन। मल्लकालमा लेखिएको एउटा ठ्यासफुमा राजा

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १०० पृ.; "सं. ७८३ मार्गशिल बदि १ खपोस दल ह्लचाङा ।। तवदेवरस तया, नखापास तया सिंह खपोस कायाओ हया ।।" (ठ्यासफु) )

२. परिशिष्ट, ६८ संख्याको अभिलेख

प्रतापमल्लले वि. सं. १७२३ माघमा विष्णुदेवलमा चक्र चढाएको कुरा टिपिएको छ[1] । यो उनै विष्णुदेवल हो कि भन्ने देखिन्छ ।

यस मन्दिरमा जम्मा तीन छाना छन् । चारवटा पेटी बनाई त्यसमाथि मन्दिर उठाइएको छ । तल्लो तलामा चारैतिर स्तम्भपंक्ति हाली प्रदक्षिणापथ बनाइएको छ । मन्दिरको चारैपट्टि एक एकवटा ढोका छ । तापनि यसको मूलद्वार पूर्वतिर फर्केको छ । पूर्वपट्टिको पेटीमा मन्दिर-माथि चढ्ने ढुङ्गे सिंढी बनेको छ ।

दोस्रो तलामा चारैपट्टि एक एकवटा गःझ्याल बनेका छन् । टुँडालमा वैष्णवसंप्रदायका देवदेवताका मूर्ति कुँदिएका छन् । छानाको चार सुरमा झिंगटी अडचाउन वज्रलेप गरिएको छ । यस मन्दिरको छानामा प्रयोग गरिएका कुँपा विशेष प्रकारका छन् । गरुड विष्णुका वाहन हुनाले विष्णुको यस मन्दिरमा हालिएका कुनै कुनै कुँपा गरुडकै आकारमा बनाइएका छन् । मन्दिरको टुप्पामा सुवर्णनिर्मित दर्पण पूर्णकुम्भ र छत्र गजूरको रूपमा देखापर्छन् ।

यस मन्दिरभित्र सुनको विष्णुमूर्ति विराजमान छ । पलेटी कसेर बसिरहेका विष्णुले आफ्ना चार हातमध्ये दुइ हातले बाँसुरी समाती बजाइरहेका छन् । यसैले यस मूर्तिलाई कोही कोही हरिकृष्णको मूर्ति पनि भन्दछन् । आजभोलि यस देवताका हातमा रहेका बाँसुरी हराइ-सकेको छ । उपाध्याय ब्राह्मणबाट यसको दैनिक पूजाविधि चल्दछ ।

## ठूलो जलद्रोणी

जगन्नाथ देवलको पूर्वपट्टि लामो बार्दली भएको भवनको मुनि भित्तामा एउटा ठूलो प्रस्तरको जलद्रोणी छ । कलधारा नभएको जमानामा यस किसिमको जलद्रोणीको ठूलो महत्त्व थियो । बाटामा हिंड्दा हिंड्दै तिर्खा लागेको वेलामा यस्तै जलद्रोणीको टुटो खोलेर त्यसमा भरिराखेको पानी खाई मानिसहरू तिर्खा मिटाउँथे । शहरभित्र र बाहिरका बाटाहरूमा तथा विहारआदि सार्वजनिक ठाउँमा यस्ता साना ठूला जलद्रोणी बनाइन्थे । जलद्रोणीमा अभिलेख कुँद्ने चलन पनि थियो । लिच्छविकालदेखिका यस्ता जलद्रोणी पाइन्छन्[2] । प्रायः जलद्रोणीसँगै कुवा खनिएको हुन्छ । सफा सुग्घर गर्न र दिनका दिन कुवाबाट पानी झिकी जलद्रोणीमा भर्न जग्गा गुठी राखिएको हुन्थ्यो । सोही गुठीको आधारमा तिनको दैनिक कार्यकलाप चल्दथ्यो ।

हनूमान्ढोकाको प्राङ्गणमा रहेको यो जलद्रोणी पनि राजमार्गबाट हिंड्डुल गर्ने व्यक्ति-हरूलाई र राजदरवारसँग सम्बद्ध काम कुरो परी त्यहाँ उपस्थित भएका दुनियाँदारहरूलाई

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १०१ पृ.; "सं. ७८७ माघकृष्ण ३ थ्व-कुन्हु च्यासिं देवरस नागण कुयका, माहादेवलस सोतछत्र, कोटिलिंगस सोतछत्र, फार्गुणशुद्धि ७ विष्णुदेवलस चक्र छाया." (ठ्यासफु)

२. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ४५४ पृ.

प्यास मिटाउन बनाइएको छ। वि. सं. १७१० माघमा राजा प्रतापमल्लले यो जलद्रोणी बनाउन-लगाएका थिए[1] । यस जलद्रोणीमा गोलमोल, फारसी, रोमन आदि विभिन्न लिपिमा अभिलेख कुँदाई राजा प्रतापमल्लले आफ्नो विद्वत्ताको प्रदर्शन गरेका छन् । विभिन्न लिपिमा लेखिएको यो अभिलेख बाँचेर जसले अर्थ लगाउन सक्छ त्यो मान्छे साँच्चिकैको पण्डित हो नत्र भने त्यसलाई चोर भने पनि हुन्छ भन्ने भावको कुरो उनले त्यसमा लेखाएका छन् । यस उक्तिद्वारा राजा प्रताप-मल्लले त्यस वेलाका अरू पण्डितहरूलाई हाँक दिएका छन् । यताउताका विभिन्न कुराको ज्ञान हासिल गर्नुपर्छ नत्र ज्ञानको घेरा सीमित भएकालाई पण्डित भन्न सुहाउँदैन भन्ने यसको अभिप्राय देखिन्छ ।

काठमाडौंका अन्तिम मल्ल राजा जयप्रकाश (वि. सं. १७८८–१८२५) को समयमा आएका केपुचिन पादरी जिजेपले यो जलद्रोणी देखेका थिए । उनले आफ्नो भ्रमण वृत्तान्तमा यसको चर्चा गरेका छन् । राजदरवारको प्राङ्गणमा रहेको सो ठूलो जलद्रोणीबाट सबैले पानी खान पाउँछन् । पानी खान जाँदा एउटा ठूलो खुड्किलो उक्लेर जानुपर्छ भनी उनले बयान गरेका छन् । फारसी, रोमन आदि लिपिमा लेखिएको जलद्रोणीको अभिलेख देखेर उनी छक्क परेका थिए । आफू र आफ्ना साथीहरू आउनुभन्दा अगाडि काठमाडौंमा कोही यूरोपवासी आएका थिए वा थिएनन् भन्ने कुरो जान्न उनी उत्सुक भएका थिए । तर त्यो कुरो कसैले बताउन सकेनन् भनी उनले लेखेका छन्[2] ।

१. परिशिष्ट, २२ संख्याको अभिलेख

२. फादर् जिजेप्, "एन् अकाउन्ट अफ् द किङ्डम् अफ् नेपाल" एशियाटिक् रिसर्चेज् दोस्रो भाग (बनारस, भारत–भारती, फेरि छापिएको ई. सं. १९७२) ३४६ पृ.;

"In a wall of the royal palace of Cathmandu, which is built upon the court before the palace, there is a great stone of a single piece, which is about fifteen feet long and four or five feet thick on the top of this great stone there are four square holes at equal distances from each other. In the inside of the wall they pour water into the holes, and in the courtside, each hole having a closed canal, every person may draw water to drink. At the foot of the stone is a large ladder, by which people ascend to drink; but the curiosity of the stone consists in its being quite covered with characters of different languages cut upon it. Some lines contain the characters of the language of the country; others the characters of Tibet, others Persia, others Greek, besides several others of different nations; and in the middle there is a line of Roman characters which appears in this form AVTOMNEW INTER LHIVERT, but none of the inhabitants have any knowledge how they came there, nor do they know whether or not any European had ever been in Nepal before the missionaries, who arrived there only the beginning of the present century. They are manifestly two French names of seasons, with an English word between them."

यस जलद्रोणीको ठीक पछाडितिर सुन्दरचोक पर्दछ । केही अगाडिसम्म पनि त्यस चोकमा रहेको सुनधाराको पानी दिनप्रतिदिन यसमा भरिन्थ्यो, कलधारा आएपछि मात्र सो चलन छुट्यो भन्ने बूढापाकाहरूको भनाइ छ।

## हनूमान्

दरवार पस्ने सुवर्णनिर्मित मूलद्वारको दायाँपट्टि हनूमान्को ठूलो मूर्ति खडा छ। यिनै हनूमान्को नामले यस राजदरवारको प्रसिद्धि हुनाले त्यस मूर्तिको विशेष महत्त्व छ। राजा प्रतापमल्लले हनूमान्को यो मूर्ति स्थापना गरेका थिए। ठूलो घण्टाको सामुन्ने योभन्दा सानो अर्को हनूमान्को मूर्ति छ। त्यो पनि राजा प्रतापमल्लकै कृति हो। यी दुइटै हनूमान्को पीठमा एउटै बेहोराको अभिलेख कुँदिएको छ। ती अभिलेखअनुसार वि. सं. १७२६ मा हनूमान्का ती दुइ मूर्ति स्थापना गरिएका थिए[1]।

सात आठ हात जति अग्लो चारपाटे स्तम्भमाथि हनूमान्को मूर्ति स्थापना गरिएको छ। स्तम्भको माथिल्लो भागमा पहाडको दृश्य देखाइएको छ। मूर्तिको पादपीठ पनि पहाडको आकारमा बनाइएको छ। त्यसमाथि वानरको आकृतिसँग मिल्ने हनूमान्को रातो मूर्ति खडा छ। वामनद्वादशीको दिन हनूमान्लाई तेल र सिन्दूर मिलाएर लिपिन्छ। यसले गर्दा हनूमान्को पाषाणमूर्ति धेरै तह रंगले छोपिएको छ। यस मूर्तिलाई सर्वदा रातो वस्त्र लगाइएको हुन्छ तथा रातो रंगको चहकिलो छाता ओढाइएको हुन्छ। मूर्तिको दायाँ बायाँ नेपालको राष्ट्रिय झण्डा आकारको धातुनिर्मित ध्वजा राखिएका छन्।

हनूमान् प्रसिद्ध हिन्दु देवता हुन्। वानरदेवताको रूपमा यिनको पूजा हुन्छ। रामायणको कथामा अलौकिक पुरुषार्थ देखाउने वानरसैन्यको नाइकेको रूपमा यिनको वर्णन गरिएको पाइन्छ। रामचन्द्रका उनी परम भक्त थिए। वानरसैन्यको सहायताले रामचन्द्रले राक्षसहरूको नाश गरेका थिए भन्ने कथा हाम्रो यहाँ प्रसिद्ध छ।

मल्लराजाहरू आफूलाई राजचन्द्रका वंशज भन्दथे। उनीहरू हनूमान्प्रति विशेष श्रद्धाभाव राख्दथे। उनीहरूको झण्डामा हनूमान्को आकृति लेखिएको हुन्थ्यो। यसैले आफ्नो प्रशस्तिमा उनीहरू हनूमद्ध्वज भनी लेख्दथे[2]।

हनूमान्ढोकामा जस्तै अरू मल्ल राजदरवारमा पनि हनूमान्का मूर्ति स्थापना गरिएका छन्। पाटनमा राजा सिद्धिनृसिंहले र भक्तपुरमा राजा भूपतीन्द्रमल्लले आफ्नो दरवारअगाडि

---

१. परिशिष्ट, ३३ संख्याको अभिलेख

२. तेवारी र अरू, "अभिलेखसंग्रह" ६ भाग १३ पृ.; "हनूमद्ध्वज राजऋषीश्वरश्रीश्री-जयसिद्धिनरसिंहमल्लदेव प्रभु ठाकुरसन।" परिशिष्ट,२० संख्याको अभिलेख १६ रौं पंक्ति।

हनूमान्‌का मूर्ति राख्न लगाएका थिए । गोरखाका राजा पृथ्वीपति शाहले पनि आफ्नो दरवार-नजीकै हनूमान्‌को मूर्ति स्थापना गरेका थिए[1] । यसरी राजाहरूले आफ्नो दरवारमा हनूमान् स्थापना गर्नामा महत्त्वपूर्ण कारण थियो। नरपतिजयचर्या नामक स्वरशास्त्रको ग्रन्थबाट हनूमान्‌का मूर्ति स्थापना गर्नामा के हेतु थियो भन्ने कुरो खुल्दछ । काठ ढुङ्गा धातु आदि पदार्थको हनूमान्‌को मूर्ति बनाउनू भनी त्यस ग्रन्थमा बताइएको छ । यसो गर्‍यो भने अनिकाल पर्दैन, रोगको डर हुँदैन, शत्रु आउन सक्दैन, वज्र पर्दैन, बोक्सी, भूत, पिशाच आदिको डर हुँदैन भनी त्यहाँ लेखिएको छ । मल्लकालमा त्यस ग्रन्थको ठूलो प्रसिद्धि थियो । भक्तपुरका राजा जगज्ज्योतिमल्लले नरपति-जयचर्याको स्वरोदय भन्ने अध्याय काशी, तिरहुत आदि ठाउँसम्म मान्छे पठाई खोजी खोजीकन सार्न लगाएका थिए । उनले आफैले नेवारी भाषामा त्यसको अनुवादसमेत गरेका थिए[2] ।

राजा प्रतापमल्लले पनि लडाईंमा विजय प्राप्त होस्, घरमा सुरक्षा होस् भन्ने कामनाले हनूमान्‌को मूर्ति ढोकामा राखेका थिए । यो कुरो हनूमान्‌को पादपीठमा कुँदिएको उनको अभि-लेखबाट बुझिन्छ । मल्ल राजदरवार किल्लाको रूपमा रचना गरिने हुँदा किल्ला रूपको आफ्नो दरवारमा शत्रुहरू पस्न नसकुन् भन्ने भावनाले प्रतापमल्लले ढोकामा हनूमान् स्थापना गरेका थिए भन्ने प्रतीत हुन्छ ।

## आगमछेंमन्दिर

हनूमान्‌को पछाडि लामो बार्दली भएको घरको छानामा बुर्जाको रूपमा उठेको तीनछाने मन्दिर आगमछें भन्ने नामले प्रसिद्ध छ ।मोहनचोकको कुना कुनामा बनेका भिन्न भिन्न आकारका तीन बुर्जामध्ये एक बुर्जा आगमछेंको यो मन्दिर हो । यस मन्दिरभित्र मल्ल राजाहरूको गुप्त तरीकाले पूजा गरिने आगमदेवता स्थापना गरिएका छन् । प्रायः नेवार जातिका प्रत्येक वंशको आफ्-आफ्नो आगमदेवता हुन्छ तथा त्यस देवताको लागि भिन्नै कोठा अथवा मन्दिर छुट्याइएको हुन्छ । आफ्नै वंशका व्यक्तिबाहेक अरू कोही पनि त्यहाँ पस्न नपाउने कडा नियम तिनीहरूको हुन्छ । यसैले मल्लवंशी शासकहरूको अन्त्य भएदेखि यस आगमछेंको मन्दिरभित्र गई पूजा गर्ने चलन छुट्यो र त्यस वेलादेखि आजसम्म यस मन्दिरको द्वार सदा सर्वदा बन्द छ भन्ने अनुश्रुति छ । मोहनचोकको निर्माण प्रतापमल्लले गराएका हुनाले त्यस चोकको एक अंगको रूपमा बनेको यो मन्दिर पनि उनकै कृति हुनुपर्छ भन्ने अनुमान हुन्छ । माथि बुईंगलमा यस मन्दिरको पूर्वी द्वारको सामुन्ने एउटा सानो घण्टा छ । त्यस घण्टामा अङ्कित अभिलेखअनुसार श्री ५ गीर्वाणयुद्ध र सुवर्णप्रभादेवीले वि. सं. १८५७ माघ सो घण्टा चढाएका थिए[3] । योबाहेक यस मन्दिरसँग

---

१. नयराज पन्त, "हनूमान्‌को स्थापना गर्नामा हेतु" पूर्णिमा (वि.सं. २०२१ वैशाख) १ वर्ष १ अंक २६–२७ पृ.

२. सोही, २७–३० पृ.

३. परिशिष्ट, ८१ संख्याको अभिलेख

सम्बन्ध राख्ने अरू कुनै अभिलेख प्राप्त भएको छैन ।

यस मन्दिरको चारैं दिशामा नेपाली मन्दिरमा प्रयोग गरिने तोरणयुक्त कलात्मक द्वार छन् । द्वारको दायाँबायाँ चिटिक्क परेका याकुञ्याल दर्शनीय छन् । परन्तु लामो बार्दली भएको घरको छानाले दक्षिणी र उत्तरी द्वार छोपिएका छन् । यसै गरी पूर्वो द्वार पनि नासलचोकभित्रको सीसाबैठकको छानाले ढाकिएको छ । प्राङ्गणतिर फर्केको पश्चिमपट्टिको द्वार मात्र टाढैबाट देख्न सकिन्छ । विचार गरी हेर्दा प्रारम्भमा मन्दिरका ती द्वार छानाले त्यसरी छोपिएका थिएनन् । पछि उपर्युक्त भवन जीर्णोद्धार गरिंदा तला अग्लो पारिएको हुनाले मात्र ती द्वार छोपिन गएका हुन् भन्ने बुझिन्छ ।

यस मन्दिरका टुँडालहरूमा शैवसंप्रदायका देवदेवीहरूको मूर्ति अङ्कित गरिएका छन् । छानाको कुनाकुनामा मयूरको आकारसँग मिल्ने कुँपा प्रयोग भएका छन् तथा छानाको मुनि चार सुरमा दुइ दुइटा कुँसल जोडेर हालिएका छन् । यो यस मन्दिरको विशेषता हो । योबाहेक यस मन्दिरको टुप्पामा प्रयुक्त गजूर पनि विशेष प्रकारको छ । यसको गजूर अरू साधारण मन्दिरको जस्तै कलशको आकारमा बनाइएको छैन । पाटनको कृष्णमन्दिर जस्तो देखिने शिखरशैलीमा बनेको धातुको सानो देवल नै यस मन्दिरको गजूर बनेको छ । यस किसिमका गजूर विरलै छन् । पाटन दरवारमा बनेका केही मन्दिरमा मात्र यस्ता गजूरको प्रयोग गरिएको पाइन्छ ।

## सुवर्णद्वार

सुवर्णद्वार दरवार पस्ने मूलद्वार हुनाले विशेष रूपले सजाइएको छ । यस द्वारको दायाँ बायाँ भाले पोथी दुइ सिंह उभिरहेका छन् । दायाँपट्टिको सिंहमाथि शिव र बायाँपट्टिका सिंहिनीमाथि शक्ति विराजमान छन् । शिव र शक्ति दुवैका चार हात छन् । शिवले बायाँपट्टिका हातमा त्रिशूल र कपाल लिइरहेका छन् । दायाँपट्टिका दुइ हात भने फुटिसकेका छन् । शक्तिले दायाँपट्टिका हातमा चक्र र खड्ग बायाँपट्टिको हातमा चाहिं शंख र त्रिशूल लिएका छन् । शिव शक्ति दुवैले नरमुण्डको माला लगाएका छन् । शिवको कानमा सर्पकुण्डली देखिन्छ ।

शिवको पछिल्तिर सानो प्रस्तरस्तम्भमाथि बहुभुज हनूमान् पहाड चढ्न लागेका देखिन्छन् । शक्तिको पछिल्तिर रहेको सानो प्रस्तरस्तम्भमा चाहिं माछाको आकृति राखिएको छ । माछा मङ्गलको प्रतीक मानिन्छ ।

सुवर्णद्वारको दायाँ बायाँ चौकोसको सुवर्णपट्टले मोडेका थाममा कलशको आकारमा बनाइएका छन् । बीचमा दुइ खापा जोडिने ठाउँमा खड्ग र त्यसमुनि कलशको आकृति देखाइएको छ । दुइ खापामा विभक्त यस द्वारको बायाँपट्टिको खापा दुइ खण्डमा विभाजित छ । आवश्यकता-अनुसार तल्लो खण्ड मात्र पनि खोल्नु हुने गरी यो बनाइएको छ ।

यस द्वारको चौकोसको माथिल्लो भागमा सुन्दर अक्षरमा अभिलेख अङ्कित छ। सो अभिलेखअनुसार वि. सं. १८६७ भाद्रमा यस द्वारको निर्माण भएको थियो[1]। परन्तु यसभन्दा अधि पनि यहाँ एउटा ढोका थियो। सो ढोका आज भोलिको ढोकाभन्दा सानो आकारको थियो भन्ने कुरा यस ढोकाको ढुङ्गे संघारले बुझाउँछ। त्यस संघारमा अहिले पनि पुरानो ढोकाको लागि बनाइएका प्वाल अझै देखिन्छ। हालै मात्र ती प्वाल सिमेन्टले टालिएको छ। मल्लकालमा प्रायः सबैजसो झ्याल ढोका सानसाना रूपमा बनाइने हुनाले मल्लकालिक ढोकाकै अवशेषमा यस द्वारको निर्माण भएको देखिन्छ।

यस सुवर्णद्वारको उपयुक्त अभिलेखमा एउटा अनौठो कुराको उल्लेख आएको छ। राजदरबारमा प्राचीनकालदेखि संगृहीत तामापत्रहरू बेचेर त्यताबाट उठेको पैसाले यो सुवर्णद्वार बनाइएको कुरा त्यहाँ लेखिएको छ। यो सुवर्णद्वार बनाउन लाग्ने सुन र तामाको भाउको आधारमा विचार गरी हेर्दा प्रशस्त तामापत्र त्यस वेला बिक्री भएका थिए भन्ने कुरा बुझिन्छ। मध्यकालमा प्रायः एक राज्यले अरू राज्यसंग सन्धिपत्र गर्दा र कुनै प्रशासनव्यवस्थाको तर्जुमा गर्दा पनि तामापत्र कुँदाउने चलन थियो। यस्ता केही तामापत्र भक्तपुर दरबारको मूलचोकमा तथा हनूमान्ढोकाको तलेजुमन्दिरमा पनि अझ विद्यमान छन्[2]। यी तामापत्र नेपालको इतिहास लेख्ने काममा अत्यन्त उपयोगी छन्। परन्तु यस उपयोगिताको विचार नगरी बिक्री गरेर त्यताबाट उठेको पैसाले सुनको ढोका बनाएको कुरा ढोकामा लेखाउन लगाएको देख्दा हाम्रा पूर्वजहरूमा ऐतिहासिक वस्तुको संरक्षण गर्ने भावनाको निकै कमी थियो भन्ने देखिएको छ।

सुवर्णद्वारमाथि केही कलापूर्ण सुन्दर मूर्ति देखापर्छन्। काठका ती मूर्तिद्वारा तीन विभिन्न दृश्य त्यहाँ देखाइएका छन्। दायाँपट्टि कृष्ण र गोपिनीहरू नाचिरहेको दृश्य प्रस्तुत गरिएको छ। कृष्णको अनेक गोपिनीहरूसँग प्रेमसम्बन्धको कथा प्रसिद्ध छ। सत्यभामा र रुक्मिणी उनका प्रियतमा थिए। सुवर्णद्वारमाथि कृष्णजीको दायाँ बायाँ रहेका स्त्रीमूर्ति सत्यभामा र रुक्मिणीकै प्रतिमूर्ति हुन सक्तछन्।

दोस्रो दृश्यमा सयौं शिर सयौं हात भएका विश्वरूपको मूर्ति प्रस्तुत गरिएको छ। यो मूर्ति पनि कृष्णकै चरित्रमा आधारित छ। महाभारतको युद्ध शुरू हुनै लाग्दा अर्जुनले आफ्नै दाजुभाइ कौरवहरूसँग कसरी लड्ने भनी युद्ध गर्न अस्वीकार गर्दा कृष्णले अर्जुनलाई संसार के हो भन्ने देखाउन सारा विश्व आफ्नो शरीरमा अन्तर्भाव गरी देखाइदिएका थिए। यही कुरा विश्वरूपको यस प्रतिमामा प्रस्तुत गरिएको छ। परन्तु यस मूर्तिमा पछि आएको तान्त्रिकसंप्रदायको केही प्रभाव पनि देखिएको छ। विश्वरूपको पेटमा पनि मुख देखाइएको छ। त्यस मुखबाट एउटा तिगै मान्छे बाहिर निस्किरहेको दृश्य निकै चाखलाग्दो छ।

१. परिशिष्ट, ८४ संख्याको अभिलेख

२. तेवारी र अरू, "अभिलेखसंग्रह" ११ भाग १०–१३ पृ., परिशिष्ट ६ संख्याको अभिलेख

राजा प्रतापमल्लले वि. सं. १७७४ श्रावणमा यस्तै एउटा विश्वरूपको ढलौटे मूर्ति बनाउन लाएका थिए[1] । सो ढलौटे मूर्ति वर्षेनि इन्द्रजात्राको दिन थानाअगाडि प्रदर्शित गरिन्छ। सुवर्णद्वार माथि रहेको विश्वरूपको यो मूर्ति पनि राजा प्रतापमल्लकै कृति हुन धेरै सम्भव छ। तर यी मूर्ति प्रारम्भदेखि नै यहीं स्थापना गरिएको देखिदैन । यो कुरो यस विश्वरूपको पछिल्तिर बनेको आँखिझ्यालले बताउँछ। यस मूर्तिले सो आँखिझ्याल ढपक्क ढाकेको हुनाले यो मूर्ति यहाँ बनिसके-पछि मात्र सो झ्याल बनेको हुन सक्दैन। बरु पहिलेदेखि बनिराखेको आँखिझ्याललाई छोप्ने गरी यही विश्वरूपको मूर्ति त्यहाँ राखिएको देखिन्छ।

तेस्रो दृश्यमा वीणा हातमा लिइरहेका राजा र उनका नगीचै वीणाको धुन सुनेर बसि-रहेकी रानी देखाइएको छ। राजाको आकृति प्रतापमल्लको सालिकसँग मिल्दोजुल्दो देखिनाले ती दुइ मूर्ति राजा प्रतापमल्ल र उनका रानीको प्रतिमा हुन् भन्ने देखिन्छ। राजाले राजसी पगडी लाएका छन्। राजोचित ओज राजाको मुखमण्डलमा देखिन्छ तथा भद्र महिलाको आकारमा देखिने सुकुमारीपन रानीको आकृतिमा झल्कन्छ। अनुपात मिलेको राजारानीको सुन्दर शरीरले उत्कृष्ट कलाको परिचय दिएको छ। यसैले मल्लकालका उच्चकोटिको काष्ठकलाको नमूना यी हुन सक्दछन्।

## नासलचोक

सुवर्णद्वारबाट भित्र पसेपछि नासलचोक आउँछ। यो चोक हनूमान्‌ढोकामा हाल रहेका सबै चोकभन्दा ठूलो छ। मल्लकालका ऐतिहासिक सामग्रीहरूमा अनेक ठाउँमा यस चोकको उल्लेख आउँछ। अहिले यस चोकमा रहेका धेरैजसा भवन शाहकालमा बनेका छन् तापनि मल्ल-कालमा बनेका अनेकन् कृतिहरूको अवशेष पनि यहाँ अझ बचेका छन्। यस चोकको पूर्वपट्टि मूल-चोक, पूर्व दक्षिण कुनामा वसन्तपुर, दक्षिणपट्टि सडक, पश्चिमपट्टि लामाचोक र दाखचोक, पश्चि-मोत्तर कुनामा प्राङ्गण, उत्तरपट्टि मोहनचोक पर्दछ। यस चोकको पूर्वी लङ्मा नासल देवता (नाटचेश्वर) को सानो देवल छ। सोही देवताको नामबाट यस चोकको नामकरण भएको छ। मल्लकालमा विशेष गरेर राजदरबारमा नचाइने नाचको अभ्यास र प्रदर्शन नासलचोकमा गरि-न्थ्यो[2] । मूलद्वारबाट पस्नासाथ आउने यो चोक राजा र प्रजा भेटघाट गर्ने काममा पनि प्रयोग गरिन्थ्यो। राजदरबारसंग सम्बन्ध राख्ने कुनै कुरो परेको खण्डमा प्रजाहरू यस चोकमा आउँथे। राजपरिवारलाई कुनै दुःख आइपरेमा प्रजाहरू यस चोकमा आएर समवेदना प्रकट गर्दथे। केही दशकअगाडिसम्म पनि यो चलन हराइसकेको थिएन।।

१. परिशिष्ट, २६ संख्याको अभिलेख

१. वज्राचार्य, "ऐतिहासिक घटनावलि" १९५ पृष्ठ. "सं. ८६४ भाद्रव ६ आदित्यवार थ्वकुन्हु वाधवानल प्याखनया अंकचाल पूजा नाशलचुकस" (ठ्यासफु)

शाहकालमा आएर यस चोकले निकै महत्त्वपूर्ण स्थान प्राप्त गर्‍यो । शाह राजाहरूको राज्याभिषेकको समारोह यहीं संपन्न हुन थाल्यो । यसभन्दा पहिले मल्लकालमा राज्याभिषेकसम्बन्धी काम मूलचोकमा गरिन्थ्यो । विशाल नेपालका शासक शाहवंशी राजाहरूको राज्याभिषेकको समारोहको लागि मूलचोक सांगुरो भएको हुनाले दरबारको सबभन्दा ठूलो चोकको रूपमा रहेको नासलचोकमा राज्याभिषेकको काम हुन थालेको देखिन्छ ।

सुवर्णद्वारबाट भित्र पस्नेबित्तिकै ढोकाको अगलबगलमा फले देखापर्छ । मल्लकालमा बनेका भवनको द्वारमा प्रायः यस किसिमका फले बनाइन्थे । भक्तपुरको मूलचोक पस्ने द्वारमा पनि त्यस्ता फले देखापर्छन् । आगन्तुकहरूलाई प्रतीक्षा गर्न र द्वारपाल बस्न ती बनाइन्थे ।

फलेको बायाँपट्टि पछाडि काष्ठनिर्मित सानो सुन्दर काष्ठद्वार देखापर्छ । साढे तीन हात जति अग्लो त्यस द्वारले मल्लकालका द्वारमा प्रयुक्त हुने उत्कृष्ट काष्ठकलाको नमूना प्रस्तुत गरेको छ । त्यस द्वारको दायाँ बायाँ देवरूपधारी जय र विजयको मूर्ति समावेश गरिएका छन् । विजययात्राको लागि प्रस्थान गर्दा अथवा अरू कुनै काम सम्पन्न गर्न बाहिर निस्कंदा विघ्नबाधाहरूमाथि विजय प्राप्त होस् भन्ने हेतुले द्वारमा ती मूर्ति स्थापना गरिन्थे । यी मूर्तिको नगीचै द्वारको पार्श्वभागमा दुइ पूर्णकलश छन् । तिनका बिर्कामाथि बसेका वरुणका मूर्ति दर्शनीय छन् । पूर्णकलशभन्दा माथि गोलाकार नेत्र देखापर्छन् । ती नेत्रको मध्यभागमा सप्ताश्ववाही सूर्यका मूर्ति कुँदिएका छन् । यसै गरी द्वारको पार्श्वभागमा शिकारको दृश्य अङ्कित गरिएका छन् ।

मल्लकालका अरू द्वारमा जस्तै यस द्वारमा पनि दुइ खापा छन् । तर यसमा प्रयोग गरिएका खापा विशेष प्रकारका छन् । ती खापामा महाकाल, वरुण आदि चार विभिन्न देवताका मूर्ति कुँदिएका छन् । अनेकन् आभूषण र आयुधद्वारा अलंकृत ती मूर्ति मल्लकालिक काष्ठकलाको अध्ययन गर्न उपयोगी छन् । यस द्वारको पछाडि मोहनचोक पर्ने हुनाले यो काष्ठद्वार प्रारम्भमा मोहनचोक पस्नाको लागि बनाइएको देखिन्छ ।

सुवर्णद्वारबाट पसेर केही पाइला पर गएपछि नरसिंहको भव्य प्रस्तरमूर्ति देखापर्छ । आधा सिंह र आधा मान्छेको आकारमा नरसिंहको मूर्ति बनेको छ । प्रसिद्ध पौराणिक कथाको आधारमा यस मूर्तिको निर्माण गरिएको छ । नरसिंहले हिरण्यकश्यपु नामक दैत्यलाई काखमा राखेर मारेको दृश्य यस मूर्तिमा देखाइएको छ । हिरण्यकश्यपुले ब्रह्माजीबाट कुनै पनि मान्छे अथवा पशुले मार्न नसक्ने वर पाएका थिए । यसैले भगवान् विष्णुले आधा मान्छे र आधा पशुको रूप लिई तिनलाई मारेका थिए । यही कुरा यस मूर्तिले प्रस्तुत गरेको छ ।

नरसिंहको ठाडठाडा केश नै मुकुटको रूपमा देखाइएको छ । उनका माथिल्ला दुइ हातमा चक्र गदा छन् । हिरण्यकश्यपुलाई काखमा राखेर अरू दुइ हातका नङग्राले पेट चिरिरहेको दृश्य देखाइएको छ । दायाँपट्टि दैत्यको खड्ग बाङ्गिएर काम नलाग्ने भएको छ । उत्तानो परेर काखमा

लडिरहेको दैत्यको हात र गोडा काखी च्यापेर उनलाई हलचल गर्न नसक्ने बनाइएको छ। लौहलेप गरिएको यो प्रस्तरमूर्ति मल्लकालको विशिष्ट मूर्तिमध्ये पर्दछ। नरसिंहको पादपीठमा दायाँतिर नमस्कार मुद्रामा रहेका राजा प्रतापमल्ल र बायाँतिर हिरण्यकश्यपुको सानासाना मूर्ति कुँदिएका छन्। नरसिंहका दुइटै आँखामा चाँदीका दृष्टि लगाइएका छन्। योबाहेक चक्र गदा आदि विभिन्न ठाउँमा धातुको खोल बनाएर नरसिंहको मूर्ति सिंगारिएको छ। दैत्यको शिरपेच पनि धातुकै छ।

राजा प्रतापमल्लले वि. सं. १७३० मा नरसिंहको यो मूर्ति स्थापना गरेका हुन्। यसको पादपीठमा संस्कृत र नेवारीभाषामा अभिलेख अङ्कित छ[1]। त्यस अभिलेखमा यस मूर्तिसंग सम्बन्ध राख्ने एउटा विचित्रको घटना लेखिएको छ। राजा प्रतापमल्ललाई नाचगानमा ठूलो सौंख थियो। एक पटक उनी आफैं नरसिंहको रूप लिएर रङ्गशालामा उत्रेका थिए। त्यस वेलाको चलनअनुसार रङ्गशालामा सानो वेदिका बनाई नरसिंहलाई पूजा गरिराखेको थियो। नाच सिद्धिसकेपछि त्यस वेदिकाबाट अनौठो आवाज निस्कन थाल्यो। सो आवाज त्यस वेदिकामा अदृश्य रूपले उपस्थित भएका स्वयं नरसिंहको आक्रोश थियो। यो कुरा बुझी राजा प्रतापमल्लले नरसिंहलाई शान्त पार्न नासलचोकमा रहेको नरसिंहको यो मूर्ति बनाएका हुन् भनी त्यहाँ बताइएको छ। यस्तै भावको कुरो कवीन्द्रपुरमा रहेको प्रतापमल्लकै अर्को अभिलेखमा पनि लेखिएको छ[2]।

नासलचोकको उत्तरी लङ सीसाबैठक भन्ने नामले प्रसिद्ध छ। नेपालमा काँचका झ्याल राख्ने चलन त्यति साह्रो नचलेको समयमा झ्यालका खापाहरूमा ऐनाका झ्याल हाली बनाइएको हुनाले यस भवनको नाम सीसाबैठक भन्ने रहन गएको छ। यसै चोकको डबलीमा अङ्कित शिलालेखबाट यस भवनको वर्तमान रूप श्री ५ राजेन्द्रवीरविक्रमको पालामा तयार भएको अनुमान हुन्छ। मोहनचोक र नासलचोकलाई जोड्ने यस भवनको प्राचीन रूपचाहिं राजा प्रतापमल्लको पालामा बनेको थियो। यस भवनको पूर्व कुनामा रहेको पञ्चमुखी हनूमान्को मन्दिर र पश्चिम कुनामा रहेको आगमछें मन्दिर राजा प्रतापमल्लले नै बनाएर गएका प्राचीन कृतिका अवशेष हुन्। जीर्णोद्धार हुँदा ती दुइ मन्दिर नेपाली शैलीमा यथावत् रहे तापनि ती मन्दिरसंग टाँसिएको यो भवनचाहिं निकै परिवर्तित भयो र सीसाबैठकको रूपमा परिणत भयो भन्ने बुझिन्छ।

चारतला भएको यस भवनको भुइँबैठकमा राजगद्दी रहेको छ। कपासको चारपाटे बिछ्यौनामा पछिल्तिर र दायाँ बायाँ दुइटा तकिया हाली बनाइएको सो गद्दी सर्वदा सफा सेतो तन्नाले मोडिएको हुन्छ। हेर्दा यो राजगद्दी साधारण किसिमको छ तापनि नेपाली संस्कृतिको एक पक्षसंग यसको घनिष्ट संबन्ध छ। गुभाजू तथा बाँडा भनी प्रसिद्ध पौरोहित्यको काम गर्ने बौद्धधर्मावलम्वी नेवारहरू चूडाकर्म गर्दा आफ्नो परम्परागत चलनअनुसार हनूमान्ढोकामा आई

१. परिशिष्ट, ३६ संख्याको अभिलेख

२. परिशिष्ट, ३६ संख्याको अभिलेख

३. परिशिष्ट, ८६ संख्याको अभिलेख

नासलचोकमा रहेको यस राजगद्दीमा पानसुपारी चढाउन आउँछन्। यसरी पानसुपारी चढाउन नआएको खण्डमा चूडाकर्मको विधि पूरा भएको मानिंदैन तथा गुभाजू अथवा बाँडाको रूपमा पौरोहित्यको काम गर्ने मान्यता उसलाई प्राप्त हुँदैन। यो परम्परा अद्यापि कायमै छ। रातो चीवरवस्त्र पहिरी कपाल खौरी हातमा पिण्डपात्र लिई बौद्ध भिक्षुको रूपमा ती बौद्धधर्मावलम्वीहरू पंक्तिबद्ध भएर राजगद्दीमा पानसुपारी चढाउन आएको दृश्य हनूमान्ढोकामा बराबर देख्न पाइन्छ। चौध पन्ध्र वर्षको उमेर पुग्नुभन्दा अघि नै सो चूडाकर्मको विधि सम्पन्न गरिने हुनाले तिनीहरू प्रायः किशोर अवस्थाका हुन्छन्।

मूलचोकसंग जोडिएको यस चोकको पूर्वी लङ नेपाली शैलीमा बनेको छ। झिंगटीको छाना छाएको दुइतले त्यस भवनको भुइँतलामा खुला दलान छ। दोस्रो तलामा खोल्न हुने खालका आँखिझ्याल छन्। ती आँखिझ्यालको बीचमा छुट्टै सानसाना पाचुखाझ्याल बनेका छन्। सोही पाचुखाझ्यालको मुनि चून पोतिएको गुम्बज शैलीको नासलदेवता (नाटयेश्वर शिव) को एउटा सानो मन्दिर छ। यो मन्दिर हेर्दा साधारण छ तापनि यसको प्रसिद्धि भने ठूलो छ। काठमाडौंको परम्परागत कुनै सांस्कृतिक नाचगानको अभ्यास गर्दा यस नासलदेवतालाई पूजा गर्ने रीति चलेर आएको छ। मल्लकालमा लेखिएको एउटा ठ्यासफु मा वि. सं. १८०१ भाद्रमा बाडवानल नाउँको नाटकको अङ्कुचालपूजा (नाचको प्रदर्शन शुरू गर्नुभन्दा अघि गरिने पूजा) नासलचोकमा संपन्न गरेको उल्लेख पाइन्छ[1]। आजभोलि पनि ज्यापूहरू धिमेबाजँ (एक किसिमको परम्परागत बाजा) बजाउन सिक्दा पहिलो दिन यस चोकमा नासलदेवताको अगाडि बसी अभ्यास गर्ने चलन छ। यसै गरी खोकनाको बाह्रवर्षे सिखाली नाच तथा नरदेवी भद्रकाली बाघभैरव आदि विभिन्न देवदेवीका सामयिक नाचहरू पनि नासलदेवताका अगाडि बाजागाजासहित ल्याएर दर्शन गराउने परम्परा अझै विद्यमान छ।

नासलदेवताको मन्दिरसँगै रहेको निशानघरमा शार्दूलजङ्ग गुल्मको निशान राखिन्छ। श्री वखतमानसिंह बस्नेतको संग्रहमा रहेको एउटा पुरानो कागतअनुसार शार्दूलजङ्ग पल्टनको स्थापना वि. सं. १८५७ मा भएको थियो। यस निशानघरको सामुन्ने एउटा मौलो छ। सो मौलो शार्दूलजङ्ग गुल्मकै मौलो हो। दसैं तथा चैतदसैंमा धार्मिक विधिअनुसार पशुबलि दिने काम यसमा हुन्छ। तीन चार दशक जति अघिदेखि हनूमान्ढोकामा काम गर्ने व्यक्तिहरूको भनाइअनुसार वि. सं. २०१५ देखि मात्र उक्त निशानघरमा शार्दूलजङ्ग गुल्मको निशान राखिन लागेको हो, त्यसभन्दा पहिले सो निशान बडा गुर्जुको घरमा रहेको थियो। यसैले बोलचाली भाषामा यसको नाउँ गुर्जुको पल्टन रहन गएको छ।

निशानघरदेखि उता वसन्तपुर र नासलचोकलाई जोड्ने शाहकालको प्रारम्भमा बनेका विशाल भवन शुरू हुन्छन्। ती भवन मल्लकालमा बनेका भवनहरू जस्तै नेपाली शैलीमा बनेका

१. ठ्यासफुको उक्त अंश माथि उद्धृत गरिसकेका छौं।

छन् तापनि तिनका झ्यालढोका आदि घरका सबै अवयव निकै ठूलठूला छन् । राजा महेन्द्रमल्लले बनाएको तलेजुको मन्दिरमा र ऋद्धिलक्ष्मीले बनाएको तलेजुको मन्दिरमा मात्र त्यस्ता ठूलठूला झ्यालढोका प्रयोग गरिएका छन् । मल्लकालका अरू भवनमा प्रायः त्यति ठूलठूला झ्यालढोका हालिएका हुँदैनन् ।

निशानघरसंगै दक्षिणपट्टि तीनमुखे ठूलो दलान छ । त्यस दलानभित्र सुनको जलप लगाएको धातुको सुन्दर देवमूर्ति विराजमान छ । बोलचालीमा त्यस मूर्तिलाई महाविष्णु भन्ने चलन छ तापनि प्रतिमालक्षणअनुसार त्यस मूर्तिलाई लक्ष्मीसहित वैकुण्ठ भन्नु उचित देखिन्छ[1] । सो मूर्ति प्रारम्भमा हनूमान्‌ढोकाको प्राङ्गणमा रहेको महाविष्णुको मन्दिरभित्र रहेको थियो । त्यस मूर्तिभित्र पाइएको जन्त्रमा कुँदिएको अभिलेखअनुसार राजा जगज्जयमल्ल (१७७६–१७६०) ले सो मूर्ति बनाई मन्दिरभित्र स्थापना गरेका थिए । पछि वि. सं. १६६० को महाभूकम्पमा सो मन्दिर भत्क्यो र सुनको मूर्ति त्यहाँ राखिराख्नु सुरक्षाको दृष्टिले उचित नसंझी दरवारभित्र ल्याई राखिएको थियो ।

यस मूर्तिको बीचमा वासुदेवको प्रतिनिधित्त्व गर्ने सौम्य पुरुषाकृति देखिन्छ । त्यसको दायाँ बायाँ वराह र सिंहको शिरद्वारा प्रद्युम्न र संकर्षणको प्रतिनिधित्त्व गरिएको छ । वासुदेवको शिरमाथि अरू दुइटा मस्तक देखापर्छन् तथा पद्मासनमा बसेका वैकुण्ठको काखमा लक्ष्मी बसेका छन् । वैकुण्ठ विष्णुका बाह्र हातमध्ये दायाँतिरका चार हातमा चक्र रुद्राक्ष गदा कमल वरदमुद्रा तथा व्याख्यानमुद्राले युक्त छन्, बायाँतिरका पाँच हातले भने पद्ममुकुल, पुस्तक, शंख, कलश, छत्र धारण गरेका छन् । छैठौं हातले चाहिं लक्ष्मीलाई आलिङ्गन गरेको छ ।

यस चोकको पूर्व दक्षिण कुनामा दलानको बायाँपट्टि काष्ठनिर्मित कलापूर्ण विशाल द्वार बनेको छ । पश्चिमाभिमुख यस द्वारबाट भित्र गएपछि वसन्तपुर चोकमा पुगिन्छ ।

माथि वर्णित देवमूर्ति रहेको दलानको ठीक माथि तीनमुखे सँझ्याल छ । सँझ्यालमाथि तीनमुखे गाझ्याल जडिएको छ । यसरी योजनाबद्ध तरीकाले एकमाथि अर्को पर्ने गरी खुला दलान, सँझ्याल तथा गाझ्याल यी तीन अवयवको संयोगद्वारा नेपाली वास्तुकलाको सुन्दर उदाहरण यहाँ प्रस्तुत गरिएको छ । यी झ्यालका किनारामा हालिएका सानसाना काठका झल्लर, ठाउँ-ठाउँमा कुँदिएका सिंह, सर्प आदिको आकृति, झ्यालको तोरणको रूपमा रहेका पुष्पवल्लरी तथा गरुडनारायण आदि देवदेवीका प्रतिमा दर्शनीय छन् । यी झ्यालका दायाँ बायाँ रहेका ठूलठूला आँखिझ्याल र गोलाकार सुन्दर आँखिझ्यालले यसलाई अझ बढी आकर्षक बनाएको छ ।

संझ्याल र गाझ्याललाई छोप्ने गरी तेस्रो तलाको छाना बनाइएको छ । चारौं तलामा पनि

१. डा. प्रतापादित्य पाल, "वैष्णव आइकोनोलजी इन् नेपाल" (कलकत्ता, द एशियाटिक सोसाइटी ई. सं. १६७०) १०६–११० पृ.

विभिन्न किसिमका झ्याल बनेका छन् । पांचौं तलामा कौसी छ । सोही कौसीको छेउमा बङ्गला-नामक बुर्जा उठाइएको छ । नेपालमा अन्त कतै नपाइने अनौठो किसिमको रचनाशैली यस बुर्जामा देखापर्छ । कछुवाको पृष्ठभाग जस्तो देखिने गोलाकार तामाको छाना यसमा हालिएको छ ।

यस चोकको पूर्व दक्षिण कुनामा नौतले दरवार र वसन्तपुरचोकका भवन जोडिएका छन् । नासलचोकबाट नौतले दरवारभित्र जाने उत्तराभिमुखद्वारा टाढैबाट देखापर्छ । त्यस द्वारमाथि गणेशको प्रतिमासहित श्री ५ पृथ्वीनारायण शाहको वि. सं. १८२६ को शिलालेख रहेको छ । त्यस अभिलेखमा श्री ५ पृथ्वीनारायण शाहले आफ्नो वंशावलीको गौरवपूर्ण वर्णन र वसन्तपुर दरवार बनाएको कुरा लेखाएका छन् । शिलालेखको पछिल्लो भागमा नेपालउपत्यका जितेको तथा मीरकासिम र अंग्रेजको सैन्यलाई परास्त पारेको वर्णन पनि सगर्व कुँदाएका छन्[1] ।

यस द्वारको ठीक माथि एउटा ठूलो आँखिझ्याल छ । त्यसको दायाँ बायाँ त्यसभन्दा केही साना दुइ आँखिझ्याल छन् । यी आँखिझ्यालमा दायाँ बायाँ अङ्कित गरिएका देवदेवीका काष्ठमूर्ति दर्शनीय छन् । परन्तु दायाँपट्टिको आँखिझ्यालको केही भाग वसन्तपुरचोक र नासलचोकको मध्य भागमा बनेको भवनले छोपिएका छन् । यसै गरी तेस्रो तलाका केही टुँडाल र चौथो तलाका केही झ्याल पनि सो भवनले ढाकिएका छन् । यसैले नौतले दरवार र ती भवन एकै चोटि बनेका होइनन् नौतले दरवार बनिसकेपछि मात्र ती भवन बनेका हुन् भन्ने देखिन आएको छ ।

मल्लकालमा बनेका मन्दिरहरूमा जस्तै नौतले दरवारको तेस्रो तलामा प्रयोग गरिएका टुँडालहरूमा देवदेवीको आकृति कुँदिएका छन् तथा चार कुनामा कुँसल हालिएका छन् । टुँडालका मुनि विभिन्न आसनमा रतिलीला देखाइएका छन् । ती टुँडालले माथिल्लो तलामा बनेको बार्दली जस्तो गरी गारोबाट बाहिर निकालिएको विधिझ्याल भनी प्रसिद्ध सलामी परेका आँखिझ्याल-लाई अडचाएको छ । त्यसमाथि झिंगटीको छाना छ । वसन्तपुरचोकको दक्षिण पश्चिम कुनामा रहेको नेपाली मन्दिरको शैलीमा बनेको एउटा बुर्जाको रूपमा यो नौतले दरवार उठेको छ । यस भवनमा जम्मा चार छाना छन् तथा सबभन्दा माथिल्लो छानामा तीनवटा सुनका गजूर छन् । नासलचोकबाट देखिने भागको केही वर्णन यहाँ दिएका छौं तापनि यस भवनको सम्बन्धमा पछि हामी फेरि लेख्नेछौं ।

नौतले दरवारदेखि उता चून लिपिएका अर्द्धयूरोपिय शैलीमा बनेका गृहपङक्ति शुरू हुन्छ । त्यस गृहपंङक्तिको भुइँतलामा आठ, नौ हात जतिको फासलामा चारपाटे आँखिझ्याल छन् । ती आँखिझ्यालको ठीक माथि लहरै आयताकार ऐनाका झ्याल छन् । प्रत्येक झ्यालको बाहिरपट्टि हावाको सञ्चार हुन सक्ने गरी काठका चिरा मिलाएर बनाइएका पर्दाको काम गर्ने खापा हालिएका छन् । यस्ता खापा भएका झ्याल विक्रमको बीसौं शताब्दीतिर नेपालमा निकै

१. परिशिष्ट, ७४ संख्याको अभिलेख

लोकप्रिय भएको थियो । यस वेला बनेका राणाहरूको दरवारमा यस्ता झ्याल अद्यापि ठाउँठाउँमा देखापर्छन् । नासलचोकको दक्षिणी लङ र पश्चिमी लङको भवनमा प्रायः सबैतिर यस्तै झ्याल प्रयोग भएका छन् । योबाहेक बार्दली जस्तो गरी बाहिर निस्केका सोही छाँटका तीनमुखे झ्याल पनि यस चोकमा देखापर्छन् । तिनमा एउटा दक्षिणी लङमा र दुइटाचाहिं पश्चिमी लङमा रहेका छन् ।

माथि वर्णित भवन श्री ५ सुरेन्द्रवीरविक्रम शाहको पालामा निर्माण गरिएको थियो भन्ने अनुश्रुति छ । श्री ५ पृथ्वीवीरविक्रम शाहको शुभ जन्म यसै भवनमा भएको थियो । नासलचोकको पश्चिमी लङको तेस्रो तलामा रहेको एउटा कोठा श्री ५ पृथ्वीवीरविक्रम शाहको जन्म भएको कोठा भनी प्रसिद्ध छ ।

यस चोकको मध्यभागनिर प्रस्तरनिर्मित डबली छ । डबली बनाउने नेपालको प्राचीन परम्पराअनुसार यो बनेको छ । लिच्छविकालका अभिलेखमा पनि सार्वजनिक प्रदर्शनको लागि बनेको खुला डबली (प्रेक्षणमण्डपी) को उल्लेख पाइन्छ[1] । मल्ल राजदरवारका चोकमा रहेका अरू डबली जस्तै गरी बनाइएको नासलचोकको यस डबलीले सोही प्राचीन परम्परालाई संझाउँछ । यस डबलीमा अङ्कित अभिलेखअनुसार श्री ५ राजेन्द्रवीरविक्रमको पालामा हनूमान्ढोका दरवारको विभिन्न भागको निर्माण र पुनर्निर्माण कार्य भएको थियो । वि. सं. १८७९ फागुनमा हनूमान्ढोकाबाहिर पटाङ्गिनीमा प्रस्तर छापिएको थियो तथा वि. सं. १८८१ फागुनमा मूलचोक, मोहनचोक र सुन्दरचोकको जीर्णोद्धार गरिएको थियो । यसको ठीक एक वर्षपछि वि. सं. १८८२ को फागुनमा सीसमहल दरवारको निर्माण गरिएको थियो । यही सिलसिलामा नासलचोकमा चारैतिर पत्थर छापी यस चोकमा रहेको जीर्ण अवस्थामा पुगेको यो ऐतिहासिक डबली पनि संगै बनाइएको थियो[2] ।

इन्द्रजात्रामा यस डबलीमाथि इन्द्रको सुनको मूर्ति ल्याई प्रदर्शन गरिन्छ । हनूमान्ढोकाको देगुतलेजुको मन्दिरबाट सो मूर्ति ल्याइन्छ । हात पसारेर पलेटी मारेर बसेको सो इन्द्रको मूर्ति टूटफूट अवस्थामा छ तापनि मल्लकालिक नेपाली धातुकलाको परिचायक छ ।

उक्त डबलीको सम्बन्धमा एउटा चाखलाग्दो र महत्त्वपूर्ण कुरा के छ भने यसरी मल्लकालमा देवताहरूका राजा इन्द्रको आसनको रूपमा रहेको सो डबली शाहकालमा आएर शाह राजाहरूको राज्याभिषेकमण्डपको रूपमा परिवर्तन भयो । शाह राजाहरूको राज्याभिषेक हुँदा यस डबलीमाथि सुनको राजसिंहासन राखिन्छ । राज्याभिषेकसम्बन्धी अरू विधिविधान संपन्न

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" १४९ संख्या, ५६६ पृ., "....प्रेक्षणमण्डपी–पृष्ठतः पूर्व्वोत्तरं गत्वा. . . ."

२. परिशिष्ट, ८६ संख्याको अभिलेख

भएपछि सिन्दूरजात्राका लागि प्रस्थान गरिबक्सनुभन्दा पहिले त्यस राजसिंहासनमा राज भएर श्री ५ बाट विदेशी तथा स्वदेशी उच्च ओहदाका अधिकारी वर्ग र अरू प्रतिष्ठित व्यक्तिहरूलाई दर्शन बक्सिन्छ। यसैले यस डबलीको विशेष महत्त्व छ। नासलचोक मात्र होइन संपूर्ण हनूमान्-ढोका दरबारकै गौरव यसले बढाएको छ।

## पञ्चमुखी हनूमान्‌को मन्दिर

नासलचोकको पूर्वोत्तर कुनामा पञ्चमुखी हनूमान्‌को पांचछाने मन्दिर रहेको छ। आगमछेंको मन्दिर जस्तै यो मन्दिर पनि मोहनचोकका तीन बुर्जामध्ये एक बुर्जाको रूपमा बनेको देखिन्छ। यस मन्दिरको निर्माण राजा प्रतापमल्लले गर्न लगाएका थिए। यो कुरो वंशावलीको वर्णनबाट बुझिन्छ[1]। नेपालमा बनेका मन्दिरहरूमा यस मन्दिरको विशिष्ट स्थान छ। अरू साधारण नेपाली शैलीमा बनेका मन्दिर जस्तै यो मन्दिर चारपाटे नभएर वर्तुल आकारमा बनेको छ। यो यस मन्दिरको विशेषता हो। हाम्रो यहाँ नेपाली शैलीमा वर्तुल आकारका मन्दिर योसमेत गरी दुइटै मात्र देखापरेका छन्। तिनमा दोस्रो वर्तुलाकार मन्दिर पशुपतिको दक्षिणद्वारनिर रहेको छ। कोटिलिङ्गेश्वर महादेवको देवल भन्ने नामले सो मन्दिर प्रसिद्ध छ। त्यस मन्दिरको निर्माण राजा प्रतापमल्लले नै गराएका थिए। त्यस मन्दिरको निर्माणसंग सम्बद्ध पशुपतिमा रहेको वि. सं. १७१२ को अभिलेखमा राजा प्रतापमल्लले त्यस मन्दिरलाई छत्राकार मन्दिर भन्ने संज्ञा दिएका छन्[2]। दुइ तीन तह भएको प्राचीन ढङ्गको छाता जस्तो देखिने हुनाले उनले यस मन्दिरलाई छत्राकार मन्दिर भनेका हुन्। पुरानो नेवारीमा त्यस प्रकारको छातालाई स्वत छत्र (तीन तह भएको छाता) भन्ने चलन छ। यस्तो छाताको वर्णन उत्तर भारतका सम्राट् हर्षको पालामा भारतमा आएका चिनियाँ यात्री ह्वानच्वाङ्गले पनि आफ्नो भ्रमणवृत्तान्तमा गरेका छन्। हाम्रो यहाँ आजभोलि पनि कहिलेकहीं देवदेवीको खटयात्रा आदिमा त्यस्तो छाताको प्रयोग भएको पाइन्छ।

पञ्चमुखी हनूमान्‌को यस मन्दिरको सबभन्दा माथिको छाना धातुको छ, अरू सबै छाना झिंगटीका छन्। पहिलो तहको छानाभन्दा दोस्रो तेस्रो तहको छाना क्रमशः सानो आकारको हुँदै गएको छ। यो मन्दिर वर्तुलाकार हुनाले कतै कोण उत्पन्न भएको छैन तापनि छानाको चार कुनामा हालिने कुँपाको आकृति छानाको किनारामा ठाउँ ठाउँमा राखिएका छन्,जसले गर्दा मन्दिरको शोभा अझ बढेको छ। चाक्लो छाना अडयाउन आवश्यकतानुसार यसमा बढी टुँडालको प्रयोग भएका देखिन्छन्।

---

१. लंसाल, "भाषावंशावली" २ भाग ८३ पृ.

२. गौतमवज्र वज्राचार्य, महेशराज पन्त, "अभिलेख–संग्रह" ३ भाग १० पृ.; "श्री ३ पशुपतिया अग्रस महाराज श्रीश्रीकवीन्द्रजयप्रतापमल्लदेवन छत्राकार देवल दयकाव ताम्रन दयकाव कोटिलिंग, रोहोया लिंग दोलच्छि दयकाव स्थापना याङा ॥ सम्वत् ७७५."

यस मन्दिरभित्र स्थापना गरिएका पञ्चमुखी हनूमान्‌को दैनिक पूजाआजा गुप्त रीतिले हुन्छ। पूजारीबाहेक अरू कोही यस मन्दिरभित्र पसी देवताको दर्शन गर्न पाउँदैनन्। यसैले यस मन्दिरमा रहेका पञ्चमुखी हनूमान्‌को स्वरूपको सम्बन्धमा केही भन्न सकिंदैन। परन्तु पञ्चमुखी हनूमान्‌को प्रतिमा बनाउने बारे नेवारी भाषामा लेखिएको एउटा हस्तलिखित टिपोटे कागतले त्यस अभावको केही मात्रामा पूर्ति गरेको छ। काठमाडौं मखनमा बस्ने मोहिनीविनोद शर्माको संग्रहमा रहेको उक्त टिपोटे कागतमा लेखिएको वर्णनअनुसार गधा, गरुड, नर्सिह, बांदर तथा वराह यी पांच भिन्न भिन्न जन्तुहरूको मस्तक मिलेर पञ्चमुखी हनूमान्‌को शिरोभाग बनेको हुन्छ तथा उनले हातमा सुमेरु पर्वत मुशल, अङ्कुश आदि आयुध लिएका हुन्छन्[1]। यताबाट पञ्चमुखी हनूमान्‌को यस मन्दिरभित्र पनि त्यस्तै किसिमको मूर्ति रहेको हुनुपर्छ भन्ने विचार हुन्छ। यस देवताका पूजारी कर्माचार्य हुन्। यस कारण यी देवता कर्माचार्यहरूको तान्त्रिकसंप्रदायसंग सम्बद्ध देखिन्छन्।

## मोहनचोक

नासलचोकको उत्तरपट्टि मोहनचोक रहेको छ। त्यस चोकको उत्तरी लङ्मा दलानमा टाँसिएको सुवर्णपत्रको अभिलेखअनुसार राजा प्रतापमल्लले वि. सं. १७०५ फागुनमा यस चोकको

---

१. उक्त टिपोट कागतमा यो कुरा यसरी लेखिएको छ–

| | | | |
|---|---|---|---|
| | "पंचमुखि हनुमान | | |
| | गदाहा | | |
| | तुयु | | |
| गरुड | नृसिह | माक | वराह |
| ह्याउ | तुयु | ह्याउ | वचु |
| | | कण्ठी | |
| जव | | | खव |
| खड्ग | | मुण्डमाला | सुमेरु पर्वत |
| त्रिशूल | | कवच | तमागुसिमा |
| खट्वांग | | | लैं |
| | | प्रत्यालीढ तुति | |
| पाश | | ह्याउ कछारं चिना | मुशल |
| अङ्कुश | | चोह्म, वेताल आसन | मुष्टि |

अति पुष्ट शरीर ह्याउ उज्वल रंग पंचवक्त्रसं धंवा दुह्म ॥ पंचवक्त्रसं स्वंग स्वंग मिखा वाकु छिना चोंह्म। हनुमानया म्हुतुं मिलह्वया चोंह्म। वराहया धंवानं भूगोल ल्ह्वना चोंह्म सुमेरु-पर्वत देवा वोहले पाछाया चोह्म लाहा तुतिया लुसि च्वामुसे चोह्म वेताल ह्यासु रंग"

निर्माण गराएका थिए। त्यस अभिलेखमा यस चोकलाई मनमोहनचोक भन्ने संज्ञा दिइएको छ[1]। तर ठ्यासफु जस्ता तात्कालिक लेखहरूमा यस चोकलाई मोहनचोक नै भनिएको पाइन्छ।

मल्लकालमा राजा र राजपरिवारको मूलवासस्थान मोहनचोकमा थियो। देशदेशान्तरका राजाहरूसंग मित्रसम्बन्ध जोड्दा तथा सल्लाहसाहुति गर्नुपर्दा मोहनचोक प्रयोगमा ल्याइन्थ्यो। वि. सं. १७३५ आश्विनमा गोरखाका राजा पृथ्वीपति शाह काठमाडौंमा आउँदाखेरि राजा नृपेन्द्रमल्लले मोहनचोकमा बसेर मीत लाएका थिए[2]। यसै गरी वि. सं. १७४२ पौषमा पार्थिवेन्द्रमल्लले भक्तपुरका जितामित्र र गोरखाका राजा पृथ्वीपति शाहसंग मोहनचोकमा बसी भेट गरेका थिए[3]।

राजपरिवारको व्यक्तिलाई बन्धनमा राख्नुपर्दा मोहनचोकमा बाँधेर राखेको घटना पनि इतिहासमा पाइन्छन्। प्रतापमल्लका कान्छा छोरा महीपतेन्द्रलाई र उनका बैठके आदिलाई समेत डोरीले बाँधेर यस चोकमा राखेको वर्णन ठ्यासफुमा गरिएको छ[4]।

मल्लकालमा बाहिरका मित्र राजाहरू आफ्नो राजधानीमा आउँदा रानीपोखरीको तीरसम्म गई लिन जाने तथा त्यहाँबाट स्वागत गरेर ल्याई मोहनचोकमा राख्ने चलन काठमाडौंमा चलेको थियो। त्यस वेला रानीपोखरी काठमाडौं शहरको किल्लाबाट ठीक बाहिर पर्दथ्यो। त्यस कारण शहरबाहिरसम्म गएर किल्लाको ढोकाबाट मित्र राजालाई सत्कार गरेर ल्याई असन, इन्द्रचोकको बाटो गरी आफ्नो वासस्थान मोहनचोकमा भित्र्याई मित्र राजाको सत्कार गरिन्थ्यो। विजयपुरका राजा विधाता इन्द्रसेन मकवानपुरमा लड्न जानाको लागि नेपालखाल्डाका राजाका मद्दत लिन वि. सं. १७४८ आश्विनमा काठमाडौंमा आएका थिए। त्यस वेलाको चलनअनुसार शहरबाहिर रानीपोखरीसम्म आफैं गई भूपालेन्द्रमल्लले उनको स्वागत गरेका थिए। हनूमान्ढोका दरबारको मोहनचोकमा विधाता इन्द्रसेन र नेपालउपत्यकाका तीनै राज्यका राजाहरू

---

१. परिशिष्ट, १७ संख्याको अभिलेख

२. वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा" ६१ पृ. "सम्वत् ७९८ आश्विन शुक्ल। दशमी आदित्यवार. . . .थ्व कुन्हु चारण याय धुनकाओ मोहनचुकस श्रीश्रीजयनृपेन्द्रमल्ल महाराजाओ गोरखाया प्रिथिपति साहिओ मित्र संवन्ध याङ त्वाच चिनका यँरया खप्पया प्रमाणपनि दयकाओ त्वाच चिनका जुरो।" (ठ्यासफु)

३. सोही, "सं. ८०६ पौषकृष्ण सप्तमी बुधवार थ्व कुन्हु श्रीश्रीपार्थिवेन्द्रमल्ल खप्वया श्रीश्रीजयजितामित्रमल्ल नेह्म फुकिजं गोरखाया राजा पृथिपति साहि मोहनचुकस भेत जुव एल याकात" (ठ्यासफु)

४. सोही, ३२ पृ.; "सं. ८०५ श्रावण शुक्लपक्षः ।। एकादशी मूलनक्षत्र शुक्रवार थ्व कुन्हुया रात्रीश श्रीश्रीमेरंह्म जुजु क्वातकु, पापनि कोथामुचा सकरसं खखिनं चिक ।। थथे यायन ह्ला मोहोनचुकस स्वविमुक दाव मुरचुकस विशिङाव चोङ।" (ठ्यासफु')

जम्मा भई सन्धि गरेका थिए[1] ।

राजा र राजाका आप्त पुरुषहरूबाहेक अरू कसैलाई यस चोकभित्र बस्ने अधिकार थिएन। राजपरिवारकै व्यक्तिहरू पनि गद्दीनशीन राजालाई चित्त नबुझेको खण्डमा मोहनचोकमा बसउठ गर्न पाउँदैनथे। काठमाडौंको इतिहासमा यस्तो घटनाको उल्लेख आएको छ। मुमा महारानी ऋद्धिलक्ष्मी र गद्दीनशीन राजा भूपालेन्द्रमल्ल पहिले मोहनचोकमा संगसंगै बस्दथे। तर पछि राजा र मुमा महारानीको कुरा मिलेन र राजाले आफ्नो मुमालाई मोहनचोकबाट निकाली दरबारभित्र भतुलिचोक भन्ने ठाउँमा राख्न लगाएका थिए। केही समयपछि मुमा महारानीलाई राजाले काठमाडौं शहरबाटै निकाली तौथली नामक गाउँमा पठाइदिएका थिए[2] ।

यसरी मल्लकालमा हनूमान्ढोका दरवारमा मूल राजकीय वासस्थानको रूपमा मोहनचोकको विशिष्ट स्थान थियो। यसैले यस चोकमा जन्मेको राजकुमार मात्र गद्दीको हकदार हुन्छ भन्ने धारणा बस्न गएको थियो। जयप्रकाशको जन्म हनूमान्ढोकाभन्दा बाहिर भएको हुनाले उनी राजा बनाइँदा केही भारादारहरूले मोहनचोकमा नजन्मेको व्यक्ति राजा हुन पाउँदैन भनी हल्ला मच्चाएका थिए[3] ।

मोहनचोकको रचना चौक्वाथको रचनाशैलीसंग मिल्दोजुल्दो देखिएको छ। चौक्वाथ बनाउँदा चोकको चारकुनामा चारवटा बुर्जा जस्ता भवन बनाउने चलन थियो। यो कुरो पाटन दरवारको चौक्वाठको निर्माणशैलीबाट बुझिन्छ[4] । मोहनचोकमा पनि चोकको कुनाकुनामा बुर्जा जस्ता भवन बनेका छन्। पूर्वो दक्षिणी कुनामा पञ्चमुखी हनूमान्को मन्दिर तथा दक्षिणपश्चिम

१. रामजी तेवारी, "भूपालेन्द्र मल्ल" पूर्णिमा (वि. सं. २०२१ कार्तिक) १ वर्ष, ३ अंक ४० पृ.; "सं. ८११ आश्विन। पञ्चमी अनुराध नक्षत्र बुधवार थ्व कुन्हु पूर्वया पातसाहजु यंस दुहा वव. न्हुरपुखुरतो श्री २ भूपारेन्द्र मल्ल जुजुनं र स्वर बिज्याक. मा किसि छह्म देश बिव। सं. ८११ आश्विनकृष्ण :। सप्तमी पुनर्वसु नक्षत्र आदित्यवार थ्व कुन्हु स्वनगरं वंध जुव मोरङ्या पासाजु सुद्धांन खप्वया स्वह्म एलयां मोहोनचुकस खुह्म नाप रात." (ठ्यासफु)

२. सोही, ४४ पृ.; "सं. ८१७ आश्विनशुक्ल त्रयोदशी शतभिष नक्षत्र शनैश्चरबार थ्व कुन्हु माजु जुजु निह्मं मचा ल्वाङाव चाह्नस गुह्येश्वरीस तमचास्य जुजु बिज्याक. सति कुन्हु प्रजा सकल्य वङाम्रो जुजु लिबोङाम्रो हव. पूर्ण्णमी कुन्हु कतिनीयात सेंगुस जुजु बिज्याक. सति कुन्हु पादुया चास तुलशी स्याङम्रो भदारखारस जुजु अनन सक्वस विज्यात. चिह्निसं स्वचा पेन्हु अनन बिज्याङाम्रो निचा स्वन्हु गोरोस विज्याङाव. माजु कुह्मर भतुलिचुकस तल. मोहोनचूकन पिकायाम्रो अष्टमी सोमवार कुन्हु देश दुहा बिज्याङाम्रो माजु तोखास थतिङाम्रो तयछोर ॥ अननं तवथलि थतिङाम्रो तर. " (ठ्यासफु)

३. लंसाल, "भाषावंशावली" २ भाग १०५, १०७ पृ.

४. वज्राचार्य, "चौकोटदरवार" पूर्णिमा १ वर्ष ३ अङ्क ४६–५१ पृ.

कुनामा आगमछेंको मन्दिर बुर्जा जस्तै उठाइएका छन्। पश्चिमोत्तर कुनामा पनि बुर्जा जस्तो भवन बनेको छ । त्यस भवनमाथि गजूरको प्रयोग गरिएको छ तापनि त्यस भवनभित्र कुनै देवता स्थापना गरिएको छैन। त्यस कारण सो भवन मन्दिर नभएर एक बुर्जा मात्र हो। पूर्वोत्तर कुनामा चाहिं अहिले कुनै पनि बुर्जा जस्तो भवनको अस्तित्व छैन।

लक्ष्मीनरसिंहको पालाको एउटा घटनामा हनूमान्ढोकाभित्र पर्ने मोहनचौक्वाथ (चवुक्वाथ) नामक स्थानको उल्लेख आएको छ । सो स्थान मोहनचोक जस्तै राजा र राजपरिवारको वासस्थानको रूपमा थियो[1] । मोहनचोकको निर्माणशैली र नामसादृश्यको आधारमा राजा लक्ष्मीनरसिंहको पालामा मोहनचौक्वाथ भनी प्रसिद्ध ठाउँलाई नै पुर्ननिर्माण गरी राजा प्रतापमल्लले मनमोहनचोकको रूपमा परिर्वातत गरेको देखिन्छ ।

शाहकालमा श्री ५ राजेन्द्रविक्रम शाहको शासनकालमा वि. सं. १८८६ सालतिर शुरू गरिएको हनूमान्ढोकाको जीर्णोद्धारको सिलसिलामा मोहनचोकको पनि जोर्णोद्धार गरिएको थियो[2] । यसै वेला मोहनचोकका धेरैजसा भागको प्राचीन रूपको नवीकरण भएको अनुमान हुन्छ ।

हाल मोहनचोकको चारै लङमा जम्मा तीन तला छन् । पश्चिमी लङको भुइँतलामा बाहेक तीनै लङमा खुला दलान बनेका छन् । दलानका भित्तामा ठाउँठाउँमा बालक कृष्णको जीवनचरित्रसंग सम्बन्ध राख्ने काठका मूर्तिहरू संलग्न छन्। बालक कृष्ण गोकुलमा छँदा कंसले उनलाई मार्न भनी पठाएका वकासुर आदि अनेकन् दैत्यहरूको संहार गरेको दृश्य काठका ती मूर्तिहरूले प्रस्तुत गरेका छन् ।

पश्चिम लङको भुइँतलामा अष्टमातृकाका सुन्दर मूर्ति स्थापना गरिएका छन्। मोहनकाली भन्ने नामले ती मूर्ति प्रसिद्ध छन्। देवी कालीले राजा प्रतापमल्ललाई सपनामा 'मेरो मूर्ति स्थापना गर' भन्ने आज्ञा भएको हुनाले राजाले यो मूर्ति बनाउन लाएका हुन् भन्ने अनुश्रुति छ[3] । कलाको दृष्टिले अष्टमातृकाका यी मूर्ति निकै सुन्दर छन् । मल्लकालमा बनेका यसको जोडा लाग्ने अष्टमातृकाका मूर्ति अरू देखिएका छैनन् ।

अष्टमातृकाको पछाडि भित्तामा रङ्गीन चित्रहरू लेखिएका छन् । आजभन्दा तीन शय वर्षअघि लेखिएका यी भित्तिचित्रका कति भाग अद्यापि दुरुस्त छन्। केही चित्रमा रङ्गको

---

१. काठमाडौंमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफुमा यस्तो लेखिएको छ– "सम्वत् ७४४ ज्येष्ठ कृष्ण तृतीया कुन्हु थकुनिजु अभाग जुव दिन जुरो. परङस थंङ, थनं ह्नथुचास मोहनचवुक्वाथस देङन चोङ पाराव घार जुव."

२. परिशिष्ट, ८६ संख्याको अभिलेख

३. लंसाल, "भाषावंशावली" २ भाग ८२–८३ पृ.

चह्किलोपन अङ्ग गएको छैन। कालिकापुराणमा वर्णित रम्भासुर दैत्यको कथा सो भित्तिचित्रमा लेखिएको छ।

उत्तरी लङको दलान मल्लकालमा विशेष महत्त्वको थियो। राजा अथवा राजपरिवारका व्यक्तिको अवसानकाल आइपुगेको थाहा भएमा यस दलानमा ल्याई तल सार्ने काम गरिन्थ्यो। यसैले यस दलानको दलिनमा जलशयननारायण र अरू अनेक देवदेवताको मूर्ति अङ्कित सुनको चँदुवा टाँगिएको छ। मृत्युशय्यामा रहेको व्यक्तिलाई नारायणको दर्शन पाई मुक्ति मिलोस् भन्ने भावनाले सो चँदुवा त्यहाँ राखिएको बुझिन्छ। यही दलानको भित्तामा राजा प्रतापमल्लको विशाल शिलापत्र टाँसिएको छ। त्यस शिलापत्रमा मोहनचोक र सुन्दरचोकमा रहेका विभिन्न देवदेवताहरूको पूजाआजा चलाउन गुठीको बन्दोवस्त गरिदिएको कुरो लेखिएको छ[1]। सो शिलापत्रको माथि लहरै केही सुन्दर प्रस्तरमूर्ति भित्तामा संलग्न छन्। तिनमा माथिल्लो तहमा रहेका मूर्तिहरू विष्णुका दशावतार र कृष्णलीलासंग सम्बद्ध छन्। तर तल्लो तहमा रहेका मूर्तिहरू भने कुनै धार्मिक भावनासंग सम्बद्ध छैनन्। ऐहलौकिक विषयलाई लिई ती प्रस्तरमूर्ति बनाइएका छन्। धर्ममा आधारित नभएका यस्ता मूर्ति हाम्रो यहाँ दुर्लभ हुनाले नेपालको मूर्तिकलाको इतिहासमा ती मूर्तिहरूको विशिष्ट स्थान छ। ती प्रस्तर मूर्तिले प्रस्तुत गरेको पहिलो दृश्यमा पश्चिमा वेषभूषामा रहेकी एक युवती आफ्नी परिचारिकासहित बगैंचामा बसिरहेको देखाइएको छ। उनको काखमा एउटा सानो कुकुर छ। नजीकै एउटा बांदर बसिरहेको छ। केही पर बगैंचाको रूखमा बसेर एउटा बालक खेलिरहेको देखापर्छ। ती प्रस्तरमूर्तिले प्रस्तुत गरेका विभिन्न दृश्यमा उनी कतै हातमा वीणा लिएर बसेकी छिन्, कतै धूम्रपान गरिरहेकी छिन्,कतै तराजु लिएर फलफूल जोखिरहेकी छिन्। एउटा अर्को दृश्यमा ती युवतीले छः सात वर्षको एउटा बालक अँगालिरहेको देखिन्छ। बालकचाहिं हातमा दूरबीन लिएर हेरिरहेका छन्। ठाउँठाउँमा मल्लकालिक राजकीय वेषभूषामा एक पुरुष ती युवतीसंग बसिरहेको देखाइएको छ। कुन कुरालाई लक्ष्य गरी यी प्रस्तरमूर्ति बनेका हुन् भन्ने कुरा बुझ्न सकिएको छैन तापनि राजकीय वेषभूषामा रहेका ती व्यक्तिको आकृति राजा प्रतापमल्लको सालिकसंग मेल खाने हुनाले स्वयं प्रतापमल्लकै जीवनकथासंग सम्बद्ध कुरो त्यहाँ प्रस्तुत गरिएको अनुमान हुन्छ।

एउटा अर्को चाखलाग्दो कुरो के छ भने यी मूर्तिको निर्माणशैली मल्लकालमा प्रचलित शैलीभन्दा केही भिन्न छ। पाश्चात्य शैलीको अनौठो सम्मिश्रण यी मूर्तिमा देखिन्छन्। त्यहाँ अनेक दृश्यमा दायाँ बायाँ काँधमा पखेटा भएको हृष्टपुष्ट बालकको उपस्थिति देखाइएको छ। देव-देवीहरूको कथासंग सम्बद्ध पाश्चात्य कलामा मात्र यस्तो पखेटावाल बालक चित्रण गरिएको पाइन्छ। यो चलन हाम्रो यहाँ छैन।

अन्तिम दृश्यभन्दा अघिको एक दृश्यमा पाश्चात्य वेषभूषामा सुसज्जित एक पुरुषको

---

१. परिशिष्ट, २० संख्याको अभिलेख

आकृति पनि त्यहां देखिन्छ । ती पुरुष हातमा प्याला लिएर उभिरहेका छन् । उनको अगाडि एउटी परिचारिका सुराही जस्तो रक्सीको भाँडो लिएर खडा छन् । यी दृश्यहरूबाट राजा प्रतापमल्लको दरवारमा पश्चिमाहरूको आगमनको संकेत मिल्छ ।

राजा प्रतापमल्लको समयमा ग्रुवर र दोर्भिल नामक दुइ जना जेजुइट पादरी चीनबाट भोटको बाटो रोस फर्कंदा काठमाडौंमा पसेका थिए । तिनीहरूले उनलाई एउटा दूरबीन दिएका थिए । त्यस दुरबीनको उपयोगिता बुझी प्रतापमल्ल उनीहरूदेखि साह्रै प्रसन्न भएका थिए[1] । योबाहेक राजा प्रतापमल्लको अरू कुनै पाश्चात्यहरूसंगको सम्बन्धबारे विशेष चर्चा इतिहासमा पाइँदैन । परन्तु उपयुक्त मूर्तिमा अङ्कित पाश्चात्य वेषधारी व्यक्ति पादरी होइनन् भन्ने कुरा त्यहाँ प्रस्तुत गरिएको विलासी जीवनको झलकबाट व्यक्त हुन्छ । यताबाट ती दुइ पादरीबाहेक अरू पाश्चात्यहरूसंग पनि राजा प्रतापमल्लको सम्बन्ध रहेको थियो भन्ने बुझिन्छ । नयाँ र अनौठो कुरो गर्न मनपराउने राजा प्रतापमल्ल पाश्चात्य जीवनमा अभिरुचि लिने पहिलो व्यक्तिको रूपमा देखापरेको छ । यसरी उपर्युक्त मूर्ति कलाको दृष्टिले मात्र होइन इतिहासको दृष्टिले पनि महत्त्वपूर्ण देखिएको छ ।

उत्तरी लङ्को दोस्रो तलामा कलापूर्ण तीनमुखे संझ्याल रहेको छ । पूर्वी लङ्मा पनि तीनमुखे अनौठो ठूलो झ्याल छ । त्यस झ्यालको विन्यास र निर्माणशैलीप्रति ध्यान दिएर हेरेको खण्डमा सो झ्याल पनि प्रारम्भमा कलापूर्ण संझ्याल थियो, पछि मात्र त्यसलाई मरम्मत गरी यस्तो बनाइएको हो भन्ने स्पष्ट देखिन्छ । यी झ्यालनगीचै हातमा दण्डा लिएका द्वारपालहरूका काष्ठ-निर्मित आकृति दर्शनीय छन् ।

पूर्वी र दक्षिणी लङ्मा दलानमाथि कार्नेसमा लहरै कृष्णचरित्र र रामचरित्रसंग सम्बन्ध राख्ने सिलेसिलेवार दृश्य अङ्कित गरिएको छ । दश बाह्र अँगुल चौडा काठको फल्याकमा कुँदिएका ती दृश्य सानसाना छन् तापनि निकै भावपूर्ण छन्[2] ।

मोहनचोकको एक महत्त्वपूर्ण विशेषता यस चोकमा रहेको सुनधारा हो । राजा प्रतापमल्लले वि. सं. १७०८ माघमा आफू र आफ्नो परिवारको परलोक सप्रोस् भन्ने कामनाले यस धाराको निर्माण गराएका थिए । यो कुरा यस सुनधारामा कुँदिएको उनको अभिलेखबाट बुझिन्छ[3] ।

धारा बनाउनु एक परिश्रमसाध्य कुरो थियो । दैनिक उपभोगमा ल्याउन उचित पानीको विचार गरी शहरबाट कोशौं टाढा पानीको मूल स्रोतदेखि ढल बनाउँदै ल्याई निर्दिष्ट ठाउँसम्म

१. रेग्मी, "मेडियाभल् नेपाल" २ भाग ७४ पृ.

२. आजभोलि ती काठमा अङ्कित मूर्ति कृष्णचरित्र र रामचरित्रको कथासंग मिल्ने गरी क्रमपूर्वक राखिएका छैनन् । जीर्णोद्धार गर्दा अज्ञानवश तलमाथि पर्न गएको देखिन्छ ।

३. परिशिष्ट, १९ संख्याको अभिलेख

पुऱ्याइन्थ्यो। धाराबाट पानी निस्कनुभन्दा अगाडि ठेग्र्याएर पानी निर्मल पार्ने काम गरिन्थ्यो। यसको लागि अनुभव र ज्ञान मात्र होइन कि सीप र जाँगरको पनि उत्तिकै आवश्यकता थियो। भक्तपुरका राजा जितामित्रमल्लले आफ्नो दरवारमा सुनधारा बनाउँदा भक्तपुर शहरदेखि दुइ कोश जति टाढा पर्ने महादेवपोखरीदेखि कुलो खनेर ल्याई पाका (पोलेका) डूँड र इँटले पानी आउने नल बनाई दरवारमा पानी ल्याएका थिए। सो कुलो राजकुलो भन्ने नामले अद्यापि प्रसिद्ध छ। भक्तपुर दरवारनजीकैको राजा जितामित्रमल्लको अभिलेखमा त्यस राजकुलोको रक्षाको लागि बन्दोवस्त गरेको कुरो परेको छ। त्यस अभिलेखअनुसार राजकुलोको सुरक्षाको लागि ठाउँठाउँमा ढलपा (कुलाका अधिकारी) नियुक्त थिए। धान रोप्ने वेला प्रजाहरू त्यस राजकुलोको पानी रातभरको लागि खेतमा लैजान पाउँथे। तर राजकुलोको मरम्मतको लागि प्रजाहरूले सित्तैंमा काम गरिदिनु आवश्यक थियो[1]। राजा प्रतापमल्लले बनाएको यस सुनधाराको सुरक्षाको लागि बन्दोवस्त गरी लेखिदिएको कुनै अभिलेख प्राप्त भएको छैन तापनि जितामित्रको अभिलेखले त्यस अभावको पूर्ति केही मात्रामा गरेको छ।

मोहनचोकको यो सुनधारा चोकको सतहभन्दा करीब आठ हात जति गहिरो खाडलमा बनाइएको छ। गहिराइमा पानी ल्याउन सजिलो हुने हुनाले प्रायः यस्ता धारा होचो ठाउँमा बनाइएको हुन्छ। यसैले यी धाराको नाम गैह्रीधारा वा गाहिटी रहन गएको छ। भुइँकै सतहमा बनेका गैह्रीधारा दुर्लभ छन्। पाटन दरवारभन्दा केही पर पूर्वदक्षिण कुनामा रहेको प्रसिद्ध सुनधारा मात्र भुइँको सतहमा निर्माण गरिएको छ। सोबाहेक जमीनमाथि बनाइएको अर्को कुनै यस्ता धारा देखिएको छैन।

धाराको टुटो प्रायः मुख बाइरहेको गोहीको मुखाकृतिसंग मिल्ने गरी बनाइएको हुन्छ। परन्तु मोहनचोकको यो सुनधाराचाहिं भिन्नै तरीकाले निर्माण गरिएको छ। विभिन्न स्थलचर र जनावरहरू तँछाड मछाड गरी कुनै साँघुरो ठाउँबाट अटाइनअटाइकन निस्कन लागेको दृश्य यस सुनधाराको टुटोमा कलापूर्ण तरिकाले देखाइएको छ। सबभन्दा माथि छेपारो जस्तो जन्तु उभि-रहेको छ, त्यसको पुच्छरमुनि भ्यागुतो बसिरहेको छ। त्यसको तल हात्ती, कछुवा, बाघ, माछा, मृग आदि विभिन्न जनावरहरूका शिरोभाग देखापर्छन्। सबभन्दा अगाडि धाराको टुप्पामा गोहीको मुखबाट गाईका बाछा फुत्केर बाहिर निस्किरहेका छन्। यतिकसा दृश्य धाराको दुइ हाते टुटोमा भावपूर्ण तरीकाले देखाउनु कलाकारको प्रशंसनीय सफलता हो।

धाराको टुटोमुनि आफना घुँडालाई दुइ हातले अँगालेर टुप्लुक्क बसिरहेको एउटा सानो पुरुषाकृति छ। पौराणिक कथामा प्रसिद्ध राजा भगीरथको मूर्ति सो हो। राजा भगीरथले ठूलो परिश्रमपूर्वक स्वर्गबाट गङ्गानदी पृथ्वीमा ल्याए भन्ने पौराणिक कथा छ। त्यसैको संझनामा

१. भोलानाथ पौडेल, "भक्तपुरको राजकुलो" पूर्णिमा (वि. सं. २०२१ माघ) १ वर्ष ४ अंक ४४–४६ पृ.

धारामुनि भगीरथको मूर्ति राख्ने चलन चलेको छ। घुंघरेको कपाल काँधसम्म आएको बाटुलो अनुहार भएको भगीरथको सौम्य आकृति साह्रै आकर्षक छ।

धाराको टुटोमाथि तीन हात जति अग्लो शिखरशैलीको ढुङ्गे मन्दिर छ। त्यस मन्दिरको मुनि सुवर्णपत्रले मोडेको पेटीको किनारामा राजा प्रतापमल्लको वि. सं. १७०८ माघको यस सुनधाराको निर्माणसम्बन्धी अभिलेख अङ्कित गरिएको छ।

धाराको चारैतिर विभिन्न देवदेवताका मूर्ति विराजमान छन्। राजा प्रतापमल्लको यस चोकको दलानमा रहेको अभिलेखअनुसार ३६ वटाभन्दा बढी देवदेवीका मूर्ति यहाँ स्थापना गरिएका थिए। परन्तु अहिले यहाँ त्यति देवताका मूर्ति छैनन् तापनि धारावरिपरि शैव र वैष्णव देवताहरू अझै पनि निकै छन्। बिहान सबेरै उठी पवित्र पानीले नुहाइधुवाइ गर्ने काम धार्मिक भावनासँग सम्बद्ध हुनाले धाराको वरिपरि देवदेवता स्थापना गर्नु उचित मानिन्छ। धार्मिक व्यक्तिहरू नुहाइ धुवाइपछि ती देवदेवीहरूलाई पानी चढाउँछन् तथा पूजा गर्दछन्।

यस धाराको दायाँपट्टि ढलोटको शिवजीको सुन्दर मूर्ति छ। साँढेमाथि उभिएर नाचिरहेका शिवजीको सो मूर्ति निकै आकर्षक छ। यसै गरी धाराको बायाँपट्टि कुनै वेला पार्वतीको मूर्ति रहेको अनुमान हुन्छ। त्यहाँ अहिले पनि ढलोटको खाली पादपीठ छँदैछ।

धाराको अगाडि माथि चोकमा राजा प्रतापमल्लले बनाएको धातुनिर्मित भूगोल छ। सो भूगोल गोल नभएर थाल जस्तो च्याप्टो आकारको छ। त्यस भूगोलको सबभन्दा तल्लो भागमा तल, पाताल, रसातल आदि अनेक धरातल देखाइएका छन्। चारैतिर पानीको दृश्य त्यहाँ देखाइएको छ तथा अक्षरद्वारा प्रत्येक धरातलको नाम बताइएको छ। ती धरातलमाथि उभिरहेका वराहले आफ्नो काँधले स्त्रीशरीरधारी पृथ्वीलाई बोकेका छन्। थाल जस्तो भूगोलको चक्का चाहिँ वराहको थुतुनोमा अडयाइएको छ। विभिन्न वृत्त र रेखाहरू त्यसमाथि कोरिएका छन् तथा सानसानो अक्षरद्वारा लोकलोकान्तरको नाम त्यहाँ दिइएका छन्। त्यस भूगोलको एक छेउमा राजा प्रतापमल्लले अनेक शास्त्र हेरी त्यसको निर्माण गरेको कुरा लेखिएको छ। त्यस अभिलेख अनुसार वि. सं. १७१३ मार्गमा यस भूगोलको निर्माण गरिएको थियो[1]। राजा प्रतापमल्लको यस कृतिले उनको जिज्ञासु स्वभावको परिचय दिएको छ साथै तात्कालिक लोकधारणाको पनि ज्ञान गराएको छ। यही धारणाअनुसार लेखिएका यस विषयका ग्रन्थ पनि प्राप्य छन्।

यस भूगोलको नगीचै प्रस्तरको ठूलो खाट छ। नुहाइधुवाइपछि समाधि तथा पाठपूजाको लागि मल्ल राजाहरू यस खाटमाथि बस्दथे। घाम तथा पानीबाट बच्न यस खाटमाथि चँदुवा हालिएको हुन्थ्यो। चँदुवा अडयाउने थाम गाड्न राखिएको सर्पको आकृति कुँदिएका आधारशिला यस खाटको चारकुनामा अद्यापि त्यहाँ देखिन्छन्।

---

२. परिशिष्ट, २५ संख्याको अभिलेख

# सुन्दरचोक

मोहनचोकको पृष्ठभागमा उत्तरतिर एउटा सानो चोक छ। सुन्दरचोक भन्ने नामले सो चोक प्रसिद्ध छ[1]। मोहनचोकको भित्री भागको रूपमा सुन्दरचोकको निर्माण गरिएको देखिन्छ। मोहनचोकको पश्चिमोत्तर कुनामा रहेको प्रवेशद्वारबाट भित्र पसेपछि सुन्दरचोकमा पुगिन्छ। सिंहढोकानिर रहेको प्राङ्गणबाट र त्रिशूलचोकबाट पनि त्यहाँ पस्न सकिन्छ।

यस चोकको घरमा प्रयोग गरिएका धेरैजसा झ्याल ढोका नेपाली कलाको प्रतिनिधित्व गर्दछन् तापनि चोकको दक्षिणी र पश्चिमी लङमा नेपाली कलाको कुनै अवशेष बाँकी रहेका छैनन्। चोकको पूर्वी लङ दुइतले छ, अरू सबै लङ तीनतले छन्। यस चोकको उत्तरी लङको दोस्रो तलामा तीनमुखे सुन्दर सँझ्याल छ। सँझ्यालको दायाँ बायाँ थाकुझ्याल छन्। तेस्रो तलामा पिपलको पात जस्तो आकारको सँझ्याल र त्यसको दायाँ बायाँ चाक्ला आँखिझ्याल छन्। पूर्वी लङको दोस्रो तलामा पनि लहरै तीन वटा आँखिझ्याल छन्। तिनमा दायाँपट्टि कुनामा रहेको आँखिझ्याल चारपाटे छ, बाँकि दुइटा आँखिझ्याल गोलाकार छन्। बीचको गोलाकार आँखिझ्यालमा मुजुरको आकारमा र त्यसको दायाँपट्टि रहेको गोलाकार आँखिझ्यालचाहिं सप्ताश्व सूर्यको आकारमा बनाइएको छ। पूर्वी लङको दलानको एउटा खापामा महाकालको मूर्ति अङ्कित गरिएको छ। काष्ठकलाको दृष्टिले सो मूर्ति महत्त्वपूर्ण देखिन्छ।

यस चोकको पश्चिमोत्तर कुनामा राजा प्रतापमल्लले स्थापना गरेको लक्षप्रतापेश्वरको मूर्ति रहेको छ। त्यहाँ रहेको एउटा सानो घण्टमा वि. सं. १७०७ फागुनको राजा प्रतापमल्लको छोटो अभिलेख अङ्कित छ[2]।

मोहनचोकमा जस्तै यस चोकमा पनि सुनधारा छ। मोहनचोकको दलानमा रहेको राजा प्रतापमल्लको ठूलो शिलालेखमा यस चोकको उल्लेख आएको छ। सो अभिलेखअनुसार उनले वि. सं. १७०७ फागुनमा आपनी पत्नी रूपमतीदेवीको नाउँमा यो सुनधारा बनाउन लगाएका थिए[3]। यस धाराको माथि गुम्बज शैलीको सानो मन्दिर बनेको छ। धाराको वरिपरि विभिन्न देवदेवीका मूर्ति स्थापना गरिएका छन्। तर मोहनचोकको सुनधाराको अनुपातमा यस सुनधारा-मा देवदेवीका मूर्ति निकै कम छन्। मोहनचोकको धाराको टुटोमा जस्तै यहाँ रहेको धाराको टुटोमा पनि हात्ती, कछुवा, बाघ तथा मकरको आकृति बनाइएका छन् तथा मुख बाइरहेको मकरको मुखबाट गाईको बाछो उफ्रेर बाहिर आइरहेको दृश्य देखाइएको छ।

---

१. बोलचालीमा यस चोकलाई सुन्दरीचोक पनि भनिन्छ। परन्तु राजा प्रतापमल्लको अभिलेखमा यसलाई सुन्दरचोक भनी लेखिएको छ, परिशिष्ट, २० संख्याको अभिलेख

२. परिशिष्ट, १८ संख्याको अभिलेख

३. परिशिष्ट, १६ संख्याको अभिलेख ६ पंक्ति

दरवारको प्राङ्गणमा रहेको राजा प्रतापमल्लले बनाएको ठूलो जलद्रोणीको पछाडि यो चोक पर्दछ । त्यस जलद्रोणीमा पानी भर्ने काम यस चोकमा रहेको सुनधाराबाट गरिन्थ्यो । काठमाडौंमा कलधारा आउनुभन्दा पहिले त्यस जलद्रोणीमा प्रतिदिन पानी भर्ने काम चालू थियो भन्ने बूढापाकाहरूको भनाइ छ ।

यस सुनधाराको सामुन्ने एउटा सुन्दर प्रस्तरमूर्ति छ । कालीयदमन भनी प्रसिद्ध सो मूर्ति नेपालको उत्कृष्ट मूर्तिकलाको नमूना मानिएको छ । यस जोडाको भावपूर्ण मूर्ति नेपालमा मात्र होइन सम्पूर्ण भारतवर्षमा पनि दुर्लभ छ भन्ने विशेषज्ञहरूको भनाइ छ । राजा प्रतापमल्लले प्रस्तर-को यो मूर्ति लाजिम्पाटनजीकै साकोना भन्ने ठाउँमा उपेक्षित रूपमा त्यत्तिकै परिरहेको देखेर त्यहाँबाट उठाएर ल्याई आफ्नो दरवारको चोकमा राख्न लगाएका थिए । सोही ठाउँमा यससंगै रहेको गरुडको सुन्दर मूर्ति पनि राजा प्रतापमल्लले साथसाथै दरवारमा ल्याएका थिए । यो कुरा नेपालका वंशावलीहरूमा लेखिएको छ[1] । ती वंशावलीअनुसार कालीयदमनको मूर्ति संगसंगै ल्याइएको गरुडको सो मूर्तिचाहिं दरवारलाई फापेन भनी दरवारबाट फेरि उठाएर लगी नारायणहिटीनजीकैको नारायणको मन्दिरअगाडि राखिदिए । त्यहाँ सो गरुड अद्यापि विद्यमान छ ।

चार हात जति अग्लो यस कालीयदमन मूर्तिमा बालक कृष्णले कालीय नागलाई आफ्नो वशमा पारेको दृश्य बडो भावपूर्ण तरिकाले प्रस्तुत गरिएको छ । हरिवंश आदि पुराणहरूमा वर्णित कथाअनुसार कालीय नागले यमुना नदीमा बसेर त्यस नदीको सारा पानी विषाक्त पारिदिए-का थिए । गरुडले पनि उनलाई वशमा ल्याउन सकेका थिएनन् । यसैले भगवान् कृष्णले आफैं यमुना नदीमा पसेर कालीय नागसंग लडी उनलाई वशमा पारेका थिए । यही कथानकमा यो मूर्ति आधारित छ ।

यस मूर्तिमा मनुष्यको आकारमा कालीय नागको चित्रण गरिएको छ । मुकुटधारी कालीय नागको शिरको पृष्ठभागमा पाँच टाउके नागको फणा छ । त्यस नागको काँध र टाउकोमा टेकेर बालक कृष्ण उभिरहेका छन् । उनको शैशवोचित हृष्टपुष्ट शरीर सजीव तथा गतिशील जस्तो भान पर्छ । उनको हँसिलो अनुहारमा नागलाई दमन गर्न सक्ने आफ्नो अलौकिक क्षमता प्रति पूर्ण विश्वास झल्कन्छ । कुनै कपडाको टुक्राले (शायद उनको आफ्नै कम्मरमा बांध्ने पटुका) ले 'फेरि यस्तो कहिल्यै नगरेस्' भन्ने भावले नागलाई क्षमाप्रदान गरी बिस्तारै हिर्काउन लागेको दृश्य यसमा देखाइएको छ । बटारिएर रहेको सर्पकुण्डलीको मध्यभागबाट नागको फुर्तिलो शरीर निस्किरहेको छ । उनले आफ्नो हातमा फणा फिंजाइरहेको सर्प छडीको रूपमा लिएका छन् । उनको बाटुलो कम्मर, फराकिलो छाती तथा पुष्ट बाहु रहरलाग्दा छन् । अनुपात मिलेको कालीय नागको शरीर हेर्दैमा बलवान् देखिन्छ तापनि बालक कृष्णको दैवी शक्तिको अगाडि पराभूत भएर उनले आफ्नो हार स्वीकार गरिरहेका छन् ।

---

१. लंसाल, "भाषावंशावली" २ भाग ८८ पृ.

यस मूर्तिको अधोभागमा दायाँतिर एक पुरुष र बायाँतिर एक स्त्रीको मूर्ति देखापर्छन् । दुवैलाई सर्पकुण्डलीले बेरिराखेको छ । पुरुषचाहिं सर्पकुण्डलीको जकडनबाट उम्केर जाने कोशिश गरिरहेका देखिन्छन् । तर स्त्रीमूर्ति भने नमस्कारमुद्रामा विनम्रतापूर्वक माथितिर हेरिरहेको छ । कालीयदमनको कथासंग सम्बद्ध गोप र नागकन्याका मूर्ति यी हुन् भन्ने विद्वान्हरूको विचार छ[1] ।

बालक कृष्णको शिरोभागपछाडि प्रभामण्डल छ । त्यस प्रभामण्डलमा ज्वाला र विन्दुको बुट्टा प्रयोग गरिएका छन् । विक्रमको पाँचौं छैठौं शताब्दीतिरका प्राचीन मूर्तिहरूमा यस बुट्टाको प्रयोग पाइँदैनन् । पछिल्लो कालमा बनेका मूर्तिहरूमा मात्र ती बुट्टा निकै लोकप्रिय भएको देखिन्छ । प्रभामण्डलमा ज्वाला र बिन्दुको संयुक्त प्रयोग साधारणतया विक्रमको आठौं शताब्दीको तेस्रो चरणदेखि मात्र हुन थालेको विश्वास गरिन्छ । तर गत केही वर्षअगाडि गरिएको अन्वेषण-कार्यबाट नेपालमा ज्वाला र विन्दुको संयुक्त प्रयोग विक्रमको सातौं शताब्दीको अन्तिम दशकदेखि शुरू भएको देखिएको छ[2] ।

यस मूर्तिको निर्माणसमयको सम्बन्धमा इतिहासकारहरूको भिन्नाभिन्नै राय छ । विक्रमको सातौं अथवा आठौं शताब्दीतिर यो मूर्ति बनेको हुनुपर्छ भनी उनीहरूले अनुमान गरेका छन्[3] । तर हालै सुन्दरचोकभित्र कालीयदमनको मूर्तिसंगै एउटा खण्डित शिलालेख प्राप्त भएको छ[4] । सो शिलालेख साकोनाबाट उठाएर ल्याएको कालीयदमन र गरुडको मूर्तिसंग सम्बद्ध देखिन्छ । खण्डित हुनाले त्यसमा सालमितिको उल्लेख पाईंदैन तापनि लिपिको आधारमा सो अभिलेख विक्रमको दशौं शताब्दीतिरको हो भन्ने बुझिएको छ ।

गरुडसहित वैष्णव मूर्ति स्थापना गर्दा गरुडको पादपीठमा अभिलेख अङ्कित गर्ने चलन देखिनाले सो शिलालेख नारायणहिटीमा राख्न लगेको गरुडको पादपीठको खण्डित अंश हो भन्ने प्रतीत हुन्छ । त्यस शिलालेखको लम्बाई र नारायणहिटी गरुडको पादपीठको लम्बाई बराबर छ । परन्तु आजभोलि त्यस गरुडको पादपीठ पछि थपेको जलहरिले छोपिएको छ । सो जलहरि हटाई अभिलेख हेर्ने प्रबन्ध मिलाउन सके कालीयदमनको समयनिर्द्धारण गर्ने निश्चित आधार पाइने संभावना छ ।

---

१. प्रतापादित्य पाल, "वैष्णव आइकोनोलजी इन् नेपाल" ८९ पृ.
२. श्लसर्, वज्राचार्य, "सम् नेपालीज् स्टोन स्कल्पचर्स्. . . ." आर्टिवस एशिया ३५ वर्ष १–२ अंक १२९ पृ.
३. पाल, "वैष्णव आइकोनोलजी इन् नेपाल" ८९ पृ.; स्टेल्ला क्रामरिस्क, "द आर्ट अफ् नेपाल" २५ पृ.
४. परिशिष्ट, ४ संख्याको अभिलेख

# मूलचोक

नासलचोकको पूर्वोत्तर कुनामा रहेको प्रवेशद्वारबाट भित्र पसेपछि मूलचोक पुगिन्छ । मूलचोक प्राचीन राजदरवारको अपरिहार्य अङ्ग थियो । यसैले तीनै शहरको मल्लदरवारमा मूलचोक बनेका छन् । वंशावलीअनुसार राजा महेन्द्रमल्ल (वि. सं. १६१७ आ.– १६३१ मृ.) ले तलेजु भवानीको मन्दिर बनाउँदाखेरि नै आफ्नो दरवारमा मूलचोकको पनि निर्माण गराएका थिए । काठमाडौंको मूलचोकको पहिलो उल्लेख वि. सं. १६८५ मा पाइएको छ[1] । वि. सं. १७६५ फागुनमा राजा भास्करमल्लको पालामा यस चोकको जीर्णोद्धार गरिएको थियो । यस चोकमा रहेको तलेजुको मन्दिरको ढोकाको दायाँ बायाँ रहेका गङ्गा र जमुनाको ढलौटे मूर्ति पनि यसै वेला स्थापना गरिएका थिए[2] । यो चोक अद्यापि प्राचीन रूपमै रहेको छ । यसैले नेपाली वास्तुकलाको गौरवमय दृश्य यस चोकमा देख्न पाइन्छ ।

मल्लकालमा धार्मिक दृष्टिकोणले यस चोकको विशेष महत्त्व थियो । राजा तथा राजपरिवारको विवाह, होम, गोदान आदि धार्मिक कृत्य यस चोकमा संपन्न गरिन्थे । वि. सं. १७३६ आश्विनमा मूलचोकको एउटा चपलि (पश्चिमट्टिको दलान) मा बसेर राजा नृपेन्द्रमल्लले गोदान गरेको वर्णन ठ्यासफुमा गरिएको छ[3] । यसै गरी वि. सं. १७६७ माघमा शिवरात्रि कुन दिन गर्ने भन्ने कुराको निर्णय गर्न मूलचोकमा सभा बसेको उल्लेख आएको छ[4] ।

मल्ल राजाहरूको राज्याभिषेक समारोह तथा चौतारा (प्रधानमन्त्री) को नियुक्ति सम्बन्धी काम कुरो पनि मूलचोकमा हुन्थ्यो । वि.सं. १७३१ आषाढमा मूलचोकको पूर्वी दलानमा

---

१. काठमाडौंमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफुमा यस्तो लेखिएको छ– "सम्वत् ७४८ आश्विणीशुक्ल ९ महनि, थ्व दिन कुन्हु मूलचुकस हिकोड निग्वड तपज्याक."

२. परिशिष्ट, ५१ संख्याको अभिलेख

३. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३० पृ. "सं. ७९९ आश्विनशुक्ल ।। पूर्ण्णमी वृहस्पतिवार थ्वकुन्हु ग्रस्तोदय चन्द्रग्रासस श्रीश्रीजयनृपेन्द्रमल्ल प्रभु थाकुलसन मूलचूकया योता चपलिस वत्छसहित तिलधेनु दान बिज्रो जुरो ।" (ठ्यासफु)

४. सोही, ३२ पृ,; "सं. ८३१ माघ कृष्ण ।। त्रयोदशी घटि ३० वि. ५२ चतुर्दशी २९ वि. ४८ दिनमान घटि २८ वि. ४८ थ्वते दयाव चतुर्द्दशी कुन्हु शिवरात्री, वंकोदोया गंगाधरन धाया, त्रयोदशी प्र चतुर्द्दशी कुन्हु शिवरात्री गंगाधरया ख मखयकाव सति कुन्हु पछिन्न यात ।। थ्वकुन्हुं खंप्वया जुजु थि विज्याङाओ खप्वया जोशि श्रीविश्वम्भर उपाध्याजु सकरं मुरचुक साहुति समधार याङाव मुहूर्त्त छिच्या विक राम तुव धक, थ्वकुन्हु गथे याय त्रयोदशी प्र चतुर्दशी कुन्हु शिवरात्रि पछिन्न यात. . . ." (ठ्यासफु)

**राजा नृपेन्द्रमल्लको राज्याभिषेक भएको थियो[1]। उनको सो राज्याभिषेक समारोहमा पाटन र भक्तपुरका राजाहरू पनि सामेल भएका थिए। पाटनका राजा श्रीनिवासमल्लले नृपेन्द्रमल्ललाई राजतिलक लगाइदिएका थिए। वि. सं. १७३७ जेठमा नृपेन्द्रमल्लको आकस्मिक मृत्युपछि उनका भाइ पार्थिवेन्द्रमल्ल राजा बनाइँदा उनको राज्याभिषेक पनि मूलचोकमै गरिएको थियो[2]। यसै गरी वि. सं. १७४४ आषाढमा पार्थिवेन्द्रका बालक छोरा भूपालेन्द्रको राज्याभिषेक समारोह यही चोकमा संपन्न भएको कुरा ठ्यासफुमा लेखिएको छ[3]। त्यस वेलाको चलनअनुसार कसैलाई चौतारापदमा नियुक्ति गरिंदा त्यस पदको चिह्नस्वरूप फेटा, सुनको बाला, जरि भरेको लुगा लगाइदिनु आवश्यक थियो। वि. सं. १७४४ आषाढमा लक्ष्मीनारायण जोशी, वि. सं. १७५० आश्विनमा रघुवीर भारो, वि. सं. १७७० मा वंशीधर कुह्मर तथा वि. सं. १७७० कै भाद्रमा झगल ठाकुर चौताराको पदमा नियुक्त गरिदा तत्सम्बन्धी विधिविधान मूलचोकमै भएको उल्लेख पाइन्छन्[4]। योबाहेक वि. सं. १७८९ मा राजा जयप्रकाशको दोस्रो विवाह गर्दा पनि मूलचोकको**

---

१. रामजी तेवारी र अरू, "ऐतिहासिक पत्रसंग्रह" २ भाग २८ पृ., "संवत् ७९४ आषाढ शुक्ल षष्ठी उत्तरफाल्गुण परिघ सोमवार थ्व कुन्हु. . . .न्याया ध्वकह्म थाकुर श्रीजयनृपेन्द्रमल्ल राजा सारा घरि ८ स जुरो ॥. . . .श्रीनिवासमल्लजुन ध्वकह्म राजायात थम थंकाडि जुस्यं तेका थम बिव जुरो न्याया मूलचुकया पूर्व्व चपरिस कलशपूजा याङाव जुरो ॥" (ठ्यासफु)

२. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" २३९ पृ.; "संवत् ८०० ज्येष्ठ कृष्ण॥ एकादशी प्र द्वादशी शनैश्चर थ्व कुन्हुया रात्रीस झिमच्या घरिस श्रीश्रीजयनृपेन्द्रमल्ल महाराजा मोक जुरो। . . . . थ्वयान झिमपेन्हु नृपेन्द्रमल्लया किजा श्रीश्रीपार्थिवेन्द्रमल्ल यरया राजां खप्वया राजां दयकाओ मूलचुकस राजां सारा." (ठ्यासफु)

३. सोही, २७९ पृ.; "सं. ८०७ आषाढ शुक्ल ॥ पूर्ण्णमी उत्राषाढनक्षत्र प्रीतियोग वृहस्पतिवार थ्व कुन्हुया धनुलग्नस घटि २९ थ्वते बेतकाओ श्रीश्रीभूपारेन्द्रमल्ल राजा तिका बिर. खप्वया राजा जितामित्रमल्ल निह्म फुकिजं वयाओ मदुया भायात चौतारा बितारि विर ॥ मूरचुकस ॥" (ठ्यासफु)

४. तेवारी र अरू; "ऐतिहासिक पत्रसंग्रह" ४८ पृ. "सं. ८१३ आश्विनकृष्ण ॥ पंचमी मृगसिर-नक्षत्र पलिघयोग सोमवार ॥ थ्व कुन्हु रघुवीर भारोयात चौतारा बितारि बिर मुरचुकस. . खप्वया राजा वयाओ।" (ठ्यासफु)। वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३४ पृ.; "सं. ८३३ आषाढ कृष्ण सप्तमी रेवतिनक्षत्र शुक्रम्भयोग शुक्रवार ॥ थ्वकुन्हु श्रीवंसिधर कुह्मरजुयात चौतारा वितारि विर, मूरचुकस, मूत बिर रुचुन्या विर, जरवापया रङ जुछि विर. . . .सं. ८३३ भाद्रपद कृष्ण तृतीया रेवतिनक्षत्र वृहस्पतिवार थ्वकुन्हु श्री झग्ल थकुरजुयात चौतारा बितालि बिर मूरचुकस, षुन्हुह्लओ रुचुन्यान ह्लयातकर जरवापया ओसत बिर मूति विर, वितर्वलि बिर, यरया जुजुं खपोया जजुं बिज्याङाओ खपोया जुजुनं यरया जुजुनं मूति छजु छजु बिओ श्रीबंसिधर कुह्मरजु कोकायाओ बिर ॥" (ठ्यासफु)

पूर्वी लङ्को कोठा प्रयोगमा ल्याइएको थियो[1] । दसैं, चैत दसैं आदि चाड पर्व प्रतिवर्ष यस चोकमा आजभोलि पनि मनाइँदैछन् । दसैंमा तलेजुको ठूलो मन्दिरबाट तलेजुभवानीको प्रतिमूर्ति ल्याई मूलचोकमा रहेको तलेजुको निवासस्थानमा राखी पूजा गर्ने परम्परागत चलन छ ।

मूलचोक इवाट्ट हेर्दा विहार जस्तो देखिन्छ। विहारमा जस्तै यस चोकको चारै लङ्मा दुइतले घर बनेका छन् । दक्षिणी लङमा तलेजुको मन्दिर रहेको छ, जो विहारमा बनाइने आगमछें-को अनुरूप छ । त्यस लङमा बाहेक अरू सबै लङ्को भुइँतलामा खुला दलान बनेका छन् । हरेक दलानको दायाँ बायाँ कलापूर्ण दुइ दुइ ढोका बनेका छन् । चोकको पेटीमुनि दुइ तीन हात जति अग्ला काठका स्तम्भ लहरै निबद्ध छन् । चोकको बीचमा मौलो गाडिएको छ । दसैं तथा चैत दसैंमा सोही मौलोमा बाँधेर तलेजुभवानीलाई भोग दिने काम हुन्छ ।

यस चोकको हरेक टुँडालमा भगवतीले दैत्यहरूको संहार गरेको चण्डीको कथानकमा आधारित विभिन्न दृश्य देखाइएका छन् । ती टुँडालमुनि अभिलेखद्वारा पनि तत्तत् दृश्यको परिचय दिइएका छन्[2] । चोकको कुना कुनामा टुंडालको सट्टा प्रयोग गरिएका ठूलठूला कुँसल दर्शनीय छन् ।

तलेजुको मन्दिर रहेको लङमा बाहेक यस चोकको सबै लङ्को दोस्रो तलाको मध्यभागमा संझ्याल बनेका छन् । उत्तरी लङ्को संझ्याल विशेष किसिमको छ । यस संझ्यालमा शाक्त संप्रदाय-का विभिन्न देवदेवीका मूर्ति अङ्कित गरिएका छन् । पूर्वी लङ्को संझ्यालचाहिँ जीर्णोद्धारको सिल-सिलामा हालै मात्र बनेको हो । हरेक संझ्यालको दायाँ बायाँ आंखिझ्याल छन् । त्योभन्दा पर दायाँ बायाँ स्वखाझ्याल बनेका छन् । पश्चिम लङ्को नासलचोक जाने ढोकामाथिको झ्याल चाहिँ स्वखाझ्याल नभएर साधारण आँखिझ्याल मात्र छ ।

तलेजुको मन्दिर रहेको हुनाले दक्षिणी लङ विशेषतया भव्य छ । मन्दिर पस्ने द्वारको दायाँ बायाँ रहेका झण्डै स्त्रीशरीर जति अग्ला गङ्गाजमुनाका ढलौटे मूर्ति निकै दर्शनीय छन् । मकमाथि उभिएर रहेकी गङ्गाले हातमा कमल र दर्पण लिएका छन् । कछुवामाथि उभिएर रहेकी जमुनाले चाहिँ हातमा सिजःमु (अबीर राख्ने भाँडो) लिएका छन्, अर्को हातचाहिँ विन्दुमुद्रामा छ । मल्ल-कालमा गङ्गाजमुनाका यी मूर्ति क्रमशः श्री र लक्ष्मी भन्ने नामले प्रसिद्ध थिए[3] ।

द्वारमाथि सुनको भव्य तोरण छ । त्यसको मध्यभागमा देवीको मूर्ति अङ्कित छ । त्यसको

१. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३८–३९ पृ.; "सं. ८५३ फाल्गुन कृष्ण द्वितीया कुन्हु जयप्रकाशया परत यिहि यातके यात पिथि पूजा दयके. . . .मूलचुक वंता कोथास सोस्ति चोय. . . . मूलचुकस अग्निस्थापना यात," (ठ्यासफु)

२. परिशिष्ट, ५२ संख्याको अभिलेख

३. परिशिष्ट, ५१ संख्याको अभिलेख

वरिपरि नवमातृकाका मूर्ति स्थापना गरिएका छन् । यस द्वारको खापा चौकोस आदि सबै सुनको पाताले मोडिएका छन् । द्वारको दायाँ बायाँ रहेका आँखिझ्याल पनि सुवर्णनिर्मित छन् । तोरणको पछाडि दोस्रो तलामा विहारको आगमछेंमा जस्तै कलापूर्ण पाचुखाझ्याल बनेका छन् ।

यस चोकको झिंगटीको छानामाथि धुरीमा लहरै मुण्ड र कपालका आकृतिमा बनेका ईंट कोपुको रूपमा प्रयोग गरिएका छन् । दक्षिणी लङ्मा छानामाथि सुनका गजूर छन् । एउटा गजूर भवनको मध्य भागमा रहेका छन् तापनि लहरै राखिएका अरू पाँच गजूर त्यसभन्दा केही पर छेउमा राखिएका छन् । गजूरको यस संस्थितिले भवनको त्यस भागको विशेषतालाई बुझाएको छ । दसैं आदि पर्व दिनमा भवनको त्यस भागमा देवदेवीको गुप्त पूजाआजा हुन्छ भन्ने कुराको संकेत त्यताबाट पाइन्छ ।

हालैको अन्वेषणकार्यको सिलसिलामा यस मूलचोकमा एउटा साह्रै महत्त्वपूर्ण कुरा उपलब्ध भएको छ । यस चोकको पश्चिम लङ्मा दलानसंगै दायाँपट्टि नुवाकोट भगवतीको भँडारकोठाको रूपमा रहेको छिंडीमा तीनवटा धातुमूर्ति देखापरेका छन् । इन्द्रजात्रामा नुवाकोट भगवतीको मन्दिरमुनि देखाइने देवदेवीसंगै ती मूर्ति राखिएका छन् । ती तीनै मूर्ति मानव शरीर जत्तिकै लम्बा चौडा छन् तथा तिनमा एउटा पुरुषमूर्ति र अरू दुइटा स्त्रीमूर्ति छन् । दरवारभित्र रहेका यी भव्यमूर्ति अवश्य पनि राजारानीको हुनुपर्छ भन्ने विचारले खोजतलास गरी हेर्दा मूर्ति श्री ५ पृथ्वीनारायण शाह र उनका दुइ रानी इन्द्रकुमारी र नरेन्द्रलक्ष्मीका सालिक हुन् भन्ने थाहा पाइएको छ । ती मूर्तिमा कुनै अभिलेख अङ्कित गरिएको छैन । परन्तु नुवाकोट भगवतीका पुजारी र गुठियारहरूलाई ती मूर्ति श्री ५ पृथ्वीनारायण शाह र उनका दुइ रानीका हुन् भन्ने कुराको राम्रो ज्ञान छ । यसैले इन्द्रजात्रामा त्यहाँ रहेका आनन्द भैरव र आनन्द भैरवीको मूर्ति नुवाकोट भगवतीको मन्दिरमुनि लगेर प्रदर्शित गर्न लैजाँदा देवदेवीको पूजा सिद्धिएपछि श्री ५ पृथ्वीनारायण शाह र उनका दुइ रानीको रूपमा ती धातुमूर्तिको निधारमा टीका लगाइदिन्छन् । प्रारम्भमा ती धातुमूर्ति नुवाकोट भगवतीकै मन्दिरमा थिए भन्ने तिनीहरूको भनाइ छ ।

श्री ५ पृथ्वीनारायण शाह भगवतीका भक्त थिए । हनूमान्ढोकामा नुवाकोट भगवतीको स्थापना उनैको राज्यकालमा भएको थियो । नुवाकोट भगवतीको मन्दिरको सम्बन्धमा विचार गर्दा यस विषयमा हामीले सप्रमाण लेखिसकेका छौं । प्रतिवर्ष इन्द्रयात्रामा भगवतीको मन्दिरमुनि प्रदर्शित गर्न देवदेवीका मूर्ति मूलचोकबाट उठाएर लैजाँदा पृथ्वीनारायण शाह आफ्नै बाहुलीबाट पूजासामा संकल्प गरी पूजा गर्दथे । एउटा ऐतिहासिक कागतबाट यो कुरो बुझिएको छ [1] । यसैले

---

१. काठमाडौं ज्वालहालमा बस्ने नुवाकोट भगवतीका पुजारी सानुरत्न वज्राचार्यको संग्रहमा रहेको उक्त कागतमा लेखिएको छ– "विन्तिपत्र. . . .श्री ५ पृथ्वीनारायण साहका पाला-देषी श्रीमनकामुना श्रीनुवाकोट भैरवी श्रीकडेलचोक भगवती नित्य नैमित्तिक पुजा र पर्व पर्वका पुजा. हाम्रा ज्युज्यु वाज्या जगतमुनि छत्रपतिलाई पुजाहारी वक्सीदा अजसंम पुजा

त्यस दिन आजभोलि पनि प्रत्येक वर्ष उनको सालिकमा टीका लगाइदिने चलन चलेको देखिन्छ ।

श्री ५ पृथ्वीनारायण शाह र उनका दुइ रानीको चित्र पाइएका छन्[1] । ती चित्रमा प्रस्तुत गरिएको आकृतिसंग ती सालिक मिल्दाजुल्दा छन् । पृथ्वीनारायणको शरीर केही पातलो तर खँदिलो किसिमको थियो । ठूलठूला आँखा, सुरिलो नाक, लामलामा जुंघा, स्पष्ट छुट्टिने रुद्रकण्ठी उनको अनुहारमा देखिने मुख्य विशेषता थिए । यो रूप उनको सालिकमा दुरुस्त आएको छ । यसै गरी चित्रले प्रस्तुत गरेका उनका दुइ रानीको केशविन्यास, टीका तथा पछ्यौरा ओढ्ने तरीका पनि सालिकसंग सामञ्जस्य राख्दछन् ।

यी तीनै सालिक नमस्कारमुद्रामा छन् । यसैले यी सालिक प्रारम्भमा कुनै देवताको अघिल्तिर राखिएका थिए भन्ने स्पष्ट छ । राजा दुवै घुँडा टेकेर बसेका छन्, रानीहरूचाहिं ललितासनमा छन् । पृथ्वीनारायणले बायाँ बाहुलीमा एउटा औंठीबाहेक अरू कुनै गहना लाएका छैनन् । सादा जीवन बिताउने[2] उनको विचारसंग यो कुरो मिल्दो छ । उनले शिरमा बीचमा अलिकता चिरिएको, किनारामा फूलबुट्टा भएको चुच्चे टोपी पहिरेका छन् । ठूलठूला तना भएको अङ्गा लगाएर त्यसमाथि पटुका बाँधेका छन् । झल्लरीयुक्त फूलबुट्टे किनारा भएको पटुकाका दुइ टुप्पा अघिल्तिर लट्किरहेका देखिन्छन् । शिरपेचबाहेक चित्रमा देखिने उनको वेषभूषासंग यो धेरै मिल्दोजुल्दो छ ।

दुइ रानीको पहिरन र गहनागुरिया एकै किसिमको छ । एउटी रानीले औंठी लगाएकी छिन् । अर्कीले छैन । योबाहेक अरू कुनै भिन्नता उनीहरूको वस्त्राभरणमा देखिदैन । दुइ रानीमा कुनचाहिं इन्द्रकुमारी र कुनचाहिं नरेन्द्रलक्ष्मी हुन् भन्ने कुरो छुट्याउने कुनै आधार पाइएको छैन । दुवैले पातलो पछ्यौराले शिर छोपेका तथा चोलो लाएका छन् । दुवैको कण्ठमा बहुमूल्य हार, बाहुमा मकरको बुट्टा कुँदिएका सुनका चुरा तथा पाउमा नूपुर र कल्ली देखिन्छन् । परन्तु कानमा दुवैको केही आभूषण छैन । कानका गहना छुट्टै बनाइएका हुनाले खसेको अनुमान हुन्छ ।

प्रतापमल्ल, योगनरेन्द्रमल्लहरूको सालिकमा जस्तै प्रारम्भमा रानीका यी मूर्ति पृथ्वीनारायणको दायाँबायाँ राखिएको बुझिन्छ । परन्तु यी सालिकमा एउटा महत्त्वपूर्ण विशेषता

---

चलाई आयाको थियो प्रभु. इन्द्रजात्राका एकादसीका रात्रीमा दर्वार मूलचोकमा श्रीमामकीदेवी श्री सक्ति भैरव श्रीस्वछन्द भैरव लिन जाँदा सर्कारका बाहुलिबाट पुजाका सामा संकल्प गरी श्रीमामकीदेवी श्रीसक्तिभैरव स्वछन्दभैरव देवताहरूलाई पुजा गरी सिंहढोकाबाट ल्याई श्रीकडेलचोक भगवतीका दलानमा स्थापना गरी इन्द्रजात्रा ८ दिनसंम हामीहरू रुजु रही. . . . इति सम्वत् १८५२ साल मिति भाद्र सुदी. . . . रोज. . . . शुभम्."

१. राष्ट्रिय संग्रहालयमा सो चित्र सुरक्षित छ ।

२. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३२४ पृ.

देखिएको छ। मल्लकालमा सालिक बनाउँदा मुख्य व्यक्तिको आकृति ठूलो, गौण व्यक्तिको सालिक निकै सानो गरी बनाउने चलन थियो। यसैले मल्ल राजाहरूको सालिकमा रानीहरूभन्दा राजाको सालिक झण्डै दोब्बर ठूलो गरी बनाइएका हुन्थे। परन्तु पृथ्वीनारायण र उनका रानीहरूका यी सालिक त्यसरी निर्माण गरिएका छैनन्। पुरुषभन्दा स्त्रीशरीर जति सानो हुनुपर्ने हो त्यतिमात्रै सानो गरी यिनमा देखाइएका छन्। मूर्तिमा स्वाभाविकता ल्याउन यसो गरिएको बुझिन्छ। नेपाली मूर्तिकलाको इतिहासमा शाहकालको प्रारम्भमा आएको नौलो प्रवृत्तिको रूपमा यो देखिएको छ।

## त्रिशूलचोक

मूलचोकको उत्तरी दलानमा रहेको ढोकाबाट भित्र पसेपछि त्रिशूलचोक पुगिन्छ। बाहिर प्राङ्गणमा काकेश्वरको मन्दिरसामुन्ने रहेको सिंहढोकाबाट पनि यस चोकमा पुग्न सकिन्छ। मल्लकालिक लेखहरूमा यस चोकलाई "त्रिशूलरिवि" भनी लेखिएको छ[1]। यस चोकमा मल्ल राजाहरूको इष्टदेवता तलेजुको विशाल मन्दिर रहेको छ। सोही मन्दिरको मुनि शाक्तसंप्रदायको चिह्नस्वरूप प्रस्तरको ठूलो त्रिशूल स्थापना गरिएको छ। सोही त्रिशूलले गर्दा यस चोकको नाम त्रिशूलरिवि अथवा त्रिशूलचोक भन्ने रहन गएको छ।

मूलचोकबाट त्रिशूलचोक पस्नेबित्तिकै गुम्बज शैलीमा बनेको प्रस्तरनिर्मित सानो मन्दिर जस्तो भवन देखापर्छ। सो भवन झ्वाट्ट हेर्दा मन्दिर जस्तो देखिन्छ तापनि वास्तवमा सो भवन मन्दिर नभएर अग्निशाला मात्र हो। त्यस भवनको छानामा लेखिएको छोटो अभिलेखअनुसार सो अग्निशाला राजा लक्ष्मीनरसिंहको पालामा वि. सं. १६९० माघमा बनेको थियो[2]। अग्निशालाको पश्चिमपट्टि ईंट र प्रस्तरद्वारा निर्मित डबली छ। त्यस डबलीमा बाह्र वर्षे श्वेतकालीको नाच, दसैंताका देखाइने कुह्मर नाच[3] (कुमारनृत्य) आदि नाच देखाउने परम्परागत चलन उहिले थियो। त्यहाँ ती नाचको प्रदर्शन देख्ने व्यक्तिहरू अद्यापि एक दुइजना भेटिन्छन्।

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १८ पृ. "सं. ८०२ माघकृष्ण: ।। पंचमी प्र षष्ठी, हस्तनक्षेत्र, प्रीतियोग, बुधवार, थ्वकुन्हु श्रीश्रीजयपार्थिवेन्द्रमल्लन त्रिशूलरिविस रोहोखंवस थमं श्रीरिद्धिलक्ष्मी रानी, खतिनि राज्यलक्ष्मीं मामं काय ठाकुर थ्वपनि ङाह्मं रोहोखंव छगुलिस सारिक तया जुरो ।।" (ठ्यासफु)

२. परिशिष्ट, ११ संख्याको अभिलेख

३. असन तच्छेबहाल बस्ने देवहर्ष वज्राचार्यको संग्रहमा रहेको एउटा टिपोट कागतमा कुह्मर नाचको उल्लेख आएको छ– "सम्वत् ६९७ म्ति मार्ग शुदि ३ रोज १ स कुह्मल प्याखं न्हुगु जुजं लालमोहर्या दां विगु दाम मोह तका ८५ या वछि २ यातां थवनेया भागं मोहतका ४२।। थुकिस कुह्म प्याखं जुह्म यात मोह तका २५ वियां. वाकि ल्यंगु दाम व मेगु दांया नास पुजा न्यायका कुह्म प्याखं लायकुलि यने वले सामेल मर्जुपिके दोपं कायगु."

चोकको मध्यभागनिर तलेजुभवानीको मन्दिर सामुन्ने तीनवटा विशाल प्रस्तरस्तम्भ छन् । तिनमध्ये सबभन्दा अगाडि रहेको प्रस्तरस्तम्भ राजा प्रतापमल्लले स्थापना गरेका हुन् । प्रस्तरस्तम्भमा अङ्कित अभिलेखअनुसार राजा प्रतापमल्लले आफ्नो इष्टदेवता तलेजुप्रति आफ्नो भक्ति प्रकट गर्न आफू र आफ्ना दुइ पुत्र नृपेन्द्रमल्ल र चक्रवर्तीन्द्रमल्लका सालिकसहित सो प्रस्तरस्तम्भ वि. सं. १७२० पौषमा राख्न लगाएका थिए[1] । यस सालिकमा राजा प्रतापमल्ल बीचमा दुइ राजकुमार उनको दायाँ बायाँ छन् । सालिकको अग्रभागमा एउटा सानो साँढेको प्रतिकृति छ । राजा र दुइटै राजकुमारले राजकीय पगडी लगाएका छन् तथा घाँटीमा बहुमूल्य हार देखिन्छन् । दरबारको प्राङ्गणमा देगुतलेजुको अगाडि रहेको स्तम्भमा झैं यसमा पनि राजा प्रतापमल्ल र उनका पुत्रद्वय नमस्कारमुद्रामा छन् । देवीको दर्शन पाउन उत्कण्ठित भएर माथि हेरिरहेका राजा प्रतापमल्लको आकृति भक्तिभावले भरिपूर्ण देखिन्छ । जुंघाको रेखासम्म पनि नबसेका कलिला राजकुमारहरूको सुन्दर अनुहार साह्रै आकर्षक छन् ।

यस स्तम्भको पछिल्तिर रहेको पखेटावाल सिंहको ढलौट सालिकसहित प्रस्तरस्तम्भ पनि राजा प्रतापमल्लकै कृति हो । सिंह तलेजुभगवतीको वाहन हुनाले राजा प्रतापमल्लले यो सिंहसहित स्तम्भ बनाई आफ्ना इष्टदेवतालाई वि. सं. १६९९ जेठमा चढाएका थिए[2] । लिच्छविकालका मुद्राहरूमा पनि पखेटावाल सिंहको आकृति अङ्कित गरिएको पाइन्छ । यताबाट पखेटावाल सिंहको आकृति बनाउने प्राचीन परम्पराको बोध हुन्छ ।

यस स्तम्भको दायाँपट्टि रहेको कच्छपासनयुक्त प्रस्तरस्तम्भचाहिं राजा पार्थिवेन्द्रमल्लले वि. सं. १७३८ माघमा राख्न लगाएका थिए[3] । यस प्रस्तरस्तम्भको टुप्पामा राजा पार्थिवेन्द्रमल्ल बीचमा र उनको दायाँ बायाँ दुइवटा स्त्रीमूर्ति विराजमान छन् । राजा पार्थिवेन्द्रको आकृतिको अनुपातमा ती दुइ स्त्रीमूर्ति निकै साना छन् । सालिक बनाउँदा मुख्य व्यक्तिको आकृति ठूलो र गौण व्यक्तिको आकृति सानो गरी बनाउने नेपाली परम्परा छ भन्ने कुराको चर्चा माथि गरिसकेका छौं । बायाँपट्टि रहेको स्त्रीमूर्तिसंगै अर्को एउटा अझ सानो मूर्ति दृष्टिगोचर हुन्छ । यसरी यस स्तम्भमाथि हाल जम्मा चार व्यक्तिको प्रतिकृति रहेका छन् । परन्तु प्रारम्भमा यस स्तम्भमाथि पांच व्यक्तिको सालिक स्थापना गरिएका थिए । त्यस प्रस्तरस्तम्भमा कुँदिएको राजा पार्थिवेन्द्रमल्लको अभिलेखअनुसार राजा पार्थिवेन्द्र, राजमाता इन्द्रमती, बालक युवराज भूपालेन्द्र, महारानी ऋद्धिलक्ष्मी, रानी राज्यलक्ष्मी यी पाँचजनाको सालिक त्यस स्तम्भमाथि राखिएका थिए । भूकम्प आदि कारणबाट यसमा रहेको एउटा सालिक नष्ट भएको हुनुपर्छ । राजाको दायाँ बायाँ रहेका दुइ स्त्री मूर्ति राजमाता र महारानीका प्रतिकृति हुन् कि भन्ने अनुमान हुन्छ ।

---

१. परिशिष्ट, २९ संख्याको अभिलेख

२. परिशिष्ट, १३, १४ संख्याका अभिलेख

३. परिशिष्ट, ४४ संख्याको अभिलेख. ठ्यासफुमा पनि यस कुराको चर्चा गरिएको छ, जसको उद्धरण माथि गरिसकेका छौं ।

# तलेजुको मन्दिर

हाम्रो यहां तलेजुदेवीको ठूलो प्रसिद्धि छ । नेपालउपत्यकाका तीनै मल्लदरवारमा तलेजुदेवीका मन्दिर विद्यमान छन् । मल्ल राजाहरूको मूल घर भक्तपुर हुनाले यहाँ रहेको तलेजुको मन्दिर सबभन्दा पुरानो मानिन्छ । काठमाडौंको तलेजुको मन्दिर भक्तपुरको तलेजुको मन्दिरको प्रतिनिधित्व गर्न बनाइएको हो तापनि कलाको दृष्टिले काठमाडौंको तलेजुको मन्दिर तलेजुका अरू मन्दिरभन्दा विशेष रूपले भव्य छ । वि. सं. १६२० माघमा[1] राजा महेन्द्रमल्लले यस मन्दिरको निर्माण गराएका हुन् । अरू साधारण मन्दिरभन्दा निकै ठूलो हुनाले ठ्यासफूहरूमा यस मदिन्रलाई तव देवर (ठूलो देवल) भन्ने संज्ञा दिइएको छ । नेपाली वास्तुकलाको इतिहासमा यस मन्दिरको महत्त्वपूर्ण स्थान छ ।

तलेजुदेवीसंग सम्बद्ध अनेकन् लोककथा छन् । तिनमध्ये एउटा लोककथा यस प्रकारको छ–

"मिथिलाका राजाहरू तलेजुदेवीका भक्त थिए । एक दिन त्यहाँका राजा हरसिंहदेवलाई सपनामा दिल्लीका बादशाहले त्यस राज्यमा हमला गर्नेछ भन्ने कुराको संकेत मिल्यो । सपनामा आएर तलेजुदेवीले ती राजालाई "मलाई अब यहाँ नराख, म्लेच्छहरूले यहाँ आई उपद्रव गर्लान्, नेपालउपत्यकामा भक्तपुर भन्ने सुरक्षित ठाउँ छ,मलाई त्यहीं लगेर राख" भन्ने आज्ञा दिइन् । देवीको यो स्वप्नवचन शिरोपर गरी राजाले भोलिपल्ट बिहान सबेरै उठी तलेजुको प्रतिमा बोकी सपरिवार नेपालउपत्यकातिर लागे । देवीको प्रभावले उनले नेपालउपत्यकाका राजालाई सजिलैसंग जिते । त्यसपछि उनले तलेजुदेवीको आज्ञाबमोजिम भक्तपुर शहरमा तलेजुदेवीको स्थापना गरी त्यहीं शहरलाई राजधानी गरी राजकाज चलाए । त्यसै वेलादेखि नेपालउपत्यकामा हरसिंहदेवका वंशजहरूको राज चल्यो ।"

यो कथा निकै चाखलाग्दो छ तापनि यसमा सत्यको मात्रा कम छ भन्ने कुरो इतिहासकारहरूले पत्ता लाएका छन् । वास्तवमा हरसिंहदेवले नेपालउपत्यकामा आई राजकाज गरेका थिएनन् । गयासुद्दीन तुगलकको सैन्यदेखि पराजित भएर हरसिंहदेव आफ्ना सहचरहरूसहित नेपालको पहाडी भागमा पसेका थिए । दोलखातिर आउँदा तीनपाटन भन्ने ठाउँमा वि. सं. १३८२ माघमा उनको मृत्यु भएको थियो । हरसिंहदेव पहाडतिर आउँदा नेपालउपत्यकामा अरिमल्ल र

१. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष ४ अंक ३० पृ,; "सम्वत् ६८४ माघकृष्ण ।। दशमी कुन्हु तवदेवर प्रतिष्ठा याङा दिन जुरो ।।" भक्तपुर ञ्लाछें टोलमा वस्ने एकजना व्यक्तिको संग्रहमा रहेको हस्तलिखित ग्रन्थमा यस विषयमा यस्तो लेखिएको छ– "संम्वत् ६८४ माघवदि १० ञाँदेशया तवदेवल प्रतिष्ठा दिन लुपोल गजुलि." (ऐश्वर्य धर शर्माको सौजन्यबाट मैले यो उद्धरण पाएको हुँ ।)

रुद्रमल्लको संयुक्त शासन चलिरहेको थियो । नेपालको पहाडी भागमा उनी आउनाले नेपाल उपत्यकाको शासनव्यवस्थामा केही पनि परिवर्तन भएको थिएन[1] । यसरी उपर्युक्त कथामा रहेका धेरैजसा ऐतिहासिक भाग सत्य नदेखिनाले नेपालउपत्यकामा तलेजुदेवी ल्याउने काम राजा हरसिंहदेवले गरेका हुन् भन्ने कुरामा पनि विश्वास गरिहाल्नु उचित देखिंदैन ।

संस्कृतमा लेख्दा तलेजुलाई तुलजा भन्ने चलन छ । राजा प्रतापमल्लको तलेजुको मन्दिर-भित्र रहेको मूर्तिमा कुँदिएको अभिलेखमा तलेजुलाई तुलादेवी भनिएको छ[2] । तराजुबाट उत्पत्ति भएको हुनाले यिनलाई तुलजा भनिएको हो भन्ने अनुश्रुति छ । तुलजादेवीको मन्दिर नेपालमा मात्र होइन दक्षिणी भारतमा हैदराबादमा पर्ने तुलजापुर भन्ने ठाउँ मा पनि पाइन्छ[3] । नेपालमा तलेजुको आगमन कसरी भयो भन्ने कुरो प्रमाणको अभावमा इदमित्थं गरी भन्न सकिंदैन ।

मल्ल राजाहरूको अभिलेखमा तलेजुलाई भवानी, चण्डिका आदि भनी लेखिएको छ । हरेक चतुर्दशीको दिन गरिने चह्रे पूजा तथा पर्वपर्वमा गरिने थापूजा आदि तलेजुका सबै गुप्त पूजाआजा शाक्तसंप्रदायको तान्त्रिक विधिअनुसार संपन्न गरिन्छन् । यताबाट तलेजु शक्तिलाई बुझाउने तान्त्रिक रूप हो भन्ने देखिन्छ । तलेजु मल्ल राजाहरूका इष्टदेवता हुनाले उनीहरूको दरवारमा तलेजुको विशिष्ट सन्मान हुन्थ्यो । हरेक मल्लदरवारमा तलेजुका दुइ थरि मन्दिर बनेका हुन्थे । पाटन, काठमाडौंको मल्लदरवारमा दुवै थरि मन्दिरको अस्तित्व अद्यापि पाइन्छन् । तिनमा एउटा तलैंपिच्छे छाना भएको छुट्टै रहेको नेपाली शैलीको मन्दिर हुन्छ । दोस्रोचाहिं विहार जस्तो गरी बनाइने मूलचोकको दक्षिणी भागमा आगमछेंको रूपमा बनाइएको हुन्छ । आगमछेंको रूपमा बनाइने मन्दिरचाहिं तलेजुभवानीको सामयिक निवासस्थान मात्र हो । दसैंमा अष्टमीदेखि दशमीसम्म मात्र तलेजुको प्रतिमा त्यहाँ ल्याई राखिन्छ तथा विशेष पूजा सम्पन्न गरिन्छ ।

काठमाडौंको तलेजुको ठूलो मन्दिर यन्त्रको आकारमा बनाइएको छ भन्ने अनुश्रुति छ[4] । बीचमा रहेको तलेजुको मूल मन्दिर र त्यसको वरिपरि रहेका कचादेवल (मूलमन्दिरको शाखा-रूपमा बनाइएका सानसाना मन्दिर) हरूको विन्यास यन्त्रकै रूप दिन तत्तत्स्थानमा गरिएको अनुमान हुन्छ । हनूमान्ढोका दरवारभित्र र त्यसको प्राङ्गणमा बनेका सबै देवलहरूमा तलेजुको यो मन्दिर सबभन्दा अग्लो छ । वि. सं. १८८७ मा लिइएको देवलहरूको नापोमा यस मन्दिरको उचाई ८१ हात लेखिएको छ[5] । बाह्र तह पेटीमाथि बनेको तीनछाने यो मन्दिर नेपालका

---

१. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" २३२–२३६ पृ.

२. परिशिष्ट, १५ संख्याको अभिलेख

३. रेग्मी, "मेडियाभल् नेपाल" २ भाग ५६३ पृ.

४. लंसाल, "भाषावंशावली" २ भाग ५८ पृ.

५. परिशिष्ट, मन्दिर चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो)

विशाल मन्दिरमध्ये एक गनिएको छ । हाम्रो यहाँ तलेजुको मन्दिरभन्दा अग्लो घर बनाउनु धार्मिक दृष्टिले उचित मानिंदैनथ्यो । यद्यपि आजभोलि यो कुरा व्यवहारमा आउन छोडिसकेको छ ।

यस मन्दिरको मूलद्वार दक्षिण फर्केको छ । चोकको भूमिदेखि मूलद्वारसम्म पेटीलाई काटेर ढुङ्गाको सिंढी गएको छ । आठ तह जति पेटी नाघेपछि मन्दिरमुनि चारैतिर बनेको खुला कौसीमा पुगिन्छ । सो कौसी पुग्नुभन्दा अगाडि अघि बढी फराकिलो पेटीमा लहरै सानसाना दुइ छाने कचादेवल बनेका छन् । ती जम्मा बाह्रवटा छन् । कौसीभित्र पनि सोही आकारका सानसाना मन्दिर चार कुनामा चारवटा खडा छन् । यी मन्दिर आकारमा निकै साना छन् तापनि तलैपिच्छे छाना भएका नेपाली शैलीका मन्दिरमा हुनुपर्ने सबै अवयव तिनमा देखिन्छन् । चिटिक्क परेका यी सानसाना मन्दिरहरूले तलेजुदेवलको शोभा निकै बढाएका छन् । यी मन्दिरभित्र इन्द्र, वरुण आदि देवताका मूर्ति स्थापना गरिएका छन् । गजूर सुनको छ तथा हरेक गजूरसंगै सुवर्णनिर्मित खड्ग, गदा आदि आयुधहरू राखिएका छन्[1] । एउटा चाखलाग्दो कुरा के छ भने गजूरसंगै राखिएका ती सबै आयुध मूलद्वारको तोरणमा रहेका बहुभुजा तलेजुदेवीको बाहुमा पनि दृष्टिगोचर हुन्छन् । यताबाट ती कचादेवलहरू देवीका प्रत्येक आयुधको प्रतिनिधित्व गर्न बनाइएका हुन् भन्ने देखिन आउँछ ।

कौसीभित्र पस्न चारै दिशामा कौसीको पर्खालमा प्रवेशद्वार बनाइएका छन् । मल्लकालिक मृण्मय कलाको सुन्दर प्रदर्शन ती द्वारको परिधि र तोरणमा गरिएका छन् । गरुडको नागलाई टिपेर लगेको दृश्यबाहेक भयानक जनावरहरूको युद्ध र शिकार एवं बलिष्ठ पहलमानहरूको द्वन्द्वयुद्ध आदि विभिन्न दृश्य ती मृण्मय कलात्मक वस्तुमा देखाइएका छन् ।

दक्षिणतिरको प्रवेशद्वारबाट कौसीमा पस्नेबित्तिकै दायाँ बायाँ दुइटा जलद्रोणी देखा पर्छन् । तिनमध्ये पूर्वपट्टि रहेको जलद्रोणी निकै परिश्रमपूर्वक बनाइएको देखिन्छ । ह्वात्त हेर्दा ढुङ्गे मन्दिर जस्तो देखिने त्यस जलद्रोणीको पानी निस्कने टुटोमुनि शिवपार्वतीको मूर्ति अङ्कित छ । त्यसको दायाँ बायाँ केही पर पृथक् पृथक् शिलामा भगीरथ र गङ्गाको मूर्ति पनि त्यहाँ कुँदिएका छन् ।

कौसीमाथि फेरि तह तह पेटी शुरू हुन्छ । सिंढीको दायाँ बायाँ पेटीको प्रत्येक तहमा सिंह, चञ्चु भएको विकराल जनावर तथा ढाल तरवार लिएका द्वारपालका प्रस्तरनिर्मित मूर्ति लहरै राखिएका छन् । सबभन्दा माथिल्लो पेटीमा मन्दिरको मूलद्वार सामुन्ने दायाँ बायाँ राजकुमार चक्रवर्तीन्द्र मल्लले तुलादान गरी राखेका दुइटा[2] प्रस्तरस्तम्भ र धातुनिर्मित ध्वजा छन् । यसको

---

१. तिनमा कुनै कुनै आजभोलि हराइसकेका छन् ।

२. परिशिष्ट, २७, २८ संख्याका अभिलेख

संगसंगै अगलबगलमा दुइटा ठूलठूला घण्टा छन् । तिनमध्ये दायाँपट्टिको वि. सं. १७१० मार्गमा राजा प्रतापमल्लले स्थापना गरेका हुन्[1] । दोस्रोचाहिं राजा भास्करमल्लले वि. सं. १७७१ आश्विनमा बनाउन लगाएका हुन्[2] । यी दुवै घण्टा तलेजुदेवीको पूजा गर्दा बनाउनाको लागि देवीलाई चढाइएका हुन् । मन्दिरको यही तहमा कुनाकुनामा सानसाना प्रस्तरस्तम्भ गाडिएका छन् । मोहनचोकको घरका धुरीमा राखिएका स्तम्भमा जस्तै ती स्तम्भमाथि पनि हनूमान् गरुड, माछा तथा सिंहको धातुनिर्मित मूर्ति राखिएका छन् । मोहनचोकका ती प्रस्तरस्तम्भ राजा प्रतापमल्लले राख्न लगाएका हुन् । मूर्तिकलाको दृष्टिले मोहनचोकका स्तम्भमाथि रहेका ती मूर्तिसंग यी मूर्ति मेल खाने हुनाले यी पनि राजा प्रतापमल्लकै कीर्ति हुन् कि भन्ने अनुमान हुन्छ ।

उपर्युक्त प्रत्येक प्रस्तरस्तम्भसंगसंगै धातुनिर्मित ध्वजा खडा छन् । नेपालको राष्ट्रिय झण्डाको आकारप्रकारसंग मिल्दाजुल्दा ती ध्वजा नेपाली इतिहासको प्रारम्भदेखि नै प्रचलनमा आइसकेको देखिन्छ । लिच्छविकालका मुद्रामा पनि यस्तै ध्वजा अङ्कित गरिएको हामी पाउँछौं[3] ।

मन्दिरको विशालतालाई सुहाउने गरी यसमा प्रयोग गरिएका झ्याल ढोका टुँडाल आदि सबै अवयव निकै ठूलठूला छन् । दुइ तह गारो हाली बनाइने तदेवल भनिने मन्दिरको शैलीमा यस मन्दिरको निर्माण गरिएको छ । मन्दिरको चारै दिशामा तीनमुखे प्रवेशद्वार बनेका छन् । दक्षिणाभिमुख मूलद्वार कलापूर्ण सुनका खापा तथा तोरण आदिद्वारा विशेष अलंकृत छ । बाहिर दरवारको प्राङ्गणबाट टड्कारो देखिने हुनाले मन्दिरको पश्चिमपट्टिको भागमा प्रवेशद्वार मात्र होइन टुँडालहरूसमेत सुवर्णपट्टद्वारा मोडिएका छन् । बांकी अरू भागमा तोरण र खापा मात्र धातुनिर्मित छ । हरेक तोरणको मध्यभागमा भिन्नाभिन्नै देवताका मूर्ति अङ्कित गरिएका छन् । दक्षिणाभिमुख मूलद्वारको तोरणमा तलेजुभवानीको मूर्ति राखिएको छ । यसै गरी अरू द्वारको तोरणमा पनि महिषमर्दिनी भगवती आदि शाक्तसंप्रदायका देवीका मूर्ति स्थापना गरिएका छन् । प्रत्येक द्वारका चौकोस आदि अवयव निकै कलापूर्ण छन् । तिनमा पूर्णकलश, मकर, नाग आदिको आकृति बडो सुन्दर ढङ्गले कुँदिएका छन् । तीनमुखे मूलद्वारको दायाँ बायाँ रहेका खोल्नु नहुने ढोका राजा प्रतापमल्लले वि. सं. १७२८ पौषमा राख्न लगाएका विशाल सुवर्णपत्राभिलेखले टम्म छोपिएका छन्[4] । ती सुवर्णपत्राभिलेखमा राजा प्रतापमल्लले आफैंले बनाएको तलेजुभवानीको स्तुति लेखिएको छ । बीचको ढोकामा प्रयोग गरिएका सुनका दुइ खापा पनि राजा प्रतापमल्लकै कृति हुन् । वि. सं. १७२७ माघमा बनाइएका[5] ती दुइ कलापूर्ण खापाको संपूर्ण भागमा महाकाल,

---

१. परिशिष्ट, २१ संख्याको अभिलेख

२. परिशिष्ट, ५६ संख्याको अभिलेख

३. सत्यमोहन जोशी, "नेपाली राष्ट्रिय मुद्रा" (काठमाडौं, जगदम्बाप्रकाशन वि.सं. २०१६) ५३ पृ. तथा त्यस ग्रन्थको परिशिष्ट ५ पृ.

४. परिशिष्ट, ३५, ३६ का अभिलेख

५. परिशिष्ट, ३२ संख्याको अभिलेख

गणेश, शिवपार्वती आदि देवदेवीका सानसाना मूर्ति तथा मसानमा दाहसंस्कार गरिरहेको, यमदूत अगाडि उभिरहेको आदि विभिन्न दृश्य प्रस्तुत गरिएका छन् । ती खापामा अङ्कित प्रतापमल्लको अभिलेखमा विभिन्न शास्त्रको अध्ययन गरी उनले ती खापामा रहेका आकृति बनाउन लगाएको कुरो लेखिएको छ ।

मन्दिरको टुँडालमा चारैतिर शाक्तसंप्रदायका देवीहरूको मूर्ति कुँदिएका छन् । टुँडालमुनि कतै कतै दम्पतिको सौम्य प्रेमप्रदर्शन पनि देखाइएको छ । तर माजुदेवल तथा जगन्नाथको मन्दिर-मा जस्तै यस मन्दिरमा कुनै कामकेलिका दृश्य देखाइएका छैनन् । मन्दिरको पश्चिमोत्तर कुनामा रहेको एउटा कुँसलमा मात्र सर्वाङ्ग नाङ्गो एक युवतीले कुँसलको लिङ्ग आलिङ्गन गरि-रहेको दृश्य देखाइएको छ ।

मन्दिरका सबै छाना तामाका छन् । छानाको किनारामा चारैतिर घण्टा झुण्ड्याइएका छन् । हावाको झोक्कामा ती घण्टा हल्लिरहन्छन् तथा सुमधुर आवाज निकालिरहन्छन् ।

पहिलो तहको छानामुनि चारैतिर आँखिझ्यालको पर्दा हालिएको छ । दोस्रो तथा तेस्रो छानामुनि भने टुँडाल मात्र छन् । यसैले छानामुनिको भाग खुला छ । पहिलो र दोस्रो तहको छानाको चार कुनामा धातुनिर्मित पट्टिका लट्काइएका छन् । मन्दिरको छानाको कुनामा प्रयोग गरिने त्यस्ता पट्टिकालाई हाम्रो यहाँ धजा भन्ने चलन छ । ती धजामा शिव, गणेश आदि देवताको मूर्ति अङ्कित छन् । सबभन्दा माथिल्लो छानाको कुनामा भने धजाको सट्टा सुराही जस्तो देखिने लामो आकारका कलश झुण्ड्याइएका छन् ।

मन्दिरको टुप्पामा पाँचवटा सुनका गजूर छन् । चारकुनामा रहेका चार गजूर केही साना छन् । बीचको गजूरचाहिँ तीभन्दा निकै ठूलो छ । बीचको गजूरमाथि सुनैको सुन्दर छत्र छ । यी सबै मिलेर मन्दिरको शिखरभाग बनेको छ ।

वि. सं. १९९० को भूकम्पमा यस मन्दिरको माथिल्लो तल्ला पूर्णतया भत्केको थियो तथा देवलका अरू भाग पनि छिन्नभिन्न भएको थियो । वि. सं. १९९६ मा यसको जीर्णोद्धार गरिएको थियो । यस मन्दिरको वर्तमान रूप यसै बेलादेखि बन्यो[1] ।

## दसैँ घर

मूलचोकको पूर्वी लङ्मा रहेको प्रवेशद्वारभित्र पसेपछि एउटा सानो चोक आउँछ । त्यस चोकको मध्यभागमा ठूलो इनार छ । त्यस इनारको सामुन्ने दक्षिणपट्टि दसैँ घर रहेको छ । इवाट्ट हेर्दा सिमेन्ट लेप गरिएको आधुनिक भवन जस्तो यो देखिन्छ । त्यस भवनको भुइँतलामाथि कौसी

१. मोहिनीविनोद शर्माको वंशावलीको आधारमा

छ। कौसीमाथि गुम्बजशैलीको मन्दिर बनाइएको छ। यस भवनको भुइँतलामा महारानी सुवर्णप्रभादेवीले वि. सं. १८५६ मा दसैंघरको देवतालाई चढाएको सानो घण्ट छ[1]। मल्लकालिक अभिलेख यहां पाइएको छैन। मल्लकालमा दसैंलाई मोहनी भनिने हुनाले यो दसैंघर शाहकालमा मात्र बनेको प्रतीत हुन्छ। गोरखाको राजदरबारमा पनि दसैंघर बनेको छ। तर नेपाल-उपत्यकाका अरू मल्लदरबारमा दसैंघरको अस्तित्व देखिएको छैन।

यस मन्दिरमा दसैंमा विशेष पूजाआजा हुने हुनाले यसको नाम दसैंघर भन्ने रहन गएको हो। बडा दसैंमा राजदरबारको निमित्त यसै दसैंघरमा जमरा राखिन्छ तथा चैतदसैं र बडा दसैंमा घटस्थापनाको विधिविधान सम्पन्न गरिन्छ।

## नागपोखरी

दसैंघरकै सामुन्ने एउटा पोखरी छ। नागपोखरी भनी प्रसिद्ध त्यस पोखरीको बीचमा काष्ठमय स्तम्भमाथि सुनको नागको फणा बनाइएको छ। मल्लकालमा यसरी पोखरीको बीचमा फणायुक्त नागस्तम्भ हाल्ने चलन खूबै लोकप्रिय भएको थियो। त्यस्ता नागपोखरीहरू अद्यापि ठाउँठाउँमा देखिन्छन्।

हनूमान्‌ढोकाको यो नागपोखरी उठानमा निकै आकर्षक ढङ्गले बनाइएको थियो भन्ने प्रतीत हुन्छ। पोखरीमा ओर्लने सिंढीनिर दायां बायां प्रस्तरका दुइ हात्ती राखिएका छन् तथा पोखरीमा सबैतिर तेलिया ईंट छापिएका छन्। पोखरीको बीचमा राखिएको नाग पनि स्तम्भको वरिपरि सुनको पाताले मोडेर फणा उठाइरहेको सुनौला नागको रूपमा बनाइएको थियो भन्ने देखिन्छ। तर आजभोलि नागको फणा मात्र सुनको छ। धारिला दुइ जिब्रा निकालिरहेका नागको त्यस फणामाथि सानो सुनको चरो बसेको छ। उसमाथि सुनैको छत्र छ। नागको फणामुनि रहेको सुनको सानो सांढे पनि त्यत्तिकै आकर्षक छ।

नागपोखरीको त्यस नागले केही रोचक ऐतिहासिक घटनाको संज्ञना गराइरहेको छ। नागको सो प्रतिमा प्रारम्भदेखि नै त्यस पोखरीमा थिएन। भक्तपुरशहरबाहिर पश्चिमतिर रहेको तवपोखरी भन्ने नागपोखरीमा सो थियो। वि. सं. १६८७ मा भक्तपुरका राजा जगज्ज्योतिर्मल्लले सो नागपोखरी बनाउन लगाएका थिए[2]।

वि. सं. १७२० मा काठमाडौंका राजा प्रतापमल्लले भक्तपुरमा हमला गरेका थिए। शहरी किल्ला मजबूत हुनाले प्रतापमल्ल भक्तपुरशहरभित्र पस्न सकेनन् तापनि शहरबाहिरको

१. परिशिष्ट, ८२ संख्याको अभिलेख

२. भोलानाथ पौडेल, धनवज्र वज्राचार्य, "इतिहास–संशोधन" (काठमाडौं, वि. सं. २०१७ आषाढ) ५१ क्रमागत संख्या १–२ पृ.

इलाकामा उनले अधिकार जमाएका हुनाले त्यहां रहेका कलाकृतिहरू उठाउँदै काठमाडौं लैजाने काम उनले गरे। यसै वेला तवपोखरीमा रहेको नागको सुन्दर प्रतिमामा पनि उनको आंखा लाग्यो र त्यहांबाट उठाएर ल्याई आफ्नो दरवारको पोखरीमा राख्न लगाए[1]। हनूमानढोकाको नागपोखरीमा रहेको यो नागस्तम्भ सोही नागस्तम्भ हो, जसलाई राजा जगज्ज्योतिर्मल्लले आफूले बनाएको भक्तपुरको तवपोखरीमा राखेका थिए।

यसको चौध वर्षपछि वि. सं. १७३४ मा जगज्ज्योतिर्मल्लका पनाति जितामित्रमल्लले तवपोखरीको जीर्णोद्धार गरी त्यहां फेरि अर्को नागको प्रतिमा स्थापना गरे[2]। त्यसवेला काठमाडौंमा प्रतापमल्लका छोरा नृपेन्द्रमल्ल राजगद्दीमा थिए। भक्तपुर काठमाडौंको परस्परमा मेल थियो। यसैले त्यस पोखरीको जीर्णोद्धार गरी प्रतिष्ठा गर्दा राजा नृपेन्द्रमल्ल पनि त्यहां निमन्त्रित थिए। यिनै ऐतिहासिक घटनाको स्मारकको रूपमा नागपोखरीको यो नाग हाम्रो अगाडि खडा छ।

## भँडारखाल

प्राचीन दरवारको पृष्ठभागमा रहेको बगैंचालाई भँडारखाल भन्ने चलन छ। मल्ल राजदरवारको यो एक अभिन्न अङ्ग हुनाले नेपालउपत्यकाका तीनै मल्लराजदरवारमा भँडारखाल बनेका छन्। राजदरवारमा भँडारखाल बनाउने एक प्राचीन परम्परा थियो। ती तीन मल्ल राजदरवारभन्दा पुराना राजदरवारमा पनि भँडारखाल बनेका हुन्थे। देउपाटनमा जयवागीश्वरीको मन्दिरनजीकै दक्षिणतिर रहेको भँडारखाल बगैंचा एउटा प्राचीन राजदरवारको एक अंश थियो भन्ने देखिएको छ। जयवागीश्वरीको आसपासमा रहेको ठाउँ उहिले एन्दल भन्ने नामले प्रसिद्ध थियो[3]। गोपालराजवंशावलीको वर्णनबाट प्राचीन मल्लकालमा त्यस ठाउँमा एक महत्त्वपूर्ण राजदरवार बनेको थियो भन्ने बुझिएको छ। त्यहां प्राचीन मल्ल राजाहरूको राज्याभिषेकसमारोह संपन्न गरिन्थे[4]। आजभोलि त्यस ठाउँमा प्राचीन राजदरवारको कुनै

---

१. सोही, ११ पृ.

२. सोही, ४–८ पृ.

३. देउपाटनको एउटा पाटीमा रहेको शिलालेखमा स्थानपरिचय दिंदा "सम्वत् ७७८ जेष्ठशुक्ल ८ वृहस्पतिवासरे श्री थथुगोला एन्दल राछे तोर" भनी लेखिएको। त्यस शिलालेखको प्रतिलिपि राष्ट्रिय अभिलेखालयमा सुरक्षित छ।

४. गोपालराजवंशावली ३७ ख, ३९ ख, ४४ क पत्र
"सं. ३७६ थ्वया सम्वछ्र श्रावणशुक्ल द्वादशी श्रीजयदेवराजसवं एन्दलसं पटावन्ध"
"स. ३७७ मार्गशिर पूर्णिमा. . . .श्रीजयदेव राजास ग्वल्वं राजलखुंस मनसर पटबन्ध"
"स. ४४० चैत्र कृष्ण द्वादशी ग्वलसं श्रीजयारिमलस अभिसेष दिन: ।। "

भग्नावशेष देखापर्दैन तापनि त्यहाँ तलेजुको मन्दिर अद्यापि छँदैछ[1] । दिन प्रतिदिन तलेजुको पूजा आजा आजभोलि पनि त्यहाँ चलिरहेको छ । यसरी जगवागीश्वरीको नगीचै एन्दल भन्ने ठाउँमा प्राचीन मल्लकालमा एउटा राजदरवार बनेको थियो भन्ने देखिएको हुनाले त्यस ठाउँको नगीचै रहेको भँडारखाल सोही प्राचीन दरवारको बगैंचा हो भन्ने कुरो स्पष्ट हुन आएको छ । यताबाट भँडारखाल बनाउने प्राचीन परम्पराको बोध हुन्छ ।

आजभोलि भँडारखालको काम साधारण खेतबारीको भन्दा विशेष देखिँदैन तापनि उहिले यसको महत्त्व बेग्लै थियो । यस विषयमा विचार गरी हेर्दा प्राचीन कालमा भँडारखाल साधारण खेतबारी मात्र नभएर सुरक्षित राजकीय भँडारको रूपमा रहेको हुन्थ्यो भन्ने कुरा बुझिएको छ । प्राचीन वास्तुशास्त्रसम्बन्धी संस्कृत ग्रन्थबाट यो कुरो बुझ्न मद्दत मिल्छ । ती ग्रन्थमा राजकीय भँडार बनाउने कुरा लेखिएको पाइन्छ । देश्य तथा पौर भनी प्रसिद्ध दुइ किसिमका भाण्डागार (राजकीय भँडार) बनाउने विधि त्यहाँ दिइएका छन् । त्यस विधिअनुसार पहिलो किसिमको राजकोश जमीनमुनि जतनपूर्वक खाडल खनेर बनाइएको हुन्थ्यो, दोस्रोचाहिँ विशेष प्रकारको भवनभित्र रहेको हुन्थ्यो[2] । जमीनमुनि बनाइने राजकोशको काम भँडारखालले गर्दथ्यो । 'भँडारखाल' यो शब्द संस्कृत भाण्डागार शब्दकै अपभ्रंश हो भन्ने देखिएको छ ।

ह्वाट्ट हेर्दा जमीनमुनि खाडल खनेर भँडार बनाउनु त्यति साह्रो आवश्यक कुरो देखिँदैन । परन्तु राजदरवारमा भण्डारखालको रूपमा राजकोश बनाउने प्रथा लोकप्रिय हुनामा ऐतिहासिक हेतु थियो । मुख्यतया बाह्य आक्रमणबाट राजकोशको सुरक्षाको लागि यो विधि अपनाइन्थ्यो । खस तिरहुतिया तथा मुसलमानहरूको आकस्मिक आक्रमण भइरहने युगमा राजा प्रजा सबै आफ्नो

---

१. जयवागीश्वरी मन्दिरको पूर्वदक्षिण कुनामा तलेजुमन्दिर रहेको छ ।

२. डि. एन्. शुक्ल डि. लिट्, 'वास्तुशास्त्र, हिन्दु साइन्स अफ् आर्किटेक्चर्" (लखनौ, वास्तु-वाङमयप्रकाशनमाला वि. २०१७) परिशिष्ट १९१–१९२ पृ.

"धनं सम्पादयेद्धीमान् लोकरक्षणकारणम् ।
धनसंरक्षिणी शाला भाण्डागारमितीरिता ।।
तां शालां स्थपतिश्रेष्ठः स्थापयेल्लक्षणान्विताम् ।
देश्या पौरेति सा शाला द्विविधा कथिता बुधैः ।।
देश्या सदुर्गा सालिन्दा द्वारोपद्वारमेदुरा ।
प्राकारत्रयसंवीता भित्तिसप्तकसंवृता ।।
भूम्यां भूगर्भसंयुक्ता सप्तसोपानसंयुता ।
चतुरश्रा पार्श्वभागे देवीनां स्थानकैर्युता ।।
प्रकल्प्या स्थपतिश्रेष्ठैश्शुभकाले विशेषतः ।
पौरन्तु कोशसदनं प्रासादान्तर्गतन्तु वा ।।"

धनसंपत्ति कतै भुईंमा गाडेर जङ्गल पस्ने गर्दथे[1] । प्राचीन मल्लकालमा यस्ता घटना धेरै पटक घटेका थिए[2] । पछिल्लो मल्लकालमा पनि परस्परमा आक्रमण प्रत्याक्रमण भइनैरहन्थे । यस्तो परिस्थितिमा अरू किसिमको राजकोशभन्दा जमीनमुनि बनाइने राजकोशको बढी महत्त्व हुनु स्वाभाविक थियो । यसैले राजदरवारमा भँडारखाल बनाउनु प्राचीन परम्परा मात्र नभएर एक आवश्यक कुरो पनि थियो ।

जमीनमुनि खाडल खनेर धनसंपत्तिको सुरक्षा गर्ने चलन काठमाडौंका अन्तिम मल्ल राजा जयप्रकाशको समयसम्म पनि कायम थियो । त्यसताका काठमाडौंमा आएका केपुचिन पादरी जिजेपले राजा जयप्रकाशले सिपाहीहरूलाई जागीर दिन पैसाको अभाव हुँदा जमीनमुनि भित्रसम्म खाडल खनेर पूर्वसञ्चित धन झिकेको कुरा लेखेका छन् । उनले त्यस वर्णनमा "त्यस्ता खाडलभित्र सुन चाँदी जवाहिरात आदि बहुमूल्य पदार्थ सञ्चित गरिएका हुन्छन् । नेपालमा दुइ तीन ठाउँमा यस्ता गाडधन छन् । राजाबाहेक अरू कसैले ती झिक्न पाउँदैनन् भन्ने" कुराको चर्चा गरेका छन्[3] । भँडारखालमा राजकीय सम्पत्तिको सुरक्षा गर्ने चलन अद्यापि पूर्णतया

---

१. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" १४८ पृ. "पश्चात्खशिया ववः । राजा जयतारिः प्रथम प्रविष्ट सम्वच्छर चारि सय आठ पौषमासे. . . .राष्ट्र सर्वं वने सेवितम्, खशिया तेन पलायितम् लोक स्वस्थेन स्वस्थानस्थितम् ।" एउटा प्रसिद्ध किंवदन्ती-अनुसार पाल्पाका राजा मुकुन्दसेनले नेपालउपत्यकामा आक्रमण गर्दा यहाँका सबै बासिन्दाहरू धान, मूला आदि सबै पदार्थ भुईंभित्र लुकाएर वनभित्र लुक्न गए, पछि फर्केर आउँदा उनीहरूले भुईंमा गाडेर गएको धान र मूला हकुवा धान र सिन्कीको रूपमा परिणत भइरहेको देखे, त्यसै वेलादेखि नेपालउपत्यकाका बासिन्दाहरूले हकुवा चामल र सिन्की बनाउन जाने । यस किंवदन्तीमा उल्लिखित मुकुन्दसेनको आक्रमण ऐतिहासिक सामग्रीहरूबाट सिद्ध भएको छैन तापनि सम्पत्ति भुईंमा गाडेर वन पस्ने चलनको स्मरण यसले गराएको छ ।

२. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" ६२–६५ पृ.; धनवज्र वज्राचार्य "कर्नालीप्रदेशको इतिहासको एक झलक" पूर्णिमा (वि. सं. २०२२ श्रावण) २ वर्ष अंक २२–२६ पृ., वज्राचार्य "डोयहरू को हुन् ?" पूर्णिमा १ वर्ष ४ अंक २६–२९ पृ.

३. एशियाटिक रिसर्चेज् (दोस्रो भाग) २४४–२४५ पृ.;
"...They also have it on tradition, that at two or three places in Nepal, valuable treasures are concealed under ground. One of those places they believe is Tolu, but no one is permitted to make use of them exept the King, and that only in cases of necessity. Those treasures, they say, have been accumulated in this manner: When any temPle had become very rich from the offerings of the people it was destroyed and deep voults dug under ground, one above another, in which the gold,

लुप्त भइसकेको छैन । हनूमान्ढोकाको भँडारखालमा रहेको राजकीय ढुकुटीले यस कुराको संज्ञना गराउँछ ।

हनूमान्ढोका दरवारको भँडारखालको क्षेत्र प्रारम्भमा निकै ठूलो थियो । वि. सं. १९९० को महाभूकम्पपछि तयार गरिएका जुद्धसडक, भूगोलपार्क र आजभोलि बनेको नेपाल बैंक लिमिटेडको भवन रहेको ठाउँभन्दा परसम्मको क्षेत्र भँडारखालभित्र पर्दथ्यो । चौबाटोमा रहेको जुद्धसम्शेरको सालिकको पूर्वोत्तर कुनामा रहेको भगवतीको मन्दिर पनि भँडारखालभित्र रहेको थियो । आजभोलि पनि त्यस मन्दिरलाई भँडारखाल भगवतीको देवल भन्ने चलन हराइसकेको छैन । भँडारखालको यो विशाल रूप देख्ने मानिसहरू काठमाडौंमा प्रशस्त छन् । महाभूकम्प-भन्दा अघि धरोहराबाट खिचिएको काठमाडौंको चित्रबाट पनि यो कुरो बुझ्न मद्दत मिल्छ[1] ।

यस भँडारखालको एक छेउमा एउटा ठूलो पोखरी छ । त्यस पोखरीको बीचमा जलशायी विष्णुको विशाल मूर्ति विराजमान छ । वंशावलीहरूअनुसार राजा प्रतापमल्लले कालीयदमनको मूर्ति जस्तै गरी यो जलशायी मूर्ति पनि ज्ञानेश्वरनजीकको एउटा पोखरीबाट उठाएर ल्याएका थिए । पहिले त राजा प्रतापमल्लले आफ्नो दरवारको भँडारखालको पोखरीमा बूढानीलकण्ठको जल-शयन नारायण जस्तो मूर्ति आफैंले बनाउन लगाई स्थापना गर्ने विचार गरेका थिए । त्यसो गर्न बूढानीलकण्ठको जलशयन नारायणसंग अनुमति माग्दा नयाँ मूर्ति नबनाउनू, ज्ञानेश्वरको पोखरीमा रहेको जलशयन नारायणको मूर्ति ल्याएर राख्नू भनी सपनामा दैवी आज्ञा भएको हुनाले राजा प्रतापमल्लले सोही आज्ञाबमोजिम यो काम गरेका थिए भन्ने कुरा वंशावलीहरूमा लेखिएको छ[2] ।

नेपालउपत्यकामा हनूमान्ढोकाको यो मूर्तिबाहेक अरू दुइटा विशाल जलशायी मूर्तिहरू

---

silver, gilt, copper, jewels and every thing of value were deposited. When I was in Nepal, Gainprejas (जयप्रकाश), King of Cat'hmandu (काठमाडौं), being in the utmost distress for money to pay his troops, in order to support himself againts Prithwinarayan, ordered search to be made for the treasures of Tolu; and, having dug to considerable depth under ground, they came to first volt, from which his people took to the value of a lac of rupees in gilt copper, with which Gainprejas paid his troops...The people of Gainprejas had not completely emptied the first voult, when the army of Prithwinarayan arrived at Tolu, possesed themselves of the place where the treasure was deposited and closed the door of the voult..."

१. त्यस्तो एउटा चित्र मेरो संग्रहमा छ ।

२. राइट, "हिस्ट्री अफ् नेपाल" दोस्रो संस्करण १२९ पृ.

देखिएका छन् । तिनमा पहिलो बूढानीलकण्ठ र दोस्रो बालाजुको जलशयन मूर्ति हुन् । नेपाली मूर्तिकलाको इतिहासमा यी तीनै जलशायी मूर्तिको विशिष्ट स्थान रहेको छ ।

बूढानीलकण्ठको जलशायी मूर्ति विक्रमको सातौं शताब्दीको अन्त्यतिर राजा विष्णुगुप्तले बनाउन लगाएका थिए । सो मूर्ति बनाउन उपयुक्त विशाल प्रस्तर धेरै टाढादेखि बोकाएर ल्याएकोमा प्रसन्न भएर विष्णुगुप्तले सो काम गर्नेहरूलाई त्यस बेला शासकवर्गले लाउने केयूर, नूपुर आदि गहनाबाहेक अरू प्रमुख गहना लाउने अधिकार दिएका थिए । यो कुरा तात्कालिक अभिलेख र प्राचीन वंशावलीबाट ज्ञात हुन्छ [1] ।

बालाज्यूको जलशायी मूर्ति बूढानीलकण्ठको अनुकरणमा राजा प्रतापमल्लले बनाउन लगाएका थिए भन्ने अनुश्रुति छ । परन्तु कलाको दृष्टिले विचार गरी हेर्दा बालाज्यूको सो मूर्ति बूढानीलकण्ठ बनेकै समयतिर निर्माण गरिएको थियो भन्ने देखिएको छ । यी दुइ मूर्तिका रचना-शैली मिल्दाजुल्दा छन्, तर प्रतापमल्लको समयमा बनेका प्रस्तरमूर्ति र बालाज्यूको त्यस मूर्तिको तुलना गरी हेर्दा निकै भिन्नता पाइन्छ । अनि अर्को ध्यान दिनुपर्ने कुरो के छ भने बालाज्यूको सो मूर्ति बूढानीलकण्ठको अनुकृति पनि होइन । बूढानीलकण्ठको जलशयनले हातमा शंख चक्र गदा र पद्मबीज लिएका छन् । बालाज्यूको जलशायी मूर्तिले भने अक्षमाला तुम्बी शंख र पद्मबीज हातमा लिएका छन् । यसैले बालाज्यूको मूर्ति नारायणको मूर्ति नभएर जलशायी हरिहरको मूर्ति हो भन्ने बुझिएको छ । केही वर्षअगाडि गरिएको अन्वेषणकार्यको सिलसिलामा यी कुरा प्रकाशमा आएका हुन्[2] ।

विष्णुगुप्तको समयमा उपर्युक्त दुइ जलशयन मूर्ति बन्नुभन्दा अघि नै नेपालउपत्यकामा एउटा जलशायी मूर्ति निर्माण भइसकेको थियो । भुम्भुक्किकाजलशयन भन्ने नामले सो प्रसिद्ध थियो । अंशुवर्माको हाँडिगाउँको अभिलेखमा यसको उल्लेख आएको छ[3] । लिच्छवि अभिलेख-बाट भुम्भुक्किका जलशयनको विशेष परिचय नपाइने हुनाले यो कहाँ स्थापना गरिएको थियो भन्ने कुराको टुङ्गो लागेको छैन । परन्तु नेपालउपत्यकामा रहेका तीन जलशायी मूर्तिमध्ये बूढानीलकण्ठ र बालाज्यूको जलशायी मूर्ति विष्णुगुप्तको समयमा बनेका हुन् भन्ने कुराको पत्ता लागेको हुनाले ज्ञानेश्वरबाट हनूमान्ढोकामा ल्याइएको जलशयन विष्णुको मूर्ति नै भुम्भुक्किका जलशयन हो कि भन्ने अनुमान हुन्छ । यस विषयमा विशेष अन्वेषणकार्य हुनु बाँकी नै छ ।

आजभोलि हनूमान्ढोकाको जलशयन विष्णु प्रायः पोखरीको पानीले छोपिएर रहेको हुन्छ । सुक्खा मौसममा मात्र त्यसको केही भाग देख्न पाइन्छ । बूढानीलकण्ठको जलशयन मूर्ति-

---

१. गौतमवज्र, "प्राचीन मूर्तिकलाको विषयमा" पूर्णिमा (वि. सं. २०२१ कार्तिक) १ वर्ष ३ अंक १५–१६ पृ.

२. श्लसर, वज्राचार्य, "सम् नेपालीज् स्टोन स्कल्प्चरस्" आर्टिबस् एशिया ३५ वर्ष १-२ अंक

३. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३२०–३२१ पृ.

संग यो मूर्ति केही मिल्दोजुल्दो छ। बटारिएको सर्पकुण्डलीमाथि आनन्दपूर्वक पल्टिरहेको भगवान् विष्णुको यो मूर्ति निकै भव्य छ। विष्णुले माथिल्लो दुइ हातमा चक्र र गदा लिएका र तलका दुइ हातमा पद्मबीज र शंख लिएका छन्। बालाज्यू र बूढानीलकण्ठको जलशयन मूर्तिमा जस्तै यस मूर्तिमा पनि भगवान् विष्णु एउटा गोडामाथि अर्को गोडा राखी शान्तिपूर्वक सुतिरहेका छन्। विष्णुको अनुपात मिलेको शरीरले लिच्छविकालिक मूर्तिकलाको विशेषता देखाइरहेको छ। फराकिलो छाती, पुष्ट बाहु, कस्सिएको बाटुलो कम्मर, थाम जस्ता बलिष्ठ तिघ्राद्वारा विष्णुको यौवनोचित शरीरको प्रदर्शन गरिएको छ।

यस विष्णुमूर्तिको अगाडि गरुडको सुन्दर मूर्ति रहेको छ। लिच्छविकालिक मूर्तिकलाको भव्य रूप त्यस मूर्तिमा देख्न पाइन्छ। गरुडको सो मूर्ति पनि राजा प्रतापमल्लले ज्ञानेश्वरबाट जलशयन विष्णुको मूर्ति उठाएर ल्याउँदा संगै ल्याएको हुनुपर्दछ। नेपालमा विष्णुको मूर्ति स्थापना गर्दा त्यस मूर्तिको अगाडि गरुडको मनुष्याकार मूर्ति स्थापना गर्ने चलन छ। गरुडको त्यस्तो मूर्ति प्रायः विष्णुमूर्ति स्थापना गर्ने भक्तजनको अनुहारसंग मिल्ने गरी बनाइन्छ। यसैले गरुडको यो मूर्ति पनि जलशयन नारायण स्थापना गर्ने व्यक्तिको प्रतिमा हो कि भन्ने देखिन्छ। गरुडको सुरिलो नाक, लामलामा आँखा, पुष्ट गाला आकर्षक छन्। संभ्रान्त परिवारमा जन्मेको ओजस्वी पुरुषको व्यक्तित्व गरुडको मुखमा झल्कन्छ। यसैले उपर्युक्त जलशायी विष्णुको मूर्ति स्थापना गर्ने लिच्छवि राजाको प्रतिमा यो हो भन्ने अनुमान हुन्छ।

मल्लकालको अन्त्यतिर काठमाडौंमा आएका क्यापुचिन पादरी जिजेपले हनूमान्ढोकाको भँडारखालभित्र रहेको सो जलशयन मूर्ति देखेका थिए। त्यस मूर्तिको भव्य रूप देखेर उनी साह्रै प्रभावित भएका थिए। उनले आफ्नो यात्रावृत्तान्तमा यस विषयमा यस्तो लेखेका छन्: "काठमाडौंमा राजकीय बगैंचाको एक छेउमा एउटा ठूलो पोखरी छ। त्यस पोखरीमा नारायण भन्ने देउताको प्रतिमा छ। सो प्रतिमा नीलो प्रस्तरद्वारा बनेको छ। देवता सुतिरहेको बिछ्यौनाको प्रस्तर र उनको शिरमाथि रहेको प्रस्तर पनि सोही जातको छ। सो प्रतिमा र बिछ्यौना पानीमाथि उत्रिरहेको जस्तो देखिन्छ। यो प्रतिमा ज्यादै ठूलो छ। मेरो विचारमा सो मूर्ति अठाह्र वा बीस फीट लामो तथा सोही अनुपातमा चौडा हुनुपर्छ। सो मूर्ति कलापूर्ण छ तथा राम्रोसंग पुनर्निर्माण गरिएको छ[1]।" जिजेपको यो वर्णन राजा प्रतापमल्लले आफ्नो दरबारमा सो जलशयनको मूर्ति ल्याएको एक शताब्दी जति पछि लेखिएको थियो।

---

१. एशियाटिक रिसर्चेज्, (दोस्रो भाग) २४५–२४६ पृ.; "At Cathmandu. on one side of the royal garden, there is a large fountain, in which is one of their idols, called Narayan. This idol is of blue stone, crowned and sleeping on a mattress of the same kind of stone; and the idol and the mattress appear as floating upon the water. This stone machine is very large: I believe it to be eighteen or twenty feet long, and broad in proportion, but well worked, and in good repair."

जलशयन मूर्ति रहेको पोखरीको उत्तरपट्टि किनारामा एउटा सानो देवल छ । त्यस देवलभित्र गोपिनीसहित कृष्णको काष्ठनिर्मित मूर्ति रहेको छ । तीन हात जति अग्लो सो मूर्ति विक्रमको अठाह्रौं शताब्दीतिर बनेको प्रतीत हुन्छ । यस मूर्तिसंग सम्बद्ध कुनै ऐतिहासिक सामग्री प्राप्त भएको छैन ।

सो सानो कृष्णमन्दिरको पछाडि केही पर गएपछि बारीको डयाङमा त्रिविक्रम वामनको प्रस्तरमूर्ति देखापर्छ । विक्रमको अठाह्रौं शताब्दीतिर बनेको त्यस मूर्तिमा भगवान् विष्णुले वामनको अवतार लिएर बलिराजाकहां गएको तथा अश्वमेध यज्ञ गर्न लागेको बलिराजाले रानी-सहित आएर वामनावतार विष्णुको सत्कार गरेको आदि दृश्य देखाइएको छ । बलिराजाबाट तीन पाइला भूमि दान पाएपछि वामनावतार विष्णुले त्रिविक्रमको रूप लिएर एक पाइला पाताल-मा अर्को पाइला आकाशमा पुऱ्याई बलिराजालाई चकित पारेका थिए । श्रीमद्भागवतमा वर्णित यस कथानकमा आधारित यस मूर्तिको मध्यभागमा गोडा फट्टयाएर उभिरहेका त्रिविक्रमको पातालदेखि आकाशसम्म पुगेको अलौकिक रूप मुख्य दृश्य रूपमा प्रस्तुत गरिएको छ ।

नेपालमा यस्ता त्रिविक्रम वामनका मूर्ति पांच छवटा पाइएका छन् । राजा मानदेवले वि. सं. ५२४ मा सबभन्दा पहिले यस्ता मूर्ति बनाउन लगाएका थिए । एउटै मितिमा उनले स्थापना गरेका दुइटा त्रिविक्रम वामनका मूर्ति प्राप्त भएका छन्[1] । तिनमा पहिलो लाजिम्पाटमा पाइएको हो । हाल सो मूर्ति नेपालको राष्ट्रिय संग्रहालयमा सुरक्षित छ । दोस्रो चाहिं पशुपतिमा वाग्मतीपारि त्रिगङ्गानजीकै खेतमा रहेको छ । हनूमान्ढोकामा रहेको यो त्रिविक्रम वामनको मूर्ति तिनै प्राचीन मूर्तिको अनुकरणमा बनेको देखिन्छ । समय, शैली तथा कलाकुशलताको अन्तरले गर्दा विषयवस्तु एउटै भएर पनि ती दुइ थरी मूर्तिमा निकै भिन्नता दृष्टिगोचर हुन्छ । हनूमान्ढोका-को यस त्रिविक्रम वामनको शिरोभागको पछाडि रहेको प्रभामण्डलमा ज्वाला र विन्दुको प्रयोग गरिएको छ । उपर्युक्त प्राचीन मूर्तिमा यी कुरा छैनन् । ती दुइ थरी मूर्तिको समय र शैलीमा टड्कारो देखिने अन्तर यो हो । योबाहेक मानदेवले बनाउन लगाएका मूर्तिमा प्रतिबिम्बित हुने गतिशीलता तथा भावाभिव्यक्ति हनूमान्ढोकाको मूर्तिमा देखिंदैन तथा प्राचीन मूर्तिमा जस्तो शारीरिक अनुपात पनि त्यसमा त्यति साह्रो मिल्दैन ।

भँडारखालको दक्षिणभागमा नागपोखरीको नजीकै महादेवको सानो मन्दिर छ । वास्तुकलाको दृष्टिले यो मन्दिर निकै भद्दा देखिन्छ । वि. सं. १८८७ मा लिइएको देवलहरूको नापोसम्बन्धी विवरणमा यस मन्दिरको नापो ३० हात अग्लो भनी लेखिएको छ[2] । यस मन्दिर-को अगाडि सानो प्रस्तरस्तम्भ छ । त्यसमाथि साँढेको मूर्ति रहेको छ । मूर्तिकलाको दृष्टिले सो स्तम्भ र मूर्ति महत्त्वपूर्ण देखिंदैन ।

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३४–३५ पृ.

२. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो)

# वसन्तपुरचोक

मूलचोकबाट सोझै दक्षिणतिर तथा नासलचोकको पूर्व दक्षिण कुनामा वसन्तपुरचोक पर्दछ । यस चोकको चारैतिर ढुङ्गा छापिएको र कुनै वेला यस चोकमा तेजारथ अड्डा रहेको हुनाले यस चोकलाई लोंह चोक र तेजारथ चोक पनि भन्दछन् । परन्तु शाहकालमा लेखिएको पुरानो कागतमा यस चोकलाई वसन्तपुरचोक भनी लेखिएको छ[1] । यस कारण यस चोकलाई वसन्तपुरचोक नै भन्नु उचित देखिन्छ ।

यस चोकको चारकुनामा रहेका बुर्जाहरूका नाम वि. सं. १८८७ मा टिपिएको श्रीबखत-मानसिंह बस्नेतको संग्रहमा रहेको एउटा कागतमा दिइएका छन् । त्यस अनुसार आग्नेय कोणको बुर्जालाई विलासमन्दिर, नैऋत्यकोणको बुर्जालाई वसन्तपुर कैलास, वायव्य कोणको बुर्जालाई बङ्गला तथा ईशानकोणको बुर्जालाई लक्ष्मीविलासमन्दिर भनी लेखिएको छ[2] । यी चारै बुर्जाको निर्माण पृथ्वीनारायण शाहले गरेका हुन् भनी त्यहाँ लेखिएको छ ।

वसन्तपुर कैलासको सडकतिर फर्केको दक्षिणी भागको भुईंतलाको भित्तामा र नासल-चोकबाट देखिने उत्तरी भागको मूलद्वारमाथि वि. सं. १८२६ चैतमा राखिएका श्री ५ पृथ्वीनारा-यण शाहका भिन्नाभिन्नै दुइ अभिलेख प्राप्त भएका छन्[3] । नासलचोकतिर फर्केको अभिलेखमा वसन्तपुर दरवार (वसन्त सुहर्म्य) बनाएको कुरो लेखिएको छ । सडकतिर फर्केको अभिलेखमा चाहिं विलासमन्दिर निर्माण गराएको कुराको चर्चा परेको छ । बङ्गला र लक्ष्मीविलासमन्दिर नामक दुइ भवन बनाएको कुराको उल्लेख त्यहाँ गरिएको छैन । भाषावंशावलीमा यस विषयमा केही कुरा परेको छ । राजा श्री ५ पृथ्वीनारायण शाहले बनाएर गएको वसन्तपुर दरवारको बाँकी भाग प्रतापसिंहको पालामा निर्माण गरियो भनी त्यहाँ लेखिएको छ[4] । उपर्युक्त शिलालेख र वंशावलीको आधारमा विचार गरी हेर्दा वसन्तपुर कैलास र विलासमन्दिर श्री ५ पृथ्वीनारायण शाहको समयमा र लक्ष्मीविलास बङ्गला आदि अरू बाँकी भाग प्रतापसिंहको पालामा बनेका देखिन आएका छन् ।

प्रारम्भमा वसन्तपुर भवन र विलासमन्दिर भिन्नाभिन्नै बनेका देखिन्छन् । वसन्तपुर भवनको रचनाशैलीबाट यो कुरो बुझ्न मद्दत मिल्छ । टुँडाल, झ्याल आदि बाहिरबाट देखिने गरी रहनुपर्ने वसन्तपुरभवनका कति अवयव अरू बुर्जासंग जोड्ने भवनले छोपिएका छन् । यसले गर्दा वसन्तपुर भवनका केही टुँडाल र झ्याल कोठाभित्र पर्न गएका छन् ।

---

१. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (दोस्रो)

२. सोही, (पहिलो)

३. परिशिष्ट, ७३, ७४ संख्याका अभिलेख.

४. अप्रकाशित "भाषावंशावली", "अस्य पुत्र सिंहप्रतापसाहा. . .इन राजाले पहिले वावुका पालामा नसिद्धियाको वसन्तपुर सिद्ध गराउन भयो."

यसरी वसन्तपुरचोकको वर्तमान रूप श्री ५ पृथ्वीनारायण र श्री ५ प्रतापसिंहको समयमा बन्यो भन्ने कुरो सिद्ध हुन्छ । परन्तु यससंग सम्बन्ध राख्ने सबै ऐतिहासिक सामग्रीको अध्ययन गरी हेर्दा यस ठाउँको प्राक् रूप मल्ल राजाहरूकै समयमा बनिसकेको थियो भन्ने बुझिएको छ । यस कारण यस विषयमा केही लेख्नु उचित संझेको छु ।

नेपालउपत्यकामा बनेका तीनवटै मल्ल दरवारमा निकै समानता पाइन्छन् भन्ने विषयमा हामीले माथि केही लेखिसकेका छौं । भक्तपुर र काठमाडौंका राजदरवारमा यो कुरो अझ बढी घट्दछ । यी दुइ दरवारमा बनेका अनेकन् चोक र भवनहरूको नाउँ परस्पर मेल खान्छन् । मूलचोक चौक्वाथ जस्तै हिटिचोक, मोहनचोक, जिस्वांचोक, इटाचपलि आदि दरवारका विभिन्न अवयवहरू पनि यी दुइटै राजदरवारमा एउटै नामले प्रख्यात थिए[1] । उक्त चोकहरूमध्ये धेरैजसा चोकहरू वर्तमान मल्लदरवारमा पाइँदैनन् तापनि तात्कालिक लेखहरूमा तिनका उल्लेख भेटिन्छन् । यस सम्बन्धमा एउटा ध्यान दिनुपर्ने कुरो के छ भने एउटा तात्कालिक कागतमा भक्तपुरदरवारमा बनेको वसन्तपुर तथा लक्ष्मीविलास नामक भवनको उल्लेख आएको छ । लक्ष्मीविलास भवनमा राजा बस्ने भव्य बैठक थियो भन्ने कुरो पनि त्यस कागतपत्रबाट बुझिन्छ । श्री ५ पृथ्वीनारायण शाहको भक्तपुर दरवारमा अधिकार जमेपछि त्यहाँ रहेका मालसामानको सूची तयार पार्दा प्रसङ्गवश यी दुइ भवनको उल्लेख त्यहाँ परेका हुन्[2] । यसरी पृथ्वीनारायण, प्रतापसिंहले वसन्तपुर लक्ष्मीविलास बनाउनुभन्दा अघि नै भक्तपुरमा तिनै नामले प्रसिद्ध भवन बनिसकेका थिए भन्ने देखिन आएको छ । भक्तपुरको वसन्तपुर भवन वि. सं. १८८७ सम्म पनि थियो । त्यस वेला टिपिएको एउटा कागतमा त्यस भवनको उच्चाइ ५१ हात दिइएको छ[3] । यस विषयमा अझ बढी महत्त्वपूर्ण कुरो के छ भने श्री ५ पृथ्वीनारायणले काठमाडौं जित्नुभन्दा धेरै वर्षअघिदेखि भक्तपुर दरवारमा जस्तै काठमाडौंको दरवारमा पनि वसन्तपुरनामक भवन निर्माण भइसकेको थियो । काठमाडौंका राजा पार्थिवेन्द्र मल्ल (वि. सं. १७३१–१७३७) को समयमा लेखिएको एउटा ठ्यासफुमा उनको दरवारमा रहेको वसन्तपुरनामक भवनको उल्लेख

---

१. तुलसीराम वैद्य, "पृथ्वीनारायण शाह–रणजित् मल्लकालिक कागतपत्र" (काठमाडौं नेपाल अध्ययन संस्थान, त्रिभुवन विश्वविद्यालय वि. सं. २०२८) ३१, ३६, ४६ पृ.; नयनाथ पौडेल, "अभिलेख–संग्रह" ४ भाग (वि. सं. २०१८) १० पृ.; परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (दोस्रो).

२. वैद्य, "पृथ्वीनारायण शाह–रणजित् मल्लकालिक कागतपत्र" ६०, ६५ पृ. "वसन्तपुर कोठाको माल. . . .सम्वत् १८२६ पौषशुदि १३ रोज ३ लक्ष्मीविलासको महाराजा राज गर्‍याको कोठाको माल. . . ."

३. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो) "भादगाउ . . . .वसन्तपुर (उचा हात) ५१।३. . . ."

हालै पत्ता लागेको छ[1] । मल्लहरू त्यस भवनमा बसी एउटा गुठी चलाउँथे भन्ने कुराको संकेत त्यस ठ्यासफुबाट प्राप्त हुन्छ । तर अरू विशेष वर्णन त्यहाँबाट प्राप्त हुँदैन ।

विक्रमको उन्नाइसौं शताब्दीको उत्तरार्धमा लेखिएको सुन्दरानन्द बांडाको त्रिरत्न-सौन्दर्यगाथामा श्री ५ पृथ्वीनारायणले वसन्तपुर भन्ने जगामा वास्तुसाधन गरी नयाँ घर बनाए भनी लेखिएको छ[2] । पृथ्वीनारायणले उक्त नयाँ दरवार बनाउनुभन्दा अघि नै सो ठाउँ वसन्त-पुर भन्ने नामले प्रसिद्ध भइसकेको थियो भन्ने कुराको संकेत यसले गरेको छ । यताबाट शाह राजाहरूले काठमाडौंका यी दरवार जगैदेखि बनाएका हुन् तापनि वसन्तपुर भन्ने नामले प्रसिद्ध भवन यहाँ मल्लकालमै पनि बनिसकेको थियो भन्ने बुझिएको छ ।

ठाउँठाउँमा बुर्जा निकाली घर बनाउने चलन नेपालमा धेरै शताब्दीअघिदेखि चलेर आएको देखिन्छ । गोपालवंशावलीमा यसको चर्चा पाइन्छ । राजा शिवदेव (वि. सं. ११७७–११८०आ.) ले पाँचवटा पुर (बुर्जा) भएको चारतले राजभवन बनाएको वर्णन त्यहाँ गरिएको छ[3] । यसै गरी राजा रुद्रदेव (वि. सं. १२२४–१२३१ आ.) ले भक्तपुरको आफ्नो दरवारको दक्षिणतिर पाँचवटा पुर भएको चोक बनाएको[4] तथा राजा अमृतदेव (वि.सं.१२३२-१२३४ आ.) ले सोही दरवारको उत्तरपट्टि पाँचै वटा पुर भएको अर्को चोक बनाएको कुरा त्यहाँ लेखिएको छ[5] मल्लकालमा विशेष गरी चारवटा बुर्जा निकालो बनाएको चोकलाई चौक्वाथ भन्ने चलन थियो । यस्ता भवन सांग्रामिक दृष्टिकोणले महत्वपूर्ण हुने हुनाले नै चौक्वाथ अर्थात् चारबुर्जे किल्ला भन्ने नाम रहन गएको थियो । तीनवटै मल्लदरवारमा चौक्वाथ बनेका थिए[6] । कृष्णमन्दिरअगाडि

---

१. "बहि" राष्ट्रिय अभिलेखालय १२२ विषयसंख्या, "सम्वत् ८०० आषाढ शुक्ल नवमी जयपार्थिवेन्द्र राजा जुम्रो दिन.... वसन्तपुरस यायसपे जुजुं यागु."

२. वज्राचार्य "त्रिरत्नसौन्दर्यगाथा" १३६ पृ.,"कांतिपुर राजधानीमा विराजमान हुँदा अन्त-पुरीको चमत्कार शोभा बढाउना र यशकीर्ति राषनानिमित्त वसंतपुरमा कोट बनाउनानिमित्त शुद्ध वुद्धि हितचित्त भयाका हरिवंशनामा ब्राह्मणलाई हुकूम गर्दा भया ति राजा आफु पनि नानातह्लका विचित्र शिल्पविद्यामा अभ्यास गर्न्या भयाका ति राजा समान एस नेपाल भरमा शिल्पविद्याकन जान्या कर्मी न भूतो न भविष्यति"

३. गोपालराजवंशावली २४ क पत्र, "राजा श्रीशिवःदेव....तेन....चतुर्भूमिक पञ्च-पुरसमयुक्तं श्रीराजगृह सुनिखादितम्"

४. सोही, २५ क पत्र; "राजा श्रीरुद्रदेव....तेन पञ्चपुर दक्षिणसाला खण्डचोक प्रतिष्ठिता."

५. सोही, २५ क–ख पत्र; "राजा श्रीअमृतदेव....तेन पञ्चपुर उत्रशाला खण्डचोक प्रतिष्ठिता."

६. पन्त र अरू,"श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ८९० पृ., रेग्मी "मेडियाभल नेपाल" ३ भाग ३ परिशिष्ट ३५ पृ; "सं. ८०८ श्रावणकृष्ण, सप्तमी प्र अष्टमी वुधवार ।। थ्वकुन्हु चक्वातया पलिन रख हास्य वव वेसजु तक" (ठ्यासफु), वज्राचार्य, "चौकोट दरवार" पूर्णिमा १ वर्ष ३ अंक ४६–५१ पृ.

रहेको पाटन दरवारको चौक्वाथ विक्रमको उनाइसौं शताब्दीसम्म पनि चौकोट भन्ने नामले प्रसिद्ध थियो। त्यहाँ चोकको कुनाकुनामा निकालिएका बुर्जाको अवशेष अद्यापि देखिन्छन्। मल्लकालमा बनेका पुराना चित्रपट र प्रस्तरकलामा पनि चौक्वाथ शैलीमा बनेका चोकहरू देख्न पाइन्छन्[1]। वसन्तपुरचोकमा जस्तै प्रत्येक कुनामा विभिन्न आकारका बुर्जाहरू निकाली ती बनाइएका हुन्थे। यताबाट वसन्तपुरचोक पनि चौक्वाथ शैलीमा निर्माण गरिएको देखिन आउँछ। यसैले त्रिरत्न-सौन्दर्यगाथामा यसलाई कोट भन्ने संज्ञा दिइएको छ।

श्री ५ पृथ्वीनारायण शाह प्रतिभाशाली दूरदर्शी राजा थिए। स्वदेशी कलाकौशलको अभिवृद्धि विना राष्ट्रिय शक्ति मजबूत हुन सक्दैन भन्ने उनको विचार थियो। विदेशी कपडा नझिकाउनू, नेपालकै कपडा बुन्न जान्नेहरूलाई नमूना देखाई सिकाउनू र बुन्न लगाउनू, विदेशबाट गायकहरू र नटुवा नटुवीहरू नझिकाउनू नेपालउपत्यकाका नेवारहरूलाई प्रोत्साहन दिई तिनीहरू-कै नाच हेर्नू भनी उनले आपनो उपदेशमा भनेर गएका छन्। यसरी नेपाली कलालाई प्रोत्साहन दिनामा उनले दुइ फाइदा देखेका थिए। तिनमा पहिलो राष्ट्रको पैसा बाहिर नजाने दोस्रो राष्ट्रमा विदेशी प्रभाव नपर्ने[2]। नेपालउपत्यकामा अघिदेखि चलेर आएको नेपाली शैलीमा वसन्तपुर दरवार बनाउनामा यही विचारधाराले काम गरेको पाइन्छ।

त्रिरत्नसौन्दर्यगाथामा श्री ५ पृथ्वीनारायणको वास्तुकलामा विशेष रुचि थियो, वसन्त-पुरदरवार बनाउँदा हरिवंश भन्ने ब्राह्मणलाई त्यस काममा खटाई आफैले त्यसको निर्देशन दिएका थिए भन्ने भावको कुरो लेखेका छन्[3]। स्वदेशी कलालाई प्रोत्साहन दिने नीति पृथ्वीनारायणको हुनाले सो कुरो विश्वसनीय देखिन्छ। नमूना देखाई कपडा बुन्न लगाए जस्तै भवनको योजना पनि उनकै विचारअनुसार तयार गरिएको अनुमान हुन्छ।

श्री ५ पृथ्वीनारायणभन्दा लगत्तै पछिका केही शाह राजाहरू र त्यस ताकाका भारादार-हरूले पनि उनको राष्ट्रिय विचारधाराको अनुसरण गरेका थिए। यसैले शाहकालका प्रारम्भमा बनेका सबैजसा राजकीय भवन र भारादारहरूको भवनमा नेपाली कलाको छाप देख्न पाइन्छ। श्री ५ रणबहादुर शाहको पालामा बहादुर शाहले बनाएको शिवपार्वतीको मन्दिर[4], चिकँमुगलको स्वरूपसिंह कार्कीको भवन यसका उदाहरण हुन्[5]। तर पछि विस्तारै नेपाली वास्तुकलालाई प्रोत्साहन दिने राष्ट्रिय नीति बिर्सँदै गयो। विशेष गरी राणा प्रधानमन्त्रीहरू बेलायत जान

१. वज्राचार्य, "चौकोट दरवार" पूर्णिमा १ वर्ष ३ अंक ४६–५१ पृ

२. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३२४, १३१ पृ.

३. वज्राचार्य, "त्रिरत्नसौन्दर्यगाथा" १३६ पृ.

४. यस मन्दिरको चर्चा यस ग्रन्थमा माथि गरिसकेका छौं।

५. तेवारी र अरू, "अभिलेख–संग्रह" १२ भाग ७ पृ.; यस भवनको धेरै भागमा अहिले नयाँ शैलीका घर बनिसकेका छन्।

थालेदेखि नेपाली वास्तुकलामा राजकीय भवनहरू बन्न छोडे तथा गद्दीबैठक जस्ता अर्द्धयूरोपिय शैलीमा निर्मित भवनहरू देखापर्न लागे ।

काठमाडौं जित्नुभन्दा अघि वि. सं. १८१९ मा बनेको[1] श्री ५ पृथ्वीनारायण शाहको नुवाकोटको दरवार पनि नेपाली शैलीमै बनेको छ। नेपाली वास्तुकलाको इतिहासमा नुवाकोटको उक्त दरवार र वसन्तपुर दरवारको उल्लेखनीय विशेषता देखिएको छ । यी दुवै राजभवन झ्वाट्ट हेर्दा मल्लकालमा नेपाली शैलीमा बनेका देवल जस्ता देखिन्छन्। तर वास्तवमा ती भवन देवगृह होइनन् । राजकीय वासस्थानको रूपमा ती बनाइएका छन् । यसरी नेपाली मन्दिरको निर्माणशैलीमा मानव जीवन यापन गर्नाको लागि सर्वप्रथम बनेका भवनको रूपमा ती देखिएका छन् । नेपाली वास्तुकलामा श्री ५ पृथ्वीनारायणको थो नयाँ प्रयोग थियो । उनको यस कामले उनको प्रतिभा र राष्ट्रियताको परिचय दिइरहेको छ ।

मल्लकालिक भवनका तलाभन्दा वसन्तपुरचोकमा बनेका भवनका तला धेरै ठूलठूला छन् । सोही अनुपातमा झ्याल ढोका आदि भवनका विभिन्न अवयव पनि निकै विशाल छन् । यस चोकमा रहेका भवनमा अग्ला अग्ला दलान बनेका छन् । तर तिनमा दक्षिणी लङ र उत्तरी लङमा रहेका दलान मात्र यस चोकतिर फर्केका छन् । पूर्वी लङको दलान भँडारखालतिर तथा पश्चिमी लङको दलान नासलचोकतिर फर्केको छ ।

भँडारखालबाट आउँदा पूर्वी लङमा रहेको प्रवेशद्वारबाट, नयाँ सडकको बाटो गरी आउँदा दक्षिणी लङको प्रवेशद्वारबाट तथा नासलचोक भएर आउँदा पश्चिमी लङको प्रवेशद्वारबाट वसन्तपुरचोकमा पस्न सकिन्छ । तिनको अतिरिक्त पश्चिमी लङको छिंडीभित्र पस्ने अरू द्वारभन्दा केही होचो द्वार पनि त्यहाँ देखिन्छ । उत्तरी लङमा भने कुनै द्वार बनाइएको छैन ।

यस चोकमा बनेका सबै भवनमा भुईंतलादेखि तेस्रो तलासम्मका बाहिर देखिने गाह्रामा दुइ दुइटा काष्ठनिर्मित नागका आकृति देखापर्छन् । झ्वाट्ट हेर्दा भित्तामा घिस्रेर गइरहेका जस्ता ती देखिन्छन् । यसै गरी ती भवनका भुईंतला र तेस्रो तला जोडिने ठाउँमा लहरै राखिएका सान-साना काठका मुजुर र बाघका टाउका दर्शनीय छन् ।

चारै बुर्जालाई जोड्ने सबै भवनको माथिल्लो भागमा कौसी बनेको छ । ती सबै भवनमा चारतला छन् । तर उत्तरी लङ एकनाले छ । अरू सबै लङ दुइनाले छन् ।

चारै लङको तेस्रो तलामा बनेका कलापूर्ण गाझ्याल यस चोकको प्रमुख आकर्षण हुन् । उत्तरी लङ र पश्चिमी लङमा गाझ्यालका मुनि संझ्याल बनेका छन् । परन्तु अरू लङमा ती देखिंदैनन् । दक्षिणी लङमा भने चौथो तलामा लगेर संझ्याल हालिएको छ । यस चोकको पूर्वी

१. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३९१ पृ.

लङ्को भवनमा भँडारखालतिर फर्केको भागमा पनि सुन्दर सँझ्याल र गाझ्याल बनेका छन् । ती सबै गाझ्याललाई झिंगटीको छाना हालेको छतले छोपेको छ । छत अडयाउन राखिएका टुँडालमा विभिन्न देवदेवीका मूर्ति कुँदिएका छन् तथा कुनाकुनामा कुँसल प्रयोग गरिएका छन् । यीबाहेक यहाँ प्रयोग गरिएका अरू झ्याल पनि निकै कलापूर्ण छन् । विशेष गरेर पश्चिमी लङ्को दोस्रो तलाको कुनाकुनामा राखिएका चाक्ला आँखिझ्याल विशेष परिश्रमपूर्वक बनाइएका देखिन्छन्। गरुड, नागकन्या, मुजुर, पुष्पवल्लरी आदि बुट्टा यस चोकका झ्याल ढोकामा कुँदिएका छन् ।

आग्नेय कोणमा रहेको विलासमन्दिर बुर्जा कौसीबाट दुइतला माथि उठेको छ । यो बुर्जा चारपाटे आकारको छ । छानामुनि लहरै चारैतिर झ्यालै झ्याल छन् । काठका ठूलठूला थाममाथि झिंगटीको छानाको भार अडयाइएको छ । छानामाथि सुनको गजूर देखापर्छ ।

नैऋत्यकोणमा रहेको वसन्तपुर बुर्जा कौसीभन्दा पाँचतला माथि उठेको छ । चार छाने मन्दिर जस्तो देखिने गरी बनाइएको यस भवनको तेस्रो छानामुनि बाहेक हरेक छानामुनि चारैतिर विधिझ्याल बनेका छन् । तेस्रो छानाको मुनितिर चाहिं उत्तर र दक्षिणतिर एकेकवटा सझ्याल निकलिएका छन् । सबभन्दा माथिल्लो तलामा रहेको विधिझ्यालबाट नेपालउपत्यकाको संपूर्ण दृश्य राम्रोसंग देख्न सकिन्छ । माथिल्लो छानाको टुप्पामा तीनवटा सुनका गजूर टाढैबाट देखिन्छन् ।

वायव्यकोणमा रहेको बङ्गलानामक बुर्जा कौसीभन्दा माथि दुइतला बढाई बनाइएको छ । यस बुर्जाको माथिल्लो तलामा दक्षिण र उत्तरतिर पाँचमुखे खुला झ्याल छन् । यसको अतिरिक्त दक्षिणतिर एउटा सानो कौसी पनि निकालिएको छ । यसको छाना धातुको छ । अर्द्धगोलाकार सो छाना टाढाबाट हेर्दा कछुवाको पृष्ठभाग जस्तो देखिन्छ ।

ईशानकोणमा लक्ष्मीविलासमन्दिर बुर्जा रहेको छ । कौसीमाथि दुइ तला थपी सो बनेको छ । सोह्रकुने भवनको रूपमा बनेको यस बुर्जाको माथिल्लो तलामा लहरै चारैतिर झ्याल छन् । प्रत्येक कुनामा एकेकवटा पर्ने गरी ती झ्याल राखिएका छन् । भवनको यस आकार-लाई सुहाउने गरी छानाको आकार पनि धेरै कोण निकालेर बनाइएको छ । झिंगटीको त्यस छानामाथि सुनको गजूर छ । छानाको प्रत्येक कुनामा हालिएका कुँपाले यस भवनको शोभा अझ बढाएको छ ।

वसन्तपुरचोकमा रहेका संपूर्ण कलाकृतिहरूको गम्भीर अध्ययन गर्ने हो भने त्यसको लागि भिन्नै ग्रन्थ लेख्न पुग्ने सामग्री त्यहाँ मौजुद छन् । नेपाली कलाको गरिमालाई बुझ्न र बुझाउन त्यस्ता ग्रन्थ लेखिनु अत्यावश्यक देखिएका छन् ।

# दाखचोक

नासलचोकको पश्चिमपट्टि दाखचोक पर्दछ । यस चोकमा मल्लकालको कुनै अवशेष पाइँदैन । यहाँ जति पनि कलाकृति छन्, ती सबै शाहकालमा बनेका छन् । श्री ५ राजेन्द्रको समयदेखि श्री ५ पृथ्वीवीरविक्रमको पालासम्म पनि दाखचोकको ठूलो प्रसिद्धि रह्यो । वि. सं. १८८७ मा लेखिएको कागतबाट त्यस बेला यस चोकमा कीप, अम्बा आदि विभिन्न फलफूलका बोट रोपिएका थिए भन्ने बुझिन्छ[1] । दाखचोक भन्ने यो नाम पनि यहाँ रोपिएको मीठो दाखको संज्ञनामा रहेको छ । उक्त कागतमा दाखचोकको छानाको उच्चाई उनन्तीस हात मात्र दिइएको छ । यताबाट यस चोकमा हाल रहेका चारतले अग्ला भवन वि. सं. १८८७ भन्दा पछि मात्र बनेका थिए भन्ने कुरो ज्ञात हुन्छ । दाखचोकको उत्तरी लङ्को भवनको माथिल्लो तलामा श्री ५ पृथ्वी-नारायणदेखि श्री ५ सुरेन्द्रको शासनकालसम्मका जङ्गबहादुर आदि ऐतिहासिक व्यक्तिहरूको भित्तिचित्र लेखिएका छन् । श्री ५ सुरेन्द्रको पालामा नेपालमा आएका प्रसिद्ध चिकित्सक डेनियल् राइटको हिस्ट्री अफ् नेपालमा हनूमान्ढोकाको प्राङ्गणबाट देखिने दाखचोकको उत्तरी लङ्मा रहेको भवनको सुन्दर चित्र छापिएको छ[2] । यिनै प्रमाणहरूको आधारमा त्यस भवनको वर्तमान रूप श्री ५ सुरेन्द्रको शासनकालमा तयार भएको देखिन्छ । आजभोलि रहेका दाखचोकका अरू भवन यसभन्दा केही समयपछि बनेको अनुमान हुन्छ ।

यस चोकमा चारैतिर ढुङ्गा छापिएका छन् । पूर्व, दक्षिण, उत्तर यी तीनै लङ्मा चारतले भवन छन् । तर पश्चिमी लङ्मा भने अग्लो पर्खाल मात्र छ । सो पर्खालले कह्लेहोलचोक र दाखचोकलाई छुट्याएको छ । पूर्व र दक्षिणको लङ्मा ठूलठूला दलान बनेका छन् । दलानका ठूलठूला थाममा नागको बुट्टा कुँदिएका छन् तथा थाममाथि रहने मेथको मुनि डरलाग्दा मकरका आकार उफ्रेर बाहिर निस्कन लागेका जस्ता देखिन्छन् । निनालभन्दा माथि तेर्सिएर बाहिर निस्केका दलिनका टुप्पामा बनाइएका बाघका ठूलठूला टाउका इवाट्ट हेर्दा साँच्चिकैका हुन् कि भन्ने भान पर्छ ।

घरका सबै बाहिरी भित्तामा वज्रलेप गरेर चून पोतिएका छन् । त्यहाँ अनेक बुट्टा बनाइए-का छन् । तस्वीर अथवा ऐनाका पुरानो छाँटका फ्रेम जस्ता ती देखिन्छन् । नासलचोकको दक्षिणी लङ्मा जस्तै यस चोकका सबै भवनमा काठमा चिरा मिलाएर हावाको सञ्चार हुन सक्ने गरी बनाइएका खापा हाली तयार गरिका हरिया झ्याल योजनाबद्ध रूपले लहरै हालिएका छन्, जसले गर्दा यस चोकको शोभा निकै बढेको छ ।

---

१. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (पहिलो)

२. राइट्, "हिस्ट्री अफ् नेपाल" (लन्डन क्याम्ब्रिज् वायर्हाउस इ. सं. १८७७ (वि. सं. १९३४) २ चित्रफलक

## लामचोक

दाखचोकबाट दक्षिणपट्टि लामचोक पर्दछ। नासलचोकबाट सोझै अथवा दाखचोक भएर पनि यस चोकमा पुग्न सकिन्छ। यस चोकको पश्चिमपट्टि न्हुलछेचोक पर्दछ। यस चोकको आकृति लाम्चो हुनाले यसको नाम लामचोक भन्ने रहन गएको छ। शाहकालमा लेखिएको एउटा कागतमा चाहिं न्हुलछेचोकबाट पूर्वपट्टि पर्ने यस चोकलाई नयाँ गोठ बनाइएको सानु चोक भनी लेखिएको छ[1]। यताबाट त्यस वेला यहाँ गोठ बनेको रहेछ भन्ने बुझिन्छ।

यस चोकको दक्षिणी लङ्मा वायुदेवताको मन्दिर छ। झ्वाट्ट हेर्दा सो मन्दिर साधारण घर जस्तो देखिन्छ। दक्षिणी लङ्को छानामाथि गुम्बजको टुप्पामा रहेको सुनको गजूरले मात्र त्यस मन्दिरको परिचय दिइरहेको छ। ब्राह्मणद्वारा यस मन्दिरमा दैनिक पूजा हुन्छ।

राजा प्रतापमल्लको वि. सं. १७१० को मोहनचोकको दलानमा रहेको अभिलेखमा श्रावण शुक्ल द्वादशीको दिन वायुदेवताको पूजा गर्ने कुरो लेखिएको छ[2]। राजदरवारभित्र रहेको वायुदेवतालाई लक्ष्य गरेर सो लेखिएको देखिनाले यो उनै वायुदेवताको मन्दिर हो भन्ने बुझिन्छ। यसरी वि. सं. १७१० भन्दा अघिदेखि नै यहाँ यो वायुदेवताको मन्दिर बनिसकेको थियो भन्ने कुराको सूचना त्यस अभिलेखले गरेको छ। परन्तु वायुदेवताको मन्दिरको वर्तमान रूप शाहकाल-को पुर्ननिर्माणपछि मात्र बनेको देखिन्छ। यस मन्दिरसंग सम्बन्ध राख्ने अरू कुनै अभिलेख प्राप्त नभएको हुनाले यस मन्दिरको सम्बन्धमा विशेष कुरो केही ज्ञात हुन सकेको छैन।

## कन्हेहोलचोक

दाखचोकसंगै पश्चिमपट्टि कह्नेहोलचोक छ। यस चोकलाई मल्लकालिक लेखमा कह्नेहो, कनेम्रो आदि संज्ञा दिइएका छन्, आजभोलि प्रचलित भाषामा कह्नेलचोक भन्ने पनि चलन छ। यस चोकको दक्षिणपट्टि न्हुलछेचोक, पश्चिममा सडक र उत्तरमा देगुतलेजुको मन्दिर पर्दछ।

यस चोकको सम्बन्धमा अनेकन् अनुश्रुति सुनिन्छन्। प्राचीन कालमा यहाँ श्मशान थियो, मल्ल राजाहरूको दाहसंस्कार त्यही श्मशानमा गरिन्थे भन्ने लोकधारणा छ। परन्तु कुनै पनि ऐतिहासिक सामग्रीबाट यस कुराको संकेतसम्म पनि पाइँदैन। मल्लराजाहरूको दाहसंस्कार पशुपति राजदीपमा गरिन्थे भन्ने कुरा तात्कालिक ठ्यासफुबाट स्पष्ट थाहा हुन्छ[3]। यस कारण

१. परिशिष्ट, मन्दिर र चोकहरूका नापोसम्बन्धी पुराना कागतपत्र (दोस्रो).

२. परिशिष्ट, २० संख्याको अभिलेख, ५ पंक्ति

३. राजवंशी, "ऐतिहासिक घटनावली" १० पृ.; "सं ८०० ज्येष्ठ कृष्ण एकादशी प्र द्वादशी शनिश्चरवार कुन्हु ञाया नृपेन्द्रमल्ल जुजु मोक अभाग जुव दिन जुरो ।। मि विकह्मं ६ गोलस रायदीपस अग्निसंस्कार याक जुरो ।।"

उक्त लोकधारणा वास्तविक कुरामा आधारित देखिदैन।

प्राचीन नेवारी भाषामा करवीर फूललाई कह्लेहोल भन्ने चलन थियो। कुनै वेला यस चोकमा करवीर फूल रोपिएको हुनाले यस चोकको नाम कह्लेहोलचोक भन्ने रहन गएको देखिन्छ। परन्तु यस चोकमा स्मशान थियो भन्ने भ्रम यही नामले उत्पन्न हुन गएको बुझिन्छ। किनभने विष्णुमतिको किनारामा काठमाडौं शहरको पश्चिमपट्टि करवीर नामक श्मशान छ। करवीर र कह्लेहोल एउटै पदार्थलाई बुझाउने शब्द हुनाले उक्त लोकधारणाको उत्पत्ति भएको हुनुपर्दछ।

यस चोकको मध्य भागमा नाटचेश्वरको भग्न मन्दिर छ। त्यस मन्दिरको सानो घण्टमा अङ्कित वि. सं. १७७२ को अभिलेखमा कह्लेहो (चोक) को नाटचेश्वर (नासलदेवता) लाई सो घण्ट चढाएको कुरो लेखिएको छ[1]। मन्दिरभित्र भुईंतलामा सुनको सानो डबली छ। त्यस डबलीमा लेखिएको अभिलेखअनुसार राजा जयप्रकाशले वि. सं. १८११ फागुनमा पुरानो डबली जीर्ण भएको हुनाले सुनको यो नयाँ डबली बनाई नासलदेवतालाई चढाएका थिए। यस उपलक्ष्यमा पशुपति प्रादुर्भावादि धर्म्मदत्तोपाख्यान भन्ने नाच पनि नचाइएको थियो[2]। मल्लकालमा लेखिएको ठयासफुमा वि. सं. १८०१ भाद्रमा कह्लेहोल चोकमा उषाहरण नामक नाच खेलाएको कुरोको चर्चा गरिएको छ[3]। यसरी यस चोकमा नाटचेश्वर मन्दिरको सामुन्ने वारम्वार नाच देखाउने चलन मल्लकालमा देखिएको छ। यसैले त्यस वेला यो चोक विशेषतया नाचगानको लागि प्रयोगमा ल्याइन्थ्यो भन्ने बुझिन्छ।

नाटचेश्वरको मन्दिरमा रहेको सुनको सानो डबली कलाको दृष्टिले मात्र होइन सांस्कृतिक दृष्टिकोणले पनि उत्तिकै महत्त्वपूर्ण देखिएको छ। तान्त्रिक विचारधाराअनुसार त्यस डबलीको चारै पाटामा मनुष्यको आकार ढाल तरवार आदि बनाइएका छन्। गद्दीबैठक अगाडिको प्रस्तर निर्मित ठूलो डबलीमा पनि त्यस्तै आकार कुँदिएका देखिन्छन्। नाचका मुख्य अधिदेवता नाटचेश्वरलाई तान्त्रिक विधिअनुसार आकर्षण गर्न ती आकार बनाइएका हुन् भन्ने अनुश्रुति छ।

नाटचेश्वरलाई चढाइएका वस्त्रहरूले सुनको सो सानो डबली प्रायः छोपिएर रहेको हुन्छ। ती वस्त्र हटाई सफा गरेपछि मात्र सो सानो डबली देख्न सकिन्छ।

मल्लकालमा राजकीय नाटचशालाको रूपमा प्रसिद्ध यस चोकको प्रारम्भिक रूप अवश्य पनि भव्य हुँदो हो। परन्तु आजभोलि यस चोकमा वर्णनीय वास्तुकलाको केही अभाव छ।

---

१. परिशिष्ट, ६० संख्याको अभिलेख

२. परिशिष्ट, ७० संख्याको अभिलेख

३. वज्राचार्य, "ऐतिहासिक घटनावली" पूर्णिमा ५ वर्ष ३ अंक, १६५ पृ. "सं. ८६४ भाद्रव ६ आदित्यवार थ्वकुन्हु....कह्लेहोल सिक्वसं उषाहरण प्याखन लितल ग्रन्थगुरुनिखे दों उह्नं।"

# न्हुलछेंचोक

गद्दीबैठक जाने ढोकाबाट भित्र पस्नासाथ श्राउने चोकको नाम न्हुलछेंचोक हो। यस चोकमा रहेको भगवतीको सानो मन्दिरमा सुनको छानामुनि श्रङ्कित गरिएको राजा जयप्रकाशको वि. सं. १७९९ श्राषाढको श्रभिलेखमा न्हुलछेंचोकको उल्लेख श्राएको छ[1] । यताबाट यसभन्दा श्रघि नै यस चोकको निर्माण भइसकेको बुझिन्छ। नेवारीमा न्हुलछेंचोकको माने नयाँ घर भएको चोक भन्ने हुन्छ।

वि. सं. १८२५ मा श्री ५ पृथ्वीनारायण शाहले काठमाडौं विजय गरी हनूमान्ढोका राजदरवारमा प्रवेश गर्दा यही चोकको ढोकाबाट पसेका थिए। यो कुरो भाषावंशावलीको वर्णन-बाट थाहा हुन्छ[2] । काष्ठनिर्मित सो पुरानो द्वार श्रद्यापि चलनचल्तीमा श्राइरहेको छ। वि. सं. १९०४ मा जङ्गबहादुर राणाको समयमा न्हुलछेंचोकको दक्षिणी भाग सबै भत्काई नयाँ घर बनाइएको थियो[3] । पछि वि. सं. १९६५ मा श्री ५ पृथ्वीवीरविक्रमको शासनकालमा जङ्ग-बहादुरले बनाएर गएको पुरानो घर भत्काई यूरोपिय शैलीमा गद्दीबैठकको निर्माण गरियो । भव्य रूपले बनाइएको सो गद्दीबैठकमा राजकीय सभाको श्रायोजना गरिन्थे। देश विदेशका राज-दूतहरूबाट श्री ५ लाई प्रमाणपत्र चढाउने समारोह श्रहिलेभन्दा केही वर्षश्रघिसम्म पनि यहीं सम्पन्न गरिन्थे। यस बैठकमा लहरै शाह राजाहरूका ठूलठूला चित्र लेखिएका छन्। यहाँ रहेको राजकीय गद्दीले यस बैठकको शोभा बढाएको छ। यसैले यसको नाम गद्दीबैठक भन्ने रहन गएको छ। कुमारीजात्रामा गद्दीबैठकमा श्री ५ को सवारी हुन्छ र यतैबाट कुमारीको रथजात्रा नजर गरिबक्सिन्छ ।

गद्दीबैठक बन्नुभन्दा श्रगाडिको न्हुलछेंचोकको दक्षिणी लङ्को फोटो प्राप्त भएको छ। त्यताबाट वि. सं. १९०४ मा त्यहाँ निर्माण गरिएको भवन कस्तो थियो भन्ने कुराको ज्ञान हुन्छ। तर त्यसभन्दा श्रघि मल्लकालमा त्यहाँ कुन किसिमका भवन बनेका थिए भन्ने कुरो जान्ने साधन पाइँदैनन्। यसरी समयसमयमा गरिएको नवीकरणको सिलसिलामा न्हुलछेंचोकको प्रारम्भिक रूप निकै परिवर्तित भइसकेको छ तापनि उठानमा बनेका कलापूर्ण केही झ्याल ढोका र टुँडालहरू ठाउँठाउँमा श्रझै देखिन्छन्। तिनमध्ये यस चोकको उत्तरी लङ्मा रहेको पाँचमुखे संझ्याल निकै श्राकर्षक छ। संझ्यालको तल्लो भागमा लहरै निस्किरहेका मकरका शिर दर्शनीय छन्। सँझ्याल भएको यस लङ्मा कौसी तोसाखाना श्रड्डा बसेको छ। भाषावंशावलीश्रनुसार भीमसेन थापाले

१. परिशिष्ट, ६६ संख्याको श्रभिलेख

२. पन्त र श्ररू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ८७९ पृ.

३. परिशिष्ट, ८९ संख्याको श्रभिलेख

यस चोकमा कौसी तोसाखाना अड्डा राख्ने बन्दोवस्त गरेका थिए[1] । केही समयको लागि सो अड्डा वसन्तपुरमा सरेको थियो तापनि सो अड्डा अहिले त्यहीं रहेको छ। श्री ५ पृथ्वीनारायण शाहको समयदेखिका राजदरवारमा खर्च भएका राजकोशको विवरणसम्बन्धी केही पुराना कागतपत्रहरू त्यस अड्डामा संग्रह गरिएका छन् । शाहकालको इतिहास लेख्न ती निकै उपयोगी छन् ।

कौसी तोसाखाना रहेको भवनको माथिल्लो तलामा एउटा महत्त्वपूर्ण कुरो देखापरेको छ। त्यो हो श्री ५ पृथ्वीनारायण शाहको विस्तर । काठको चौघराभित्र रातो चँदुवामुनि तकियासहित कपासको बाक्लो बिछ्यौना त्यहाँ ओछ्याइएको छ । काठमाडौं जितेपछि उठानका केही दिन उनले त्यहीं बिताएका थिए भन्ने अनुश्रुति छ। कौसी तोसाखानाका सबै बूढापाका कर्मचारीहरूलाई यस कुराको राम्रो ज्ञान छ । यसैले विस्तरमा कसैलाई छुन दिइँदैन तथा कौसी तोसाखानाको लागि खटिएका प्रहरी जवानहरूको संरक्षणमा त्यो रहेको छ । सात आठ तह कपासको बिछ्यौना हाली बनाइएको सो विस्तर साधारण किसिमको छ । स्वदेशमै बनेका घरबुना कपडा त्यसमा प्रयुक्त गरिएका छन् । नेपाली वस्त्र उद्योगलाई प्रोत्साहन दिनुपर्छ भन्ने श्री ५ पृथ्वीनारायण शाहको नीतिसंग[2] अनुकूल कुरो यो छ । यस कारण काठमाडौं जितेपछि उठानका केही समय पृथ्वीनारायणले यही विस्तरमा सुत्ने गरेका थिए भन्ने अनुश्रुति विश्वसनीय देखिन्छ ।

त्यस विस्तरको शिराननिर भित्तामा मातृका देवीहरू र गणेशका सुन्दर चित्रहरू लेखिएका छन् । ती भित्तिचित्रले नेपाली चित्रकलाको उत्कृष्ट नमूना प्रस्तुत गरेका छन् । बेलुका सुत्ने वेलामा र बिहान उठ्नेबित्तिकै देवदेवीको दर्शन पाइयोस् भन्ने भावनाले देवदेवीको चित्र लेखिएको सो कोठा श्री ५ पृथ्वीनारायणले आफ्नो सुत्ने कोठाको रूपमा छानेको देखिन्छ । यसरी राष्ट्रका एक महान् ऐतिहासिक व्यक्तिको कलापूर्ण यो कोठा इतिहासको दृष्टिले मात्र होइन, कला र संस्कृतिको दृष्टिले पनि विशेष महत्त्व राख्दछ । परन्तु कुनै पनि पुरातत्वविद् र इतिहासकारहरूको ध्यान यतातिर भएको देखिंदैन । यस्ता महत्त्वपूर्ण कुरा फेला पर्नु नेपाल राष्ट्रकै निम्ति सौभाग्यको कुरो हो । यसको विधिपूर्वक सुरक्षा गर्नु नितान्त आवश्यक छ ।

---

१. संशोधन–मण्डलको संग्रहमा रहेको अप्रकाशित भाषावंशावली ३६७ पृ.; "कौसीढुकुटिंभित्र दर्वारभित्र सवै अड्डाको वन्दोवस्त वांधि राख्दा भया"

१. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३२४ पृ.

# संस्कृतिको केन्द्रविन्दु

नेपाली संस्कृतिको लामो परम्परा छ। हाम्रो देशको इतिहासको प्रारम्भकालमा प्रचलित संस्कृतिका कतिपय अंशसंग वर्तमान रीतिथितिको अनवच्छिन्न संबन्ध देखापर्छ। लिच्छविहरूको समयमा विशेष संमानित[1] पशुपति, चाँगुनारायण आदि देवता वर्तमानकालमा पनि विशेष संमान र श्रद्धापूर्वक पूजा गरिन्छन्। हरिबोधिनी एकादशी प्राचीनकालमा विशिष्ट दिनमध्ये पर्दथ्यो[2]। त्यस दिन आजभोलि पनि लिच्छविकालका राजा विष्णुगुप्तले स्थापना गरेको बूढानीलकण्ठको भव्य जलशयन नारायणको दर्शन गर्न मानिसको तांती लागेकै हुन्छ। आजभोलि नेपालउपत्यकाका पुराना बाशिन्दा नेवारहरू अनेकन् गुठीको माध्यमद्वारा सामाजिक र धार्मिक कार्यकलाप संपन्न गर्दै छन्। उनीहरूको यो परम्परा मल्लकालमा मात्र होइन कि लिच्छविहरूको समयदेखि नै चल्दै आएको बुझिन्छ। मल्लहरू जस्तै लिच्छविहरू पनि विभिन्न गोष्ठीको निर्माण गरी समाज र धर्मसंग सम्बद्ध कामकुरोको बन्दोवस्त गर्दथे। सानात्थ्यगोष्ठी, प्रदीपगोष्ठी, पानीयगोष्ठी, ध्वजगोष्ठी आदि अनेकन् गुठी लिच्छविकालमा थिए[3]। नातागोता कोही नभएको अनाथ व्यक्तिलाई उसको मृत्युपछि सनाथ व्यक्तिको जस्तो अग्निसंस्कार गरिदिने आदि कामको अभिभारा लिएको गुठी सानात्थ्यगोष्ठी कहलाउँथ्यो[4]। वर्तमानकालमा यस्तो काम सनांगुठीले गर्दछ। यस कारण लिच्छविकालको सानात्थ्यगोष्ठी आजभोलि सनांगुठीको रूपमा देखापरेको छ। विशेष पर्वको दिन देवमन्दिरमा बत्ती बाल्ने गुठीले प्रदीपगोष्ठीलाई संझाउँछ। यसै गरी रातो मछेन्द्रनाथको भोटो देखाउने वेला गाग्रीमा पानी भरेर जात्रहरूलाई पानी खुवाउन आउने गुठियारहरू देख्दा पानीयगोष्ठीको अर्थ खुल्छ भने प्रायः हरेक जात्रामा लामो बाँसमा रङ्गीविरङ्गी कपडा र चँवर गाँसी बनाइने धुजामुजा घुमाउँदै आउने ज्यापुहरूको गुठीले ध्वजगोष्ठीको स्मरण गराउँछ। वर्षवन्धन आदि कति पूजाआजा लिच्छविकाल र मल्लकालमा समानरूपले चल्दै आएको छ[5]। वुसाधँको रूपमा सो पूजा वर्तमान नेवार समाजमा प्रसिद्ध छ। यीबाहेक अरू यस्ता अनेकन् उदाहरण पाइन्छन्।

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३२०–३२३ पृ.

२. सोही, ४८६, ४८९ पृ.

३. सोही, २८४–२८६ पृ.

४. सोही, २८३ पृ.

५. सोही, ४८२ पृ., परिशिष्ट २० संख्याको अभिलेख १८ पंक्ति,

राष्ट्रको संस्कृतिको सिर्जना व्यक्तिविशेषको प्रयासले मात्र हुने कुरो होइन । यसको लागि इतिहासको लामो शृङ्खला पनि चाहिन्छ । अर्को शब्दमा भन्ने हो भने परम्परागत रीतिथिति र विभिन्न ऐतिहासिक गतिविधिको समन्वयले नै देशको संस्कृतिको निर्माण हुन्छ । हनूमान्ढोकासंग सम्बन्ध राख्ने विभिन्न सांस्कृतिक गतिविधिले यस कुरालाई चरितार्थ बनाएको छ ।

हनूमान्ढोका राजदरवारको वर्तमान रूप मल्लकाल र शाहकालमा बनेका कृतिहरूको संमिश्रणद्वारा भएको छ तापनि लिच्छलिकालदेखि नै यतातिर एउटा राजदरवार (राजकुल) बनेको थियो भन्ने विषयमा हामीले माथि सप्रमाण लेखिसकेका छौं । हनूमान्ढोकाको यो लामो इतिहासको शृङ्खलामा विभिन्नकालको प्रतिनिधित्व गर्ने अनेकन् रीतिथिति गाँसिएका छन् । यसैले यो प्राचीन राजदरवार विभिन्न सांस्कृतिक गतिविधिको केन्द्र बन्न गएको छ । सिठीको भोलिपल्ट मनाइने कुमारको खटजात्रा, गाईजात्रा, सेतो मछेन्द्रनाथको रथयात्रा आदि महत्त्वपूर्ण जात्रा यही राजदरवारको प्राङ्गण भएर जान्छन् । चाँगुनारायण दरवार भिव्याउने जात्रा, पचली भैरवको जात्रा, इन्द्रध्वजोत्सव, वसन्तश्रवण, फागु जस्ता कतिपय रीतिथितिको अनिवार्य संबन्ध यस दरवारसंग छ । दुमाजु, कँडेलचोक भगवती, गुह्येश्वरी तथा कुमारीको जात्रा त दरवारबाटै प्रारम्भ हुन्छ र दरवारमै आएर टुङ्गिन्छ । माथि नामोल्लेख गरिएका केही जात्रा मल्लकाल र शाहकालदेखि मात्र प्रारम्भ भएका हुन् तापनि कुमारको खटजात्रा तथा चाँगुनारायण र पचली भैरव आदिको जात्रा मल्ल राजाहरूको शासन शुरू हुनुभन्दा धेरै अघिदेखि नै चलेर आएका देखिन्छन् । यो एक अध्ययनीय विषयवस्तु बन्न गएको छ ।

प्राचीन मल्लकालमा नेपालउपत्यकाका राजाहरूको राजधानी भक्तपुरमा थियो । उनीहरूका राजदरवार पनि त्यहीं बनेका थिए । तर उनीहरूका राज्याभिषेक समारोह भने देउपाटनमा संपन्न गरिन्थे[1] । यो कुरो उनीहरूको पुरानो परम्परासंग सम्बन्ध देखिन्छ । पछिल्ला मल्ल राजाहरूको समयमा उनीहरूको राज्याभिषेकसम्बन्धी कामकुरो आफ्नआफ्नो दरवारमा संपन्न हुन थाल्यो । शाह राजाहरूले उपत्यका विजय गरेपछि हनूमान्ढोका दरवारले श्री ५ हरूको राजकीय वासस्थान बन्ने सौभाग्य प्राप्त गर्‍यो । अरू मल्लराजदरवार साधारण रूपमा रहे । श्री ५ हरूको राज्याभिषेक हनूमान्ढोका राजदरवारमा संपन्न गर्ने चलन चल्यो । राजनैतिक र सांस्कृतिक दृष्टिकोणले हनूमान्ढोका राजदरवारको महत्त्व अझ बढ्यो । श्री ५ पृथ्वीवीरविक्रम शाहदेवको समयदेखि नारायणहिटी राजदरवार श्री ५ हरूको राजकीय निवासस्थान बन्यो तापनि हनूमान्ढोका राजदरवारमा राज्याभिषेक गर्ने परम्परा कायमै रह्यो । यसरी यो राजदरवार समय समयको अनेकन् रीतिथितिलाई समेट्दै विभिन्न सांस्कृतिक गतिविधिको केन्द्रविन्दु बन्न पुगेको छ । यो निकै चाखलाग्दो कुरो छ । यस प्राचीन राजदरवारको वस्तुस्थिति बुझ्न यससंग सम्बन्ध राख्ने यी सबै सांस्कृतिक रीतिस्थितिको अध्ययन गर्नु आवश्यक छ ।

---

१. यस विषयमा चर्चा माथि गरिसकेका छौं ।

# राज्यारोहण

राज्यारोहण, राज्याभिषेक यी दुवै समारोह हनूमान्ढोकामा हुने विशिष्ट उत्सव हुन् । नयाँ राजाको शासनकालको पहिलो दिन संपन्न हुने समारोहलाई राज्यारोहण र त्यसको एक वर्ष जति पछि अनुकूल समयमा विशेष सजधजपूर्वक गरिने उत्सवलाई राज्याभिषेक भन्ने चलन छ । सत्कर्मरत्नावलिमा यी दुइ समारोहको चर्चा गरिएको छ[1] ।

राज्यारोहण समारोहको चलन मल्ल राजाहरूको देखिंदैन । भूतपूर्व राजाको अन्त्य-पछि लगत्तै नयां राजाको राज्याभिषेक संपन्न गरेको वर्णन तात्कालिक अभिलेखहरूमा पाइन्छ । सुख र दुःखको अनौठो अनुभूति बोकेर राज्याभिषेकको आकस्मिक तयारी गर्नु उचित र सुखदायी नहुने हुनाले शाह राजाहरूले पहिले राज्यारोहण, त्यसको एक वर्ष जति पछि मात्र राज्याभिषेक गर्ने रीति चलाएको देखिन्छ । शाह राजाहरूको उत्कृष्ट सभ्य मनोवृत्तिको परिचय यसले दिएको छ ।

राजनैतिक तथा सांस्कृतिक दृष्टिकोणले राज्यारोहण समारोहको निकै महत्त्व छ तापनि प्रायः आकस्मिक रूपमा तयारी गरिने हुनाले यो समारोह छोटो र सरल किसिमको छ ।

हनूमान्ढोकाको नासलचोकमा यो समारोह सम्पन्न गरिन्छ । चोकको बीचमा चँदुवा टांगिएको हुन्छ तथा त्यस मुनि सुनको सिंहासन राखिन्छ । यस अवसरमा प्रधानमन्त्री तथा सेना-पति आदि जंगी निजामती उच्च अधिकारीवर्ग तथा राजदूत आदि विदेशी उच्च पदस्थ व्यक्तिहरू नासलचोकमा भेला भएका हुन्छन् । श्री ५ को सवारी हुनेबित्तिकै मौसूफलाई सलामी दिइन्छ । त्यसपछि शुभ मुहूर्त्तमा वेदध्वनिका साथ गुरुज्यूहरूले श्री ५ महाराजाधिराज सरकारलाई शिरपेच पहिराई परम्परागत पैतृक सिंहासनमा राज गराइन्छ । अनि प्रधान सेनापतिको सञ्चालनमा सेनाले श्री ५ लाई सलामी दिइन्छ । तदनन्तर त्यहां उपस्थित भएका व्यक्तिहरूले दा र राखी दर्शन गर्दै श्री ५ प्रति भक्ति प्रदर्शित गर्दछन् ।

यसपछि हनूमान्ढोका दरवारबाट पङ्क्तिबद्ध यात्राको प्रारम्भ हुन्छ । अगाडि ब्याण्ड त्यसपछि जङ्गीपोशाकले सुशोभित सैनिकहरू र घोडसवार हुन्छन् । छ घोडे बग्गीमा श्री ५ को सवारी चलाइन्छ । प्रधानमन्त्री, सेनापति तथा राजदूत आदि सबै भाइभारदारहरू श्री ५ सवारी

१. श्री ५ गीर्वाणयुद्धवीरविक्रम शाहदेव "सत्कर्मरत्नावली" (काठमाडौं प्रा. रामनाथ आचार्य र दामोदर कोइराला वि. सं. २०२६) उत्तरार्ध ४६४ पृ. "अथ राज्याभिषेक : ।। स द्विधा प्रथमाभिषेकः । सांवत्सरिकश्चेति ।। तत्राद्ये पुरोहितादिना पितृकृतं राजप्रथमाभिषेके रथसिंहासनासिच्छत्रचामरध्वजगजवाजिवस्त्रालंकारसांवत्सरचिकित्सकपुरोहितादीन्युपयुक्तानि नोपयोजयेत्"

भएको बग्गीको पछिल्तिर अदबपूर्वक बग्गी अथवा मोटरमा बसी यस राज्यारोहणयात्रामा भाग लिन्छन् । यस प्रकार यो यात्रा नारायणहिटीमा पुगेर टुङ्गिन्छ[1] ।

नयां राजाको शासनकालको पहिलो दिन संपन्न हुने यस समारोहले स्वर्गीय राजाको शोकले विह्वल जनतालाई सान्त्वना दिने काममा मनोवैज्ञानिक तरीकाले असर गरिरहेको हुन्छ । यस बखत जनताको हृदयमा दुःख र सुखको अनौठो संमिश्रण भइनै रहन्छ तापनि उनीहरूमा नयां उत्साह र उमङ्गको सञ्चार गर्ने काम यस समारोहले नजानिंदो ढङ्गले गरिरहेको हुन्छ । यो नै यस समारोहको प्रमुख विशेषता हो ।

## राज्याभिषेक

हिन्दू राजाहरूको राज्याभिषेकको परम्परा निकै लामो छ । वैदिक ग्रन्थहरूमा ठाउँ-ठाउँमा यसको चर्चा पाइन्छ । विशेष गरेर शतपथब्राह्मणमा राजसूय नामक राज्याभिषेकको विस्तृत विधि दिइएको छ । रामायण र महाभारत आदि ग्रन्थ र रघुवंश आदि महाकाव्यमा पनि राज्याभिषेकको वर्णन पाइन्छ । वैदिक ग्रन्थमा उल्लिखित विधि र ती प्राचीन संस्कृत साहित्यमा दिइएको वर्णनसँग हाम्रो यहां संपन्न गरिने राज्याभिषेकको कतिपय रीति प्रायः मिल्दाजुल्दा छन्। शतपथ ब्राह्मणमा दिइएका सूत्रहरू राज्याभिषेकमा उच्चारण गरिन्छन् तथा त्यसैमा लेखिएको कतिपय विधिलाई मूल आधार मानिन्छ । वैदिक कालदेखिको यो लामो परम्परा अन्त कतै बचेको छैन । तर संसारको एकमात्र हिन्दूराष्ट्र नेपालले यस परम्परालाई सुरक्षित राखेको छ । यो हाम्रो साह्रै ठूलो गौरव र सौभाग्यको कुरो भइरहेको छ ।

नेपालको इतिहासमा राज्याभिषेकको सबभन्दा पहिलो उल्लेख लिच्छविकालका प्रसिद्ध राजा अंशुवर्माको संवत् ३० को सनद शिलालेखमा आएको छ । प्राचीन दरवारको बन्दोवस्त गर्न जाहिर गरिएको त्यस अभिलेखमा राजदरवारका देवदेवी तथा राजा, महावलाध्यक्ष आदिलाई सरकारी कर्मचारीहरूले दिनुपर्ने मर्यादापणको सिलसिलामा राज्याभिषेकका हात्ती, घोडा (अभि-षेकहस्ती, अभिषेकाश्व), चमर हम्कने (चामरधार) झण्डा बोक्ने (ध्वजमनुष्य) तथा राजसिं-हासनको हेरविचार गर्ने (पीठाध्यक्ष) हरूलाई दिनुपर्ने भाग नियत गरिएको छ[2] । यताबाट लिच्छविकालमा राज्याभिषेक धूमधामसंग हुन्थ्यो भन्ने बुझिन्छ । राज्याभिषेक गर्दा सिन्दूरजात्रा गरिन्थ्यो, त्यस वेला चढिने हात्ती, घोडा पछिसम्म सन्मानसाथ राखिन्थे तथा राजसिंहासनको नगीचमा चमर र ध्वजा लिने मान्छे उपस्थित रहेका हुन्थे भन्ने कुरा पनि उक्त अभिलेखले प्रका-रान्तरले बताएको छ ।

---

१. वि. सं. २०१२ चैत्र २ गतेको गोरखापत्र.

२. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३०१–३०२ पृ.

प्राचीन मल्लकाल (वि. सं. १२५७–१४३७) मा दुइ थरी राजवंशको शासन चलेको थियो। दुवै राजवंश समान रूपमा गद्दीका हकदार थिए, तर राजगद्दीमा बस्ने एउटा विचित्रको पद्धति उनीहरूको थियो। त्यस वेला यी दुइ राजवंशका व्यक्ति एकान्तर रूपमा पालो पालो गरी गद्दीमा बस्ने नियम बनेको थियो। यसैले एक राजवंशका व्यक्ति राजा बनेका छन् भने अर्को वंशका व्यक्ति युवराज घोषित गरिन्थे। जस्तै जयभीमदेव राजगद्दीमा बसेको वेलामा उनका छोरा युवराज घोषित गरिएनन्, अर्को वंशका राज्याधिकारी जयसिंहमल्ल युवराज बने[1]। राजा अनन्तमल्ल गद्दी बस्दा छोरा अरिमल्ल युवराज भएनन्, जयभीमदेवका छोरा जयादित्यदेव युवराज घोषित गरिए[2]।

राजा आनन्ददेव (वि. सं. १२०३–१२२४ आ.)ले भक्तपुरमा राजधानी बसाएदेखि[3] प्राचीन मल्लकालका राजाहरू र त्यसभन्दा अघिका नेपालउपत्यकाका शासकहरूको राजधानी भक्तपुरमै थियो तापनि जयभीमदेव आदि प्राचीन मल्लकालका एक थरी राजवंशको मूलघर बनेपामा थियो। यस कारण सो राजवंश त्यस वेलाको नेपालको इतिहासमा भ्वन्त अर्थात् बनेपाली भनी प्रसिद्ध थिए[4]।

ती दुइ थरी राजवंशको भिन्नाभिन्नै राजदरवार बनेका थिए। बनेपाली राजपरिवार त्रिपुर राजदरवारमा बस्दथे, अर्का थरी राजपरिवार चाहिं युथनिह्मम् भन्ने राजदरवारमा रहन्थे[5]। यी दुवै राजदरवार भक्तपुरमै बनेका थिए, तर ती दुवै राजवंशको राज्याभिषेकसम्बन्धी कामकाज

---

१. गोपालराजवंशावली, ३५ क पत्र, "स ३४९ वेशाष कृष्णनवमी श्रीजगतनेकमलदेवस्य पुत्र श्रीजयशीहमलदेव जात."; सोही ३६ ख पत्र, "स. ३७८ चैत्रशुद्धि त्रयोदशी हस्त बुधवार श्रीजयभीमदेवराजास वो श्रीजयशीहमलदेव जुवराजस वो उभेसन पलखचो देश तेल चोङ."

२. सोही, ३५ क–ख पत्र, "स ३५८ जेष्ठशुक्ल प्रदीपदा श्रीजयभीमदेवस्य पुत्र श्रीजयादीत युवरायस जात ।।" सोही, ३५ क पत्र, "स ३९६ माघ शुक्ल द्वादशी पुनर्वसु प्रीतियोग वुधवार श्रीअनन्तमलदेवस्य पुत्र श्रीजयारि मलस जात ।।" सोही २६ ख पत्र, "जौरा श्रीजयादित्य-देवेन, सहोदर श्रीजयानंददेवनिगडवंधनं करोति." सोही ४४ ख पत्र, "स ४१३ फाल्गुणशुक्ल अष्टमी श्रीजयादीतदेवस अस्त," गौतमवज्र वज्राचार्य, "इतिहास–संशोधन" ५४ संख्या, अनन्तमल्लका पालामा लेखिएका वि. सं. १३३५ देखि १३६४ सम्मका पुस्तक पाइन्छन्।

३. गोपालराजवंशावली, २४ ख–२५ क पत्र, "राजा श्रीआनन्ददेव वर्ष २० तेन भक्तापुरे शिवग्लस्थाने देवालये देवद्वयं च प्रतिष्ठितम् ।। ताम्रशंखली संछादनम् ।। त्रिपुरसहितराज-धानी प्रतिष्ठिता ।। राजकुलसमीपे सुवर्णपनाली कृता ।।"

४. सोही ३७ क, ३८ क पत्र, "भ्वन्तश्री जयभीमदेव. . . .भ्वन्त श्रीजयदेव,"

५. वज्राचार्य र अरू, 'इतिहास–संशोधनको प्रमाण प्रमेय' ३७ पृ., वज्राचार्य, "शक्तिशाली भारदार रामवर्द्धनहरू र तात्कालिक नेपाल" पूर्णिमा २ वर्ष ३ अंक १४ पृ. टिप्पणी.

भने देउपाटनको पुरानो राजदरवारमा संपन्न गरिन्थे । बनेपाली राजा जयदेवको राज्याभिषेक देउपाटनको एन्दल भन्ने ठाउँमा गरिएको थियो । जयवागीश्वरीको आसपासमा रहेको ठाउँ त्यस वेला एन्दल भन्ने नामले प्रसिद्ध थियो । यसै गरी युथनिह्मम् दरवारमा बस्ने राजवंशका राजा अरिमल्लको राज्याभिषेक पनि देउपाटनमै संपन्न गरिएको थियो[1] ।

परन्तु त्यस वेला पुष्पाभिषेक, पट्टाभिषेक गरी दुइ प्रकारका राज्याभिषेक गर्ने चलन चलेको थियो । पुष्पाभिषेकलाई पुष्याभिषेक र पट्टाभिषेकलाई पट्टवन्ध पनि भनिन्थ्यो । गोपाल-राजवंशावलीमा पुष्पाभिषेक गरिएका राजाहरूको उल्लेख ठाउँठाउँमा पाइन्छन् । पट्टवन्धको चर्चा पनि त्यहाँ गरिएको छ । पट्टवन्धभन्दा पुष्याभिषेकको बढी संमान थियो तापनि दुवै थरी राजवंशका राजाहरू पुष्पाभिषेक पाउन सक्दथे[2] । यस विषयमा तिनीहरूको विशेष नियम थियो भन्ने देखिन्छ । विक्रमको चौधौं शताब्दीको पूर्वार्धतिर नेपालउपत्यकामा संयुक्त शासन चलाउने दुइ राजामध्ये अर्जुनमल्लले पुष्पाभिषेक र स्थितिमल्लले पट्टाभिषेक पाएका थिए[3] । अर्जुनमल्ल बनेपाली राजवंशमा जन्मेका त्रिपुर राजदरवारमा बस्ने राजा थिए । स्थितिमल्ल चाहिं युथनिह्मम् राजदरवारमा बस्ने राजकुमारी राजल्लदेवीसंगको विवाहसम्बन्धबाट राज्याधिकारी बनेका थिए[4] ।

राष्ट्रिय अभिलेखालयमा रहेको वि. सं. १५१६ मा सारिएको धनञ्जयनिघण्टु नामक हस्तलिखित ग्रन्थमा 'आस्थानाधिपति राजा' को नेवारीमा अर्थ खुलाउँदा 'पाटन छ्या राजा' अर्थात् पट्टाभिषेक गरिएका राजा भनी लेखिएको छ[5] । यताबाट त्यस वेला आस्थान (राजकीय

१. यस कुराको सप्रमाण चर्चा "भण्डारखाल" शीर्षकमा गरिसकेका छौं ।
२. गोपालराजवंशावली २६ पत्र, "पुष्पाभिसेक राजा श्रीजयभीमदेव. . . .पुष्पाभिषेक राजा श्रीजयशीहमलदेव. . . .पुष्पाभिषेक राजा श्रीअनन्तमलदेव," भीमदेव बनेपाली हुन्, सिंहमल्ल र अनन्तमल्ल बनेपाली होइनन् ।
३. संशोधनमण्डल, "जयसिंहरामको संझनामा राखिएको पनौती इन्द्रेश्वर–मन्दिरको ताम्रपत्र" पूर्णिमा ४ वर्ष २ अङ्क १३०–१३१ पृ., "अत्रासीज्जयसिंहरामनृपतिः प्रख्यातभूमण्डले श्रीमान् श्रीभगवान् शिवः पशुपतिर्येन प्रतिष्ठापितः । येनैवापि जयार्ज्जुनो नरपतिः पुष्पाभिषेकः कृतो येनासौ स्थितिराजमल्लनृपतिः पट्टाभिषेकीकृत :॥. . .सम्वत् ५२१ कार्तिक शुक्ल. . . ."
४. वज्राचार्य, "शक्तिशाली भारादार रामवर्द्धनहरू र तात्कालिक नेपाल" पूर्णिमा २ वर्ष ३ अङ्क २०–२१ तपृ.
५. "धनञ्जयनिघण्टु" राष्ट्रिय अभिलेखालय प्र ४६८, ४७ विषयसंख्या, "आस्थानाधिपति राजा, पाटन छ्या राजा. . . .सम्वत् ५८० पौषकृष्ण पञ्चम्या लेषिक हातीग्ल दैवज्ञ शहृशीवेन"

सभा) हुँदा पट्टाभिषेक गरिएका राजाको अध्यक्षतामा सभासञ्चालन हुँदो रहेछ भन्ने कुराको संकेत प्राप्त हुन्छ ।

वराहमिहिरको वृहत्संहिता र कालिकापुराण आदि ग्रन्थमा पुष्पाभिषेकसंबन्धी विधि विस्तारपूर्वक दिइएको छ तथा कात्यायन श्रौतसूत्र आदि ग्रन्थमा पट्टाभिषेकको चर्चा पाइन्छ । नेपालमा कालिकापुराणको विशेष संमान थियो । वृहत्संहिता र कालिकापुराणमा लेखिएका ती विधि मिल्दाजुल्दा छन् । तर हाम्रो यहाँ गरिने पुष्पाभिषेक वा पट्टाभिषेकको पर्याप्त वर्णन नपाइने हुनाले उक्त ग्रन्थमा लेखिएका विधिसंग तुलना गरी हेर्न सकिंदैन ।

प्राचीन मल्लकालका राजा जयदेवको पट्टबन्ध गरेको वर्णन गोपालराजवंशावलीमा दुइ ठाउँमा लेखिएको छ । पट्टबन्धको उत्सवमा दुनियाँलाई भोज खुवाइएको थियो । महामन्त्री, चामरग्राही, खड्गग्राही, प्रतीहार आदि उच्च पदासीन व्यक्तिहरूले कपडा ओछ्याएर स्वागत गरेका थिए । छत्र तथा सिंहध्वज आदि विभिन्न राजचिह्न त्यस उत्सवमा ल्याइएका थिए । ढाक, खिजा, काहल आदि विभिन्न प्राचीन बाजा बजाइएका थिए । राजा जयदेव बनेपाली हुनाले भ्वंत भह्लोह्लि (बनेपाली राजवंशको इष्टदेवता) लाई पूजा गरेको कुरो पनि त्यहाँ परेको छ । उक्त वंशावलीमा दुइ ठाउँमा वर्णित जयदेवको पट्टबन्धको सालमिति भिन्नाभिन्नै छन् । तिनमा पहिलो वि. सं. १३१३ श्रावणमा र दोस्रो सोही वर्षको मार्ग महीनामा भएका पट्टबन्धका मिति त्यहाँ दिइएका छन् । यताबाट पट्टबन्ध पटक पटक गरी हुन सक्ने देखिन्छ[1] ।

नेपाल उपत्यकामा तीन मल्लराज्य खडा भएको समयमा लेखिएका ऐतिहासिक सामग्रीमा पुष्पाभिषेक वा पट्टाभिषेकको चर्चा कतै पाइँदैन । यस कारण त्यस वेला सो परम्परा विच्छिन्न भइसकेको देखिन्छ। मल्लकालमा अभिषेकभन्दा राजतिलकको विशेष महत्त्व हुन गएको बुझिन्छ ।

---

१. गोपालराजवंशावली ३६ पत्र, "स ३७६. . . .थ्वया सम्वछ्र श्रावणशुक्ल द्वादशी श्रीजयदेवराजस वुं एन्दलसं पटाबन्ध जुरोम् उदयात्पर घटि १८ ।। स ३७४ अशुनि कृष्ण द्वितीया अश्विनि हर्षन आदीतवार ग्वलम् ढंछ आदिन पाटावन्ध श्रीजेदेवरायस उदयात्प्र घटि ६ राजस्यअगी समूह ङ्तः ।। सुनोला पत्रछत्र हीराधारछत्र ह्लकनक्षत्र । कनकदण्डछत्र शीहध्वज ।। ढाक २ खिजा ८ तव काहलपा १६ ट्वाक काहल २४ छत्रधर ३ गुरीछेश राजासन खण्डखण्डागाह ह्लाय । पाटका टाये : भ्वंत भह्लीह्लिसके ।। गोतिपनिस्य कोटाये ।।" सोही ३७ पत्र, "स. ३७७ मार्गशिर पूर्णिमा मृगशिर आदीतवार उद्यात्पर घटि १६ वृषलग्न श्रीजयदेव राजास ग्वल्वं राजलखुंस मनसरपटबन्ध यङा विधान यावम् प्रजाभोह्न विग्रमाल शिलो ल्वाच माल्व सालोठयमाल्व थंकुलुंगोतया मौपसामुकुलुं गोतया भेनसा, ओवेरस थ्व गोतपनिस्यं ह्लडोकोलायटेव : महाथसालेपी, चाम्रगाहपी, खण्डागाहपी, पतीहारपी कठियापी उपाध्यांछि जोतिकछि, कह्लिहामाछि देवसछि थ्वते वंसाह्लस ओय ।। पाटन छुक्व राजास सूतक चोङा राजवाशस ।। राजास टोटवाढ जुकाले प्रजान ल्हुये गोत्रदान जुरों ।।"

तीन मल्ल राज्यमा कुनै राज्यका राजालाई राजतिलक दिनुपर्दा अरू दुइ राज्यका राजाहरू सामेल हुन्थे तथा ती दुइ राजामा जेठाचाहिंले राजतिलक लगाइदिने नियम थियो। काठमाडौंका राजा नृपेन्द्रको राजतिलकको उत्सवमा पाटनका राजा श्रीनिवास र उनका छोरा योगनरेन्द्र तथा भक्तपुरका राजा जितामित्रमल्ल र उनका भाइ उग्रमल्ल उपस्थित थिए। त्यस वेला मल्ल राजाहरूमा श्रीनिवासमल्ल सबभन्दा जेठा हुनाले नृपेन्द्रमल्ललाई उनैले राजतिलक लगाइदिएका थिए। अभिषेकको लागि एउटा मृत्युञ्जय कलश, एउटा स्नानकलश गरी दुइटा कलशको तयारी गरिएको थियो[1] ।

देउपाटनमा राज्याभिषेक गर्ने चलन मल्लकालमा छुटिसकेको थियो । उनीहरूको राजतिलकको समारोह आफ्आफ्नो दरवारको मूलचोकमा संपन्न गरिन्थे । कहिलेकहीं राजदरवार नजीकै सत्तलमण्डपमा पनि राजतिलक समारोहको काम संपन्न गरिन्थ्यो[2] । पछि विशाल नेपालका निर्माता शाह राजाहरूको राज्याभिषेकको लागि मूलचोक सांगुरो भएको हुनाले शाहकालमा राज्याभिषेक समारोह नासलचोकमा हुन थाल्यो । यस विषयमा हामीले माथि लेखिसकेका छौं ।

शाह राजाहरूको राज्याभिषेक विशेष सजधजसाथ संपन्न गरिन्छ । परम्परागत रीतिअनुसार नासलचोकको डबलीनजीकै उत्तरपट्टि स्नानमण्डप र अभिषेकमण्डप गरी दुइटा मण्डप तयार गरिन्छन् । राज्याभिषेकको दिनभन्दा दुइ दिन अगावै निर्विघ्न सिद्धि लाभ गर्न र देवताहरूका राजा इन्द्रलाई प्रसन्न पार्न विनायक शान्ति र ऐन्द्रिशान्ति भन्ने अङ्गस्वरूप यज्ञ गरेर पूजा-

---

१. राजवंशी, "ऐतिहासिक घटनावली" ७ पृ. , "सं. ७९४ आषाढ शु. षष्टी उत्तरफाल्गुण परिघ सोमबार थ्व कुन्हु न्हलँया श्रीजयश्रीनिवासमल्ल जुजु थ्वस काय श्रीजययोगनरेन्द्रसिंहमल्ल श्री खपोया श्रीजयजितामित्रमल्ल थ्वया किजाजु श्रीउग्रमल्ल ।। थ्व पेह्म विज्याङाव ।। न्हया ध्वकह्म थाकुर श्रीजयनृपेन्द्रमल्ल राजा सारा घरि ८ स जुरो थ्वस किजाजु दातिह्म श्रीपार्थिवेन्द्रमल्ल मामब्यागल मेलह्म किजाजु श्रीमहीपतीन्द्रमल्ल थ्वतिह्मं ध्वकह्म लवह्लाङा जुरो । थ्वरनह्ला थ्व ववु प्रतापमल्लन मेरह्म थाकुर श्रीमहीपतीन्द्रमल्ल राजा साराव ताथुस श्रीनिवासमल्लजुन ध्वकह्म राजायात थम थंकादि जुस्यं तेका थम विव जुरो न्हया मूलचुकया पूर्व चपरिस कलशपूजा याङाव जुरो ।। कलश ग्वड २ ।। मृत्युंजय १ स्नानकलश १ ।।"

२. पाटनमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफु, "सं. ८३७ आषा शु. १५ न्हलया प्रमानपनि सकल्यं प्रजापनि वङाव न्ोंस श्रीश्रीमहेंद्रसिंहमल्लदेव राजा वोङ ह्याव सिंदूर यात्रा याङाव मणिमण्डपस सिंहासन विज्याचकाव राजा साला दिन जुरो ।। थ्वह्म राजा श्रीश्रीश्रीश्रीश्रीशिवसिंहमल्ल महाराजाया ह्लसपुलिह्मं जुल." (रेग्मी "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १२७–१२८ पृ. मा प्रकाशित ठ्यासफुसँग यो अंश मेल खान्छ ।)

होम आदि गरिन्छ। विनायक शान्ति ऐन्द्री शान्तिको विधि मूलचोकमा सम्पन्न गरिन्छ। यसको भोलिपल्ट अर्थात् राज्याभिषेकको दिनभन्दा अघिल्लो दिनमा दीप, पूर्णकलश, गणेश, मातृका, ग्रह, वास्तुदेवताको पूजा हुन्छ तथा स्नानमण्डपमा समुद्र, गङ्गा, यमुना आदि विभिन्न नदी र तीर्थका जल, अनेक ठाउँका चौध प्रकारका माटाहरू तथा विभिन्न वनौषधि इत्यादि भरिएका स्नानकलश-हरू यथोचित स्थानमा विधिपूर्वक स्थापना गरिन्छन्। अभिषेकमण्डपमा अनेक देवताहरूको आवाहन पूजा होमहरू गरेर अभिषेकका सामग्रीहरू उचित ठाउँमा तयार गरी रातभरि उत्सव र भजनकीर्तन गरिन्छ। भोलिपल्ट राज्याभिषेकको दिन प्रातःकालमा मण्डपमा आवाहन गरिएका देवताहरूको पूजा होमहरू भएपछि नारायणहिटी दरवारबाट शुभमुहूर्त्तमा श्री ५ महाराजाधिराज र श्री ५ बडामहारानीको सवारी हनूमान्ढोका दरवार भित्रिन्छ। सर्वप्रथम स्नानमण्डपमा सवारी भई शास्त्रीय विधिअनुसार स्नानादि गरिबक्सिन्छ। त्यसपछि अभिषेकमण्डपमा सवारी भएर देवताहरूको पूजा प्रार्थना गरिबक्सेर श्री ५ हरू राजकीय आसनमा राज हुन्छ। वेदध्वनि, मन्त्रपाठ र मङ्गलगानको बीचमा राजगुरुहरूद्वारा मौसूफहरूको अभिषेककार्य आरम्भ हुन्छ। पूर्व दिशाबाट ब्राह्मणद्वारा घृतपूर्ण सुवर्णकलशले, दक्षिण दिशाबाट क्षत्रियद्वारा दुग्धपूर्ण रजत-कलशले, पश्चिम दिशाबाट वैश्यद्वारा दधिपूर्ण ताम्रकलशले, उत्तर दिशाबाट शूद्रद्वारा मह्पूर्ण मृत्तिकाकलशद्वारा अभिषेक गरिन्छ। पुरोहितले सुवर्णको संपातकलशले मन्त्र पढेर अभिषेक गर्छन्। अनेक वनौषधि सुगन्धी वस्तु फलफूल बीच रत्नहरूसमेतको जलले शतच्छिद्र सुवर्ण कलशद्वारा अभिषेक हुन्छ। ज्योतिषीले पनि सुवर्णकलशको जलले मन्त्र पढी अभिषेक गर्दछन्। अभिषेकको समयमा राजपुरुषहरू छत्र, चामर, आशागुर्जा आदि राजचिह्न लिएर वरिपरि खडा रहन्छन्। शङ्खवादन, मङ्गलगान, वैदिक मन्त्रपाठ आदिको ध्वनि गुञ्जिरहन्छ।

यसरी अभिषेक समाप्त भएपछि नासलचोकको ऐतिहासिक डबलीमा सुसज्जित बयल, बिरालो, चितुवा, सिंह, बाघहरूको छालामाथि राखिएको राजसिंहासनमा श्री ५ महाराजा-धिराज राज भइबक्सिन्छ। मौसूफको बायाँपट्टि श्री ५ बडामहारानी राज भइबक्सिन्छ। तदनन्तर शुभमुहूर्तमा राजगुरुबाट श्री ५ लाई निधारमा सुवर्णको राजपट्ट र शिरमा राजमुकुट तथा श्री ५ बडामहारानीलाई डायरा पहिराउने काम हुन्छ। यस बखत १०१ तोपको शाही सलामी-द्वारा राजदम्पतिप्रति श्रद्धा र संमान प्रकट गरिन्छ। अनि आमन्त्रित विभिन्न राष्ट्रका प्रतिनिधि-हरू आफ्‌आफ्ना देशतर्फबाट श्री ५ महाराजाधिराज र श्री ५ बडामहारानीको अभिवादन गर्दछन्। त्यसपछि सर्वप्रथम श्री ५ युवराजाधिराज अनि अधिराजकुमारहरू र शाही परिवारका सदस्यहरू-ले क्रमशः दाम राखेर राजारानीको दर्शन गरिसकेपछि प्रधानमन्त्री, मन्त्रिगण, प्रधानसेनापति आदि सैनिक र असैनिक उच्च पदाधिकारीहरू, चौतरिया, रजौटा र गण्य मान्य जानपदहरू दाम राखेर दर्शन गर्दछन्।

त्यसपछि अभिषेकमण्डपमा पुनः सवारी भई दान दक्षिणा प्रसादग्रहण आदि धार्मिक कृत्य सम्पादन गरी हात्तीमा राज भई प्रोशेसनसाथ काठमाडौं मरुगणेशस्थानमा सवारी भई दर्शन गरिबक्सी पुनः हनूमान्ढोका सवारी हुन्छ।

यसपछि सिन्दूरजात्रामा लगिने घोडा, रथ, हात्तीहरूलाई मन्त्रपूर्वक पूजा गरी श्री ५ महाराजाधिराज र श्री ५ बडामहारानी सिंहासनयुक्त सिंगारिएको ठूलो हात्तीमा राज भई ध्वजपताकाहरूले सुशोभित नगरपरिक्रमा गरिबक्सिन्छ । यो सिन्दूरजात्रा हनूमान्ढोकाबाट शहरको विभिन्न भाग हुँदै टुँडिखेल पुग्छ र विशाल सभाको रूप लिन्छ । त्यहाँ बनाइराखेको सुशोभित मञ्चमा सवारी भई श्री ५ बाट जनतालाई दर्शन बक्सिन्छ र त्यहाँ एकत्रित जनसमूहलाई संबोधन गरिबक्सिन्छ । त्यहाँबाट श्री ५ को सवारी नारायणहिटी दरवारमा हुन्छ र सिन्दूरजात्रा समारोह टुङ्गिन्छ ।

राज्याभिषेकको दिन दीन दुःखीहरूलाई अन्न वस्त्र द्रव्य दिने, कैदीहरूलाई छोड्ने, पिंजरामा पालिराखेका चराचुरुङ्गीलाई छोडिदिने चलन छ[1] ।

माथि वर्णित राज्याभिषेकका कतिपय रीति वैदिक ग्रन्थ र पुराण आदिमा दिइएको विधि तथा संस्कृत साहित्यमा उल्लिखित वर्णनसंग निकै मिल्दाजुल्दा छन् । शतपथ ब्राह्मणमा राजाको राज्याभिषेकको लागि इन्द्र आदि विभिन्न देवतालाई आह्वान गर्ने मन्त्र दिइएका छन् तथा तीर्थका पानीले स्नान गर्ने विधि दिइएको छ । अग्निपुराणमा र मानसारमा अभिषेकपछि सिन्दूरजात्रा गरी नगरपरिक्रमा गर्ने तथा कैदीहरूलाई छोड्ने विधान लेखिएको छ । रघुवंश महाकाव्यमा अनेक खोला र समुद्रबाट पानी ल्याई राज्याभिषेक गरेको वर्णन पाइन्छ । यसै गरी सोही महाकाव्यमा राजा अतिथिको राज्याभिषेकको प्रसङ्गमा राजपुरोहित र ब्राह्मणहरूले अथर्वमन्त्र पढी सुवर्ण कलशमा हालेका तीर्थका पानीले अभिषेक गरेको तथा सिन्दूरजात्रा गरी शहर घुमेको वर्णन लेखिएको छ । कैदीहरूलाई छोडी स्वतन्त्र पारिदिएको तथा चराचुरुङ्गीहरूलाई बन्धनमुक्त गरिदिएको चर्चा पनि त्यहाँ गरिएको छ । राज्याभिषेकसम्बन्धी गौरवपूर्ण यो लामो परम्परालाई हामीले अहिलेसम्म सगौरव बचाएर आएका छौं । यो हाम्रो संस्कृतिको महत्त्वपूर्ण विशेषता हो ।

## दुमाजु जात्रा

मूलचोकको पूर्वी लड्को दोस्रो तलामा दुमाजुको मुख्य निवासस्थान छ । कर्माचार्य पूजारीबाट तान्त्रिक विधिअनुसार यस देवताको दैनिक पूजाआजा चल्छ । पाटन र भक्तपुरका मल्लदरवारमा पनि दुमाजुको मन्दिर बनेको छ । परन्तु ती मन्दिर मूलचोकमा नभएर भँडारखालको एक छेउमा रहेका छन् । मल्लहरूको दरवारमा तलेजु र देगुतलेजुपछि यसको विशेष स्थान थियो । यसैले त्यस समयका अभिलेखहरूमा तलेजुमाजु अथवा देगुतलेजुमाजु भने जस्तै दुमाजु भनी लेखिएको पाइन्छ । नेवारीमा माजु शब्दको अर्थ पूजनीय माता भन्ने हुन्छ तथा विशेष

१. माथि लेखिएको राज्याभिषेकको वर्णन वि. सं. २०१३ वैशाख २० गतेको गोरखापत्रको राज्याभिषेक विशेषाङ्क र वि. सं. २०१३ वैशाख २५ गतेको गोरखापत्रमा आधारित छ ।

प्रकारले संमानित देवीहरूको नामपछाडि मात्र यसको प्रयोग गरिन्छ । हनूमान्ढोकाको मूलचोकमा रहेका दुमाजुको पूजा परम्परागत विधिअनुसार गुप्त रीतिले चलिनैरहेको हुनाले त्यहाँ भित्र पसी देवताको दर्शन गर्न सकिंदैन। परन्तु भक्तपुर र पाटनको दुमाजुका मन्दिर सर्वसाधारणको लागि खुला छन् । त्यहाँ पीठदेवता जस्ता देखिने आकारविहीन देवमूर्ति स्थापना गरिएका छन् । पाटनको मन्दिरभित्र मल्लकालका दुइटा शिलालेख पनि प्राप्त भएका छन् । ती शिलालेखमा दुमाजुलाई श्री[1] अथवा वसुलक्ष्मी[2] भनी लेखिएको छ । यताबाट दुमाजु वास्तवमा लक्ष्मीको बोलचालीको नाम हो भन्ने बुझिन्छ । लिच्छविकालमा बनेका राजदरवारमा पनि लक्ष्मीको प्रतिमा स्थापना गरिएका हुन्थे । यो कुरा अंशुवर्माको हाँडिगाउँको शिलालेखबाट बुझिन्छ[3] । दरवारको बन्दोवस्तको लागि राखिएको त्यस शिलालेखमा षष्ठीदेवी आदि अरू देवदेवताको लागि गरिएको व्यवस्था जस्तै 'श्रीदेव्यै' भनी लक्ष्मीको निमित्त भिन्नै भाग पन्छाइएको छ । यताबाट राजदरवारमा लक्ष्मीको प्रतिमा स्थापना गर्ने हाम्रो प्राचीन परम्पराको संज्ञना हुन्छ ।

लक्ष्मीलाई दुमाजु भन्नामा एउटा ऐतिहासिक कारण देखिएको छ । हाम्रो यहाँ राजदरवारमा लक्ष्मीको पूजा गर्ने प्राचीन परम्परा थियो तापनि तान्त्रिक विधिबमोजिम पूजा गरिने दुमाजु भनी प्रसिद्ध यी लक्ष्मीको आगमन तिरहुतबाट भएको थियो । मल्लकाल र त्यसभन्दा अघिको नेपालउपत्यकाको राजनैतिक र सांस्कृतिक गतिविधिमा तिरहुतको निकै प्रभाव जमेको थियो । प्राचीन मल्लकालमा तिरहुतेहरूले नेपाल खाल्डोमा धेरै पल्ट आक्रमण गरेका थिए तथा उपत्यकाको राजनीतिमा उनीहरू वारम्वार हस्तक्षेप गर्दथे । त्यस वेलाका दुइ थरी शासकवर्गको कलहमा उनीहरू भाग लिन्थे[4] । यसरी उपत्यकाको राजनीतिमा तिरहुतको प्रभाव जमेको हुनाले नै तिरहुतका राजा हरसिंहदेव मुसलमानी फौजदेखि पराजित भएपछि परिवारसहित भई नेपाल खाल्डातिर जान हिंडेका थिए । तर उपत्यकामा नपुग्दै बाटैमा उनको मृत्यु भयो[5] ।

---

१. तेवारी र अरू, "अभिलेख–संग्रह" (वि. सं. २०१६ स्रावण) ६ अङ्क ७ पृ., पाटन दरवारको भँडारखालमा रहेको दुमाजुस्थानको वि. सं. १६४५ मार्गको शिलालेखमा यस्तो लेखिएको छ–"ओं नमः श्रियै ॥ भृगो ख्यात्या समुत्पन्ना, श्रीदेवी विष्णुवल्लभा । द्रुतचामीकर : कान्त्या सर्व्वाभरणभूषिता ॥ प्रणम्य देवदेवेशीम्, लक्ष्मीं भुवनपूजितां ॥ अभूच्छ्रीविष्णुसिंहोसौ, राजा विष्णुपरायण : । . . . .तस्य पाणीगृहीता या पत्नी भर्तृपरायणा ॥ ललितालक्ष्मिविख्याता सा तु कालवशं गता । तस्या : स्वर्लोकसंस्थाया प्रासादे दिव्यसुन्दरे । प्रतिमां कमलादेव्यास्तत्र संस्थाप्य भूपति : । लक्ष्मीपूजादिकं सर्व्वम् . . . .पर्यकल्पयत् ॥. . . . सम्वत् ७०६ मार्ग्गशिर कृष्ण ६ जुरों ॥"
यताबाट राजा विष्णुसिंहले पाटनको आफ्नो दरवारमा दुमाजु स्थापना गरेको बुझिन्छ ।

२. रेग्मी, "मेडियाभल् नेपाल" ४ भाग २१६ पृ., "श्रीवसुलक्ष्मीदेव्यै नमः".

३. वज्राचार्य "लिच्छविकालका अभिलेख" ३०१ पृ. "श्रीदेव्या : पु ३ प १"

४. वज्राचार्य, "डोयहरू को हुन्?" पूर्णिमा १ वर्ष ४ अङ्क २०–२८ पृ.

५. वज्राचार्य र अरू "इतिहास–संशोधनको प्रमाणप्रमेय" २३२–२३३ पृ.

प्राचीन मल्लकालको अन्त्यतिर ४० वर्ष भने जस्तै नेपालउपत्यकाको राजकाजमा विशिष्ट व्यक्तिको रूपमा देखापर्ने देवलदेवी पनि तिरहुतकै राजघरानियाँ हुन् भन्ने देखिएको छ। त्यस वेला उपत्यकामा त्रिपुर र युथनिह्मम् भनी प्रसिद्ध दुइ राजदरवारमध्ये देवलदेवीले युथनिह्मम् दरवारमा शरणागतको रूपमा प्रवेश पाएका थिए। पछि विस्तारै आफ्नो शक्ति बढाउँदै लगी राजसिंहासन-मा बसेकी राजकुमारी नायकदेवीसंग आफ्ना छोरा जगत्सिंहको विवाह गरिदिन सफल भइन्। सोही विवाहसम्बन्धबाट राजल्लदेवीको जन्म भयो। छोरी पाएको केही दिनपछि नै नायकदेवीको मृत्यु भएको हुनाले नातिनी राजल्लदेवीलाई काखमा राखी देवलदेवीले शासन चलाइन्। पछि राजल्लदेवीसंग स्थितिमल्लको विवाह भयो[1]। नेपालउपत्यकाका तीन मल्ल राज्यका राजाहरू उनैका वंशज हुन्। अर्को कुरो प्रतापमल्ल आदि ती मल्ल राजाहरू आफूलाई तिरहुतका राजा हरसिंहदेवका सन्तान हौं भन्ने कुरो देखाउन चाहन्थे[2]।

तिरहुतका विद्वान्हरूको नेपालउपत्यकामा विशेष सन्मान हुन्थ्यो। उनीहरूले लेखेका ग्रन्थ पढिन्थे। त्यस्ता केही ग्रन्थ राष्ट्रिय अभिलेखालयमा अद्यापि सुरक्षित छन्।

तिरहुतेहरूको अर्को नाम डोय थियो। गोपालराजवंशावलीमा तिनीहरूलाई कतै तिर-हुतिया, कतै डोय भनी लेखिएको छ[3]। उक्त वंशावलीमा डोयिनी माम नामक देवीको पनि उल्लेख आएको छ[4]। डोयहरूको देवता भएकोले ती देवीको नाम डोयिनी माम अर्थात् डोयहरूको पूज्य देवी भन्ने रहन गएको देखिन्छ। दुमाजु डोयिनी मामकै अपभ्रंश हो तथा ती दुवै एउटै देवता हुन् भन्ने बुझिन्छ।

विक्रमको अठाह्रौं शताब्दीतिर लेखिएको हनूमान्ढोका दरवारभित्र रहेका देवदेवीहरूको गुठीसम्बन्धी हस्तलिखित टिपोटे कागतमा महेन्द्रमल्लकी आमा जयन्तीदेवी, सदाशिवमल्ल तथा लक्ष्मीनरसिंहमल्लले दुमाजुलाई जग्गा गुठी राखेको कुरो टिपिएको छ[5]। यताबाट तलेजुको

---

१. वज्राचार्य, "शक्तिशाली भारादार रामवर्द्धनहरू र तात्कालिक नेपाल" पूर्णिमा २ वर्ष ३ अङ्क १४–२१ पृ.

२. परिशिष्ट, १३ संख्याको अभिलेख

३. वज्राचार्य, "डोयहरू को हुन् ?" पूर्णिमा १ वर्ष ४ अङ्क २०–३१ पृ.

४. गोपालराजवंशावली ३६ क, ५२ ख पत्र, "स. ३८१....वेशाषकृष्ण तृतीया आदीतवार रात्रिस युथुनिमम् डोयिनि माम नाम देवीसके स्याङा....ड्वयिनी मामसके भैरवपट याङ...."

५. "बहि" राष्ट्रिय अभिलेखालय १२२ विषयसंख्या, "दुमाजुयात कर्ष ५ त्वालगार के फं ६ जयन्तिदेवीस कर्ष ३ त्वालगार अप तङ वो सदाशिव मल्ल जुजु कर्ष ५ त्वारगार के फं ६ लक्ष्मीनरसिंह...रो ३ साह्मइ के फं ५ सदाशिव मल्लजु" '(जयन्तीदेवी महेन्द्रमल्लकी आमा हुन् भन्ने कुरा परिशिष्ट ७ संख्याको अभिलेखबाट ज्ञात हुन्छ।)

विशाल मन्दिर बनाउने महेन्द्रमल्लकै समयमा पनि उनको दरबारमा दुमाजुको स्थापना भइसकेको बुझिन्छ । ठ्यासफुहरूमा पनि दुमाजुजात्राको उल्लेख ठाउँठाउँमा आउँछ[1] । दुमाजुको जात्रा चलाउन रानी भुवनलक्ष्मीले बनाइदिएका पूजासामाका भाँडाकुँडा प्राप्त भएका छन् । ती भाँडा-कुँडामा कुँदिएका अभिलेखमा वैशाखसंक्रान्तिमा हुने दुमाजुको जात्रालाई विश्वयात्रा भन्ने संज्ञा दिइएको छ[2] । यही दिन भक्तपुरमा हुने बिस्केट जात्रालाई पनि विश्वयात्रा भन्ने चलन छ ।

नेपालका अरू देवदेवीहरूको जस्तै दुमाजुका पनि भिन्नाभिन्नै मन्दिर छन् । हनूमान्-ढोकाको मूलचोकमा बाहेक काठमाडौं सवलबहालमा पनि उनको निवासस्थान छ । दुमाजुको जात्राको दिन एउटा खट सवलबहालबाट पनि प्रस्थान गर्दछ । वीरहस्पिटलअगाडि टुँडिखेलमा रहेको दुमाजुको पीठमा दुइ खटको समागम हुन्छ । हनूमान्ढोकाबाट ल्याइने दुमाजुको खट मखन, इन्द्रचोक, वटु, महाबौद्धको बाटो गरी टुँडिखेलमा ल्याइन्छ । यो जात्रा बेलुकीपख हुन्छ । दुमाजुको गुठीसंग सम्बद्ध ज्यापूहरूले खट बोकेका हुन्छन् । पूजारी कर्माचार्यहरू धूप बालेर त्यसको पछि लाग्छन् । काठमाडौंमा हुने मछिन्द्रनाथको रथयात्रा आदि धेरैजसा जात्रामा झैं दुमाजुको जात्रामा पनि राजाको प्रतिनिधिस्वरूप राजकीय खड्ग ल्याइनुपर्छ । परन्तु अरू जात्रामा जस्तै गुर्जुको पल्टन जाने चलन यसमा छैन ।

हनूमान्ढोकाबाट आउने खट टुँडिखेलमा आइपुग्नुभन्दा अघि नै सवलबहालबाट ल्याइने खट त्यहाँ ल्याइसकेको हुन्छ । ती दुवै खटमा चीरबुट्टा अङ्कित धातुनिर्मित खोका लिङ्गाकार तीन देवमूर्ति राखिएका हुन्छन् । हनूमान्ढोकाबाट ल्याइने खट त्यहाँ आइपुगेपछि त्यससंगै आएका कर्माचार्यहरू दुमाजुको पीठमा पूजा गर्दछन् । यसै बीच साल्मीहरू आएर दुमाजुको पीठको अगाडि काष्ठनिर्मित सानसाना लिङ्ग गाड्दछन् र पूजा सिद्धिएपछि ढाल्दछन् । त्यसपछि दुमाजुका दुवै खट उठाइन्छन् र हनूमान्ढोकाबाट ल्याएको खटलाई सवलबहालबाट ल्याएको खटले प्रदक्षिणा गर्दछ । यसपछि ती दुवै खट हनूमान्ढोका लगिन्छन् र दरबारको प्राङ्गणमा रातभरि राखिन्छन् । भोलिपल्ट एउटा खट दरवार भित्र्याइन्छ, अर्को सवलबहालमा लगिन्छ । यसरी यो जात्रा सिद्धिन्छ ।

अभिलेखमा यस जात्रालाई विश्वयात्रा भनिएको र साल्मीहरूले लिङ्गो गाड्ने र ढाल्ने काम पनि यस जात्रामा हुने हुनाले दुमाजुको यो जात्रा बिस्केटजात्राकै एउटा रूप हो भन्ने देखिएको छ । बिस्केटजात्रा र यो जात्रा वैशाखसंक्रान्तिकै दिन सम्पन्न गरिने हुनाले पनि यस कुराको पुष्टि हुन्छ ।

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १०४–१०५ पृ; "सं. ८५८ चैत्र शुक्ल ॥ सप्तमिया रात्रिस श्रीबाघमल्ल ठाकुल सिक....जिमपेन्हु कुन्हु वेशाखया मतपूजाया संकल्प यास्यं मतपूजा यातकु श्रीश्रीश्रीतलेजुस । जपपाठ मयातकु ॥ श्रीश्रीदुमाजुयात यातका ॥ घतदान वियकु ॥" (ठ्यासफु)

२. परिशिष्ट, ५३–५४ संख्याका अभिलेख.

# नुवाकोटको भगवतीको जात्रा

काठमाडौंका राजा रत्नमल्ल (वि. सं. १५४१–१५७७)[1] ले नुवाकोटका थकुरी राजाहरूलाई परास्त गरेदेखि नुवाकोट काठमाडौंका मल्ल राजाहरूको अधीनमा थियो। काठमाडौंका अन्तिम मल्ल राजा जयप्रकाशको समयसम्म पनि नुवाकोट उनीहरूकै हातमा रह्यो। श्री ५ पृथ्वीनारायण शाहले वि. सं. १८०१ मा नुवाकोटमा आक्रमण गरी आफ्नो राज्यमा मिलाए[2]। यस वेलादेखि नुवाकोट गोरखाको अधीनमा रहन गयो।

श्री ५ पृथ्वीनारायण शाह भगवतीका भक्त थिए। उनले आफ्नो जीवनको अन्तिम घडीमा भाइभारादारहरूलाई दिएको उपदेशको एक अंशबाट यो कुरो ज्ञात हुन्छ। उनी कुनै बखत सल्ल्यानकोटकी भगवती साक्षात् छन् भन्ने सुनी देवीको आराधना गर्न त्यहाँ गएका थिए। बारीमा पाल टाँगी त्यहीं बास बसी दिनका दिन उनी भगवतीको दर्शन गर्न जान्थे। मन्दिरभित्र सम्म पुजाहारी टहलुवा मात्र जान हुने हुनाले मन्दिरको ढोकासम्म गई उनी पाठपूजा जप गर्दथे। एक दिन सपनामा दुइ हातमा दुइ खड्ग लिएकी सात आठ वर्षकी कन्या कुसुमे पछ्यौराको घुगूटी पारी उनकहाँ आइन्। तिमी कसकी छोरी हौ भनी सोध्दा ती कन्याले पुजाहारीकी छोरी हुँ भनिन् र दुवै खड्ग उनलाई सुम्पिदिइन्। खोकिलाबाट केही कुरा निकाली यो खाऊ तिमीले चिताएको पुऱ्याइदिएको छ, म पनि केही माग्छु भनेर ती कन्या जसै दुइ पाइला गएकी थिइन्, उनको नींद खुल्यो। पृथ्वीनारायण शाहले तुरन्तै आफ्ना ज्योतिषी र त्यस मन्दिरका पुजारीलाई डाकी आफूले देखेको सपनाको कुरा बताए। तिनीहरूले भगवतीको दर्शन पाउनुभएछ भनी भने। त्यसै वेला पृथ्वीनारायणले नित्यपूजालाई चाहिने धूप दीप ध्वज नैवेद्य र सात राँगा सात बोका भोग दिन बोर्लाङ्घाटको आम्दानी र घाटैछेउको टार भगवतीलाई संकल्प गरी गुठी राखिदिए[3]। श्री ५ पृथ्वीनारायण शाहले आफैंले बताएर गएको जीवनवृत्तान्तमा वर्णित यस घटनाले भगवतीप्रति उनको ठूलो श्रद्धा थियो भन्ने कुरा स्पष्ट हुन्छ।

काठमाडौं जितेको केही समयपछि नै श्री ५ पृथ्वीनारायण शाहले हनूमान्ढोका दरवारको एउटा मन्दिरमा नुवाकोट भगवतीको स्थापना गरेको कुरो माथि लेखिसकेका छौं[4]। काठमाडौंको दरवारमा रहेको उक्त मन्दिरबाट वैशाखकृष्ण चतुर्थीको दिन भगवतीको प्रतिमा खटजात्रा

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट, "सं. ६०४ वैशाख शुक्ल एकादसि ।। श्रीरत्नमल्लदेवन एदेश तेल ।।" (ठ्यासफु)

२. वज्राचार्य, "ऐतिहासिक घटनावली" पूर्णिमा ५ वर्ष ३ अङ्क, १६५ पृ., "सं ८३४ भाद्रव ६ आदित्यवार थ्वकुन्हु. . . .नवक्वाथस गोर्षारि हथाल ओल, थ्वन सतिकुन्हु नवक्वाथ गोर्षारिन काल। हथाल ल्वाक पनि जुक्व स्याक मल्वाक्व पितिङाव हम्रो।"

३. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ३१९–३२० पृ.

४. भगवतीको मन्दिर शीर्षक अन्तर्गत यसको चर्चा गरिएको छ।

गरी नुवाकोट लगिन्छ र त्यहाँ केही दिन राखी वैशाखकृष्ण द्वादशीको दिन फेरि दरवारमा भित्र्याइन्छ। यो जात्रा पनि श्री ५ पृथ्वीनारायण शाहले चलाएको हो भन्ने अनुश्रुति छ। मोहिनीविनोद शर्माले संग्रह गर्नुभएको वंशावलीमा यस जात्राको संबन्धमा विस्तारपूर्वक लेखिएको छ। वैशाख कृष्ण चतुर्थीको दिन बेलुका हनूमान्ढोकाको मन्दिरबाट भगवतीको सुनको प्रतिमा खटमा राखेर सर्वप्रथम टेङ्गलटोलमा रहेको भगवतीको मन्दिरनिर बारीमा लगी रातभरि राखिन्छ। त्यहाँ विधिपूर्वक रात्रिपूजा गरिन्छ र भोलिपल्ट बीच बाटामा एक बास बसी षष्ठीको दिन नुवाकोटको सेराबगैंचामा पुऱ्याइन्छ। त्यस बगैंचामा एक दिन राखी अष्टमीको दिन बिहान नुवाकोटको भगवतीस्थानमा लगिन्छ र त्यहाँ रीतअनुसार लामो पूजा हुन्छ। पूजा सिद्धिएपछि काठमाडौंतिर भगवतीको प्रस्थान गराइन्छ। दशमीको दिन बालाज्यूमा पुऱ्याइन्छ त्यहाँ दुइ रात राखिन्छ। द्वादशीको दिन गुठीको नियमबमोजिम पूजा हुन्छ तथा गुठियारहरूलाई भोज खुवाउने काम हुन्छ। वेलुका त्यहाँदेखि खटजात्रा फेरि शुरू हुन्छ। हनूमान्ढोकाबाट गुर्जुको पल्टन र राजप्रतिनिधि स्वरूप खड्ग लिने व्यक्ति पकनाजोलसम्म आई देवीलाई लिन आउँछन्। त्यहाँदेखि बढाईं गर्दै ल्याई इन्द्रचोक मखन सिंहढुबाटको बाटो गरी मन्दिरमा पुऱ्याइन्छ। यस जात्राको बाहिर लगिने भगवतीको सुनको प्रतिमा र मन्दिरमा सधैं रहने प्रस्तरको प्रतिमा बेग्ला बेग्लै छन्।

धार्मिक दृष्टिकोणले विचार गरी हेर्दा भगवतीको यस मन्दिरको रीतिथितिमा नेपालको परम्परा सुहाउँदो मधुर धार्मिक समन्वय देख्न पाइन्छ। नुवाकोटमा रहेको मुख्य भगवती मन्दिरका पुजारी धामी र गुभाजु छन्। तर यहाँ काठमाडौंको मन्दिरमा भने उपाध्याय ब्राह्मण र गुभाजुबाट पूजा चल्छ। ब्राह्मण र गुभाजुहरू जस्तै नेपालको धार्मिक क्षेत्रमा धामीहरूको विशेष स्थान छ। विशेष गरेर पहाडी इलाकामा धामीहरूको ख्याति छ। विक्रमको पन्ध्रौं शताब्दीका कर्णाली प्रदेशका प्रसिद्ध राजा पृथ्वीमल्लको अभिलेखमा धर्मभाणकको रूपमा धामीहरूको उल्लेख आएको छ[1]। यताबाट धामीहरूको प्राचीन परम्पराको बोध हुन्छ। यसरी तीन मुख्य धार्मिक संप्रदायका पुजारीहरूको संयुक्त गतिविधि यस जात्रामा देख्न पाइन्छ। नेपालमा धार्मिक सहिष्णुताको यो राम्रो उदाहरण हो।

## कुमारको खटजात्रा

कुमारको खटजात्रा त्यति साह्रो प्रसिद्ध जात्रा होइन। तर यससंग सम्बन्ध राख्ने ऐतिहासिक सामग्रीहरूको अध्ययन गरी हेर्दा यो एक महत्त्वपूर्ण जात्राको रूपमा देखापरेको छ। वैशाख शुक्ल षष्ठीको दिन सिठी चाड मनाइन्छ, त्यसको भोलिपल्ट सप्तमीको दिन सिठी चाडकै एक अङ्गको रूपमा कुमारको खटजात्रा संपन्न गरिन्छ। काठमाडौं जैसीदेवलनिर कुमारको मन्दिर रहेको छ। नेवारसमाजमा सिठिद्योको देवल भन्ने नामले सो मन्दिर प्रसिद्ध छ। सिठिद्यो षष्ठी-

१. धनवज्र वज्राचार्य, "कर्नालीप्रदेशको ऐतिहासिक रूपरेखा" कर्णालीप्रदेश (काठमाडौं, सामाजिक अध्ययन समुदाय वि. सं. २०२८) ४१ पृ.

देवताको अपभ्रंश हो। नेवारीमा षष्ठीलाई सिठि[1] र देवतालाई द्यो भन्ने चलन छ। कुमारको मन्दिरलाई षष्ठीदेवताको मन्दिर भन्नामा एउटा ऐतिहासिक कारण देखिएको छ।

प्राचीन कालमा बनेका राजदरवारमा एउटै मन्दिरभित्र षष्ठीदेवी र कुमारको मूर्तिसंग-संगै स्थापना गर्ने चलन थियो। उत्तर भारतका विक्रमको सातौं शताब्दीतिरका प्रसिद्ध राजा हर्षवर्द्धनका दरवारिया कवि बाणले लेखेको कादम्बरीनामक काव्यबाट यस कुराको ज्ञान हुन्छ। उक्त काव्यमा राजाले छोरा जन्मेको खुशियालीमा राजदरवारभित्र रहेको मन्दिरमा गएर हलेदोले रंगाएको पीताम्बर पहिरेका षष्ठीदेवी तथा पखेटा फिंजाइरहेको मुजुरको पिठ्युंमा चढेका रातो झण्डा बोकिरहेका हातमा शक्ति (हतियार विशेष) को बींड समातिरहेका कुमारको पूजा गरेको वर्णन लेखिएको छ[2]।

षष्ठीदेवताको संरक्षणमा कुमार हुर्केका थिए। यसैले षष्ठीदेवीको मन्दिरमा कुमारको मूर्ति पनि संगसंगै स्थापना गर्ने चलन प्राचीन कालमा चलेको थियो। षष्ठीदेवीको यस्तो मन्दिर नेपालमा पनि बनेका थिए। हर्षवर्द्धनका सामानकालिक नेपाली राजा अंशुवर्माको हाँडिगाउँको शिलालेखमा राजदरवारमा रहेका देवदेवताहरूको लागि पूजाभाग छटचाउँदै जाँदा षष्ठीदेवकुल (षष्ठीको मन्दिर) को उल्लेख गरिएको छ[3]। यताबाट लिच्छविकालमा बनेका हाम्रो यतातिरका राजदरवारमा पनि षष्ठीदेवीका मन्दिर बनेका हुन्थे भन्ने कुरो बुझिन्छ।

वर्तमान हनूमान्ढोकादेखि जंसीदेवलको सेरोफेरोसम्म लिच्छविकालको प्रसिद्ध राजदरबार दक्षिणराजकुल फैलिएको थियो भन्ने विषयमा हामीले माथि सविस्तार लेखिसकेका छौं। जंसीदेवलनिर रहेको कुमारको मन्दिर दक्षिणराजकुलले चर्चेको भूभागभित्र पर्न आउँछ। यसरी उक्त लिच्छविराजदरवारको इलाकाभित्र पर्ने कुमारको मन्दिरलाई षष्ठीदेवताको मन्दिर भन्ने परम्परा हुनाले कुमारको सो मन्दिर नै वास्तवमा दक्षिणराजकुलको षष्ठीदेवकुल थियो भन्ने कुरो खुल्न आएको छ। प्रारम्भमा कुमारको उक्त मन्दिरमा प्राचीन परम्पराअनुसार षष्ठीदेवी र कुमारको मूर्ति स्थापना गरिएका थिए। पछि कुनै कारणवश षष्ठीदेवीको मूर्ति त्यहाँबाट लुप्त

---

१. "आख्यातरत्नकोश" राष्ट्रिय अभिलेखालय (ताडपत्र) पाँचौं ४१२, विविध २ क, "सप्तत्रिशोभने पञ्चशते नेपालवत्सरे चैत्रकृष्णस्य षष्ठम्यां पक्षदुर्ग ददाह वै।.... संवत् ५३७ चैत्रकृष्ण सिठि पाखचोक्वाठ मे तंग्व भश्मावशेष" (यहाँ षष्ठी भन्नालाई नेवारीमा सिठि भनी लेखिएको छ।)

२. "पार्थिवस्तु....हारिद्रवविच्छुरणपिञ्जराम्बरधारिणीं भगवतीं षष्ठीदेवीं कुर्वता विकचतक्षपुटविकटशिखण्डिपृष्ठमण्डलाधिरूढमालोललोहितपटघटितपताकमुल्लसितशक्तिदण्डप्रचण्डं कार्तिकेयं संघटयता.... अन्यानि सूतिकागृहमण्डनमङ्गलानि सम्पादयता पुरन्ध्रिवर्गेण समधिष्ठितम्....सूतिकागृहमपश्यत्।" (कादम्बरी)

३. वज्राचार्य "लिच्छविकालका अभिलेख" ३०१ पृ., "षष्ठीदेवकुलस्य पु ३ प १"

भयो र कुमारको मूर्ति मात्र बाँकी रहन गयो, परन्तु सो मन्दिरलाई सिठिद्योया छें अर्थात् षष्ठीदेवताको मन्दिर भन्ने चलन कायमै रह्यो भन्ने यताबाट बुझिन्छ।

हाँडिगाउँमा रहेको षष्ठीदेवकुलको उल्लेख भएको अंशुवर्माको उपर्युक्त अभिलेख प्राचीन राजदरवारको व्यवस्थाको लागि जाहिर गरिएको एउटा सनद हो। हो सनद ज्येष्ठ महीना शुक्ल पक्षको षष्ठी तिथिमा जाहिर गरिएको थियो[1]। आजभोलि सिठी चाड यही तिथिमा मनाइन्छ। यताबाट सिठी चाड लिच्छविहरूको समयमा पनि मनाइन्थ्यो भन्ने संकेत मिल्दछ।

आजभोलि सिठी चाड प्रायः चाडकै रूपमा मात्र सीमित छ तापनि प्राचीन कालमा यस दिनको महत्त्व अर्कै किसिमको थियो। देशरक्षा र स्वास्थ्यरक्षा आदि कुरासंग यस चाडको सम्बन्ध रहेको थियो। वर्षाद शुरू हुनुभन्दा पहिले कुवा इनार आदि सफा गर्ने, देवमन्दिर पाटीपौवा आदिको मरम्मत गर्ने काम यस दिनसम्ममा जनताको श्रमदानद्वारा पूरा गरिन्थे। विशेष गरेर गढ किल्लाको मरम्मत गर्ने काम यस दिनसम्ममा पूरा गरिन्थ्यो। भक्तपुर राजदरवारको मूलढोकासंगै रहेको यक्षमल्लको वि. सं. १५१० को अभिलेखमा खाइ पर्खाल र ढोकाका किल्लाको मरम्मत गर्ने काम जनताले र क्वाठनायक (गढ किल्लाको सुरक्षाको लागि खटिएका अधिकारी) ले मिलेर सिठीभन्दा पहिले सिद्ध्याउनुपर्ने कुराको चर्चा परेको छ[2]। यसरी देशरक्षा आदि सम्बन्धी काम पूरा भएको खुशियालीमा सिठी चाड धूमधामसंग मनाइन्थ्यो। कुशल सेनानीको रूपमा कुमारको प्रसिद्धि हुनाले देशरक्षासंग सम्बद्ध यस चाडमा कुमारको पूजा गरिन्छ।

जैसीदेवलको पूर्वोत्तर कुनामा रहेको गृहपङ्क्तिसंग जोडिएर रहेको कुमारको मन्दिर ह्वात्त हेर्दा साधारण गृहस्थीको भवन जस्तो देखिन्छ। त्यस भवनको दोस्रो तलामा सानो अंध्यारो कोठामा काष्ठमय कुमारको मूर्ति पूर्वतिर फर्काएर राखिएको छ। कादम्बरीमा वर्णित षष्ठीको मूर्त्तिसंगै राखिएको कुमार जस्तै काठको सो कुमार पनि पखेटा फिजाइरहेको मुजुरमाथि विराजमान छन्।

कुमारको शिरमा धातुको मुकुट पहिऱ्याइएको छ तथा घाँटीदेखि तल सबै भाग रातो वस्त्रले छोपेर राखिएको छ। वर्षको एक पल्ट हुने महास्नानमा मुकुटसहित सबै वस्त्र र आभरण झिकिन्छन्। त्यस वेला यस मूर्तिको अध्ययन गर्ने अवसर प्राप्त हुन्छ। रातो रङ्गले कुमारको जम्मै शरीर पोतिएको छ। शिरको केशमा मात्र कालो रङ्ग लगाइएको छ। प्रतिवर्ष रङ्ग लगाइने हुनाले कुमारको मूलरूप देख्न पाउनु गाह्रो भएको छ। स्थानीय जनताको भनाइअनुसार हरेक साल लगाएको रङ्गले गर्दा कुनै बखत कुमारको नाकमुखै नछुट्टिने भइसकेको थियो। अहिले-

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३०२ पृ. "संवत् ३० ज्येष्ठशुक्लषष्ठचाम्"
२. धनवज्र वज्राचार्य, "मल्लकालमा देशरक्षाको व्यवस्था र त्यसप्रति प्रजाको कर्तव्य" पूर्णिमा १ वर्ष २ अङ्क २३–२५ पृ.

भन्दा तीस चालिस वर्षअघि मात्र त्यो जम्मै पाप्रो उप्केर आएकोले कुमारको मूर्ति यस्तो देखिएको हो भन्ने तिनीहरूको भनाइ छ।

मुकुट आदि आभरण लगाएको वेला यो मूर्ति मल्लकालमा बनेका अनेकन् विभूषणले युक्त मूर्तिहरूको श्रेणीमा राख्नुपर्ने देखिन्छ। परन्तु महास्नानको समयमा सबै वस्त्र र आभरणहरू हटाइँदा लिच्छविकालका मूर्तिमा पाइने सरलता र स्वाभाविकता यस मूर्तिमा स्पष्ट रूपमा देखा पर्छ। विशेष गरेर संस्कृतसाहित्यमा काकपक्ष भनी प्रसिद्ध बाल्यावस्थामा घाँटीसम्म आउने गरी पालिने कपालसंग कुमारको केशविन्यास तुलना गरी हेर्न योग्य छ। सुरिलो नाक, लाम्चो मुहार, हिस्सी परेको सानो खाने मुख यस मूर्तिका विशेषता हुन्। कुमारको यो मुखाकृति पशुपति वाग्मती पारि रहेको लिच्छविकालिक एकमुखलिङ्गको सुन्दर अनुहारसंग तुलनीय छ[1]। यसरी कलाको दृष्टिले यो मूर्ति लिच्छविकालकै निर्माण हो भन्ने कुरोमा शङ्का गर्ने ठाउँ छैन। कालनिर्णय भइसकेका कुमारका अरू मूर्ति अध्ययन गरिहेर्दा यो कुरो अझ स्पष्ट हुन्छ। पाटन कुम्भेश्वर नजीकै घांय्बुमा रहेको उमामहेश्वरको मूर्तिको एक छेउमा कुमारको मूर्ति कुँदिएको छ। पादपीठमा लेखिएको अभिलेखअनुसार सो मूर्ति वि. सं. १०४३ माघमा निर्माण भएको थियो[2]। जैसीदेवलको काष्ठमय कुमार र घांय्बुको सो कुमारमा निकै अन्तर छ। लिच्छविकालका मूर्तिमा पाइने स्वाभाविकता र सौन्दर्य घांय्बुको कुमारमा पाइँदैन। जैसीदेवलको कुमारमा भने लिच्छविकालका ती विशेषताहरू स्पष्ट रूपमा देखापर्छन्। मल्लकालमा प्रायः सबै देवदेवताका मूर्तिलाई मुकुट लगाइदिएको हुन्छ। लिच्छविकालका मूर्तिहरूमा चाहिं स्वाभाविकतालाई विशेष ध्यान दिइने हुनाले सबै मूर्तिमा मुकुटको प्रयोग गरिएको हुँदैन। यसैले जैसीदेवलको कुमार एउटा रहरलाग्दो बालकको रूपमा निर्माण गरिएको छ। यसमा देवताको रूपभन्दा बालकको स्वाभाविक रूपको चित्रण गर्ने विशेष प्रयास गरिएको हुनाले मुकुट प्रयोग गरिएको छैन। कुमारको धातुको जुन अलग्गै मुकुट छ, त्यो त अहिलेभन्दा केही दशकअगाडि एकजना राणा प्रधानमन्त्रीका रानीले चढाएका हुन्। घांय्बुकुमार प्राचीन मल्लकालका देवता हुनाले बालोचित स्वाभाविकता भन्दा देवताको रूप दिने बढी कोशिश गरिएको छ। यसैले यसमा मुकुटको प्रयोग भएको छ। यसरी मूर्तिकलाको आधारमा विचार गरी हेर्दा जैसीदेवलको कुमार प्राचीन देवता हुन् भन्ने स्पष्ट देखिन्छ। भुईंको चीसोले गर्दा चाँडै मकिएको हुनाले यस मूर्तिको तल्लो भाग चाहिं पछि जीर्णोद्धार गरिएको थियो। यसैले यसको पादपीठनिरको काठ बेग्लै किसिमको छ।

पाटनको रातो मत्स्येन्द्रनाथ र काठमाडौंको सेतो मत्स्येन्द्रनाथमा हुने वार्षिक विधिविधानसंग कुमारको परम्परागत रीतिथिति मिल्दोजुल्दो छ। ज्येष्ठ शुक्ल तृतीयाको दिन पाटन

---

१. मदनजित् सिंह, "हिमालयन् आर्ट" (युनेस्को ई. सं. १९७१ (वि. सं. २०२८) १७४–१७५ पृ., यसमा ग्रन्थकारले शिवको आकृतिलाई भ्रमवश पार्वतीको आकृति भनी लेख्नुभएको छ।

२. तेवारी र अरू, "अभिलेख–संग्रह" (वि. सं. २०२० वैशाख) ९ भाग २४ पृ.

र काठमाडौंको मत्स्येन्द्रनाथमा जस्तै कुमारको महास्नान हुन्छ । त्यस दिन बिहान सबेरै पाटन-बाट दुइ कोश जति पर रहेको थसिगाउँबाट नेकु थर भएका नेवारहरू त्यहाँ आइपुग्छन् र टेकु-दोभानमा गएर दुइटा कलशमा पानी भरेर ल्याउँछन् । ती कलश दिनभरि जैसीदेवलअगाडि रहेको सानो डबलीमा राखिन्छन् । साँझ झमक्क परिसकेपछि नेकुहरूले कुमारलाई उनको मन्दिरबाट ल्याई त्यस डबलीमा राखी सबै गहना र वस्त्र झिकी महास्नान गराउँछन् । महास्नान हेर्न आउने मानिसहरू भने धेरै हुँदैनन् ।

त्यसपछि नेकुहरूले कुमारलाई बोकेर फेरि उनकै मन्दिरमा लगेर राख्छन् । भोलिपल्ट चौथीको दिनमा नेकुहरू त्यहीं कोठामा राखेर पूजा गर्छन् र कुमारलाई रङ्गले पोत्दछन् । पञ्चमी-को दिनसम्म रङ्ग सुकेको हुँदैन र विशेष केही काम गरिंदैन ।

षष्ठीको दिन बेलुका सबै गहना र वस्त्र लगाएर कुमारलाई नेकुहरूले बोकेर फेरि बाहिर ल्याउँछन् र कुमारको मन्दिरसंगै टाँसिएको सानो पाटीमा ल्याएर पश्चिमाभिमुख पारेर राख्दछन् । करीब दुइ घण्टा जति एकजना कर्माचार्य र देवभाजु मिलेर व्रतबन्ध-विवाह आदिमा गर्नुपर्ने जुन पूजा छन्,सोही पूजा त्यहाँ गर्दछन् । त्यस किसिमको पूजा दशकर्मविधान भन्ने नामले प्रसिद्ध छ । पाटन र काठमाडौंको मत्स्येन्द्रनाथमा पनि महास्नानपछि सोही छाँटको पूजा हुन्छ ।

भोलिपल्ट सप्तमीको दिन दश, एघार बजेसम्म पनि कुमार सोही पाटीमा राखिएको हुन्छ । त्यस दिन बिहान निकै मानिसहरू दर्शन गर्न आउँछन् । नेवारहरू सिठीको दिन पकाएका दाल मूंग आदि विभिन्न अन्नबाट बनेका बारा चढाउँछन् । सोही दिन दिउँसो कुमारलाई खटमा राखेर जात्रा गरिन्छ । खटभित्रै एकजना पूजारी पनि बस्दछन् । यो चलन यस खटजात्राको विशेषता हो । बोकेर लगिने अरू कुनै खटमा यसरी मानिस बसेको हुँदैन । ज्यापूहरू सो खट बोकेर शहर घुमाउँछन् ।

सर्वप्रथम सो खटलाई अट्कोनारायणस्थानतिर लैजान्छन् र र त्यहाँ केही बेर रोक्दछन् । त्यसै वेला त्यहाँ एउटा विशेष घटना देख्न पाइन्छ । काठमाडौंबाट चार कोश जति पश्चिमतिर थानकोट जाने बाटोमा रहेको बलम्बु भन्ने गाउँदेखि केही मानिस बाजा बजाउँदै त्यहाँ आइपुग्छन् । तिनीहरूले ठूलठूला बारा ल्याएका हुन्छन् । बलम्बु गाउँको थकालीले कुमारको पूजा गर्छन् र ल्याएका ती पदार्थ देवतालाई चढाउँछन् । त्यसपछि खटजात्रा फेरि शुरू हुन्छ । यस जात्राको बाटो कुमारीको रथजात्राको बाटोसंग मिल्दोजुल्दो छ । जैसीदेवल, लगन, ब्रह्मटोल, हनूमत, कोहिटी, भीमसेनस्थान, मरु, देशेमरुङ्ग्या, टेङ्गल, बाङ्गेमुढा, असन, मछिन्द्रबहाल, इन्द्रचोक हुँदै सो खटजात्रा हनूमान्‌ढोका पुग्दछ । त्यहाँ एकै छिन रोक्दछन् र तलेजुको पूजारीले कुमारलाई पूजा गरिसकेपछि फेरि सो खट अट्कोनारायणको बाटो गरी जैसीदेवल पुऱ्याइन्छ र जात्रा सिद्धिन्छ । यसरी कुमारीजात्राको बाटोसंग कुमारको यो खटजात्राको बाटो एकै प्रकारको देखिएको छ ।

कुमारको यस खटजात्राको थसी र बलम्बु यी दुइ गाउँसंग सम्बन्ध देखिन आएको छ। बलम्बु लिच्छविकालदेखि नै प्रसिद्ध गाउँ हो। पचास साठी घर भएको सानो बलम्बु गाउँभित्र लिच्छविकालका छवटा अभिलेख प्राप्त भएका छन्। मल्लकालमा यी दुवै गाउँ पाटनको इलाकामा पर्दथे। यो कुरा तात्कालिक लेख र स्थानीय शिलालेखबाट ज्ञात हुन्छ[1]।

भक्तपुर, पाटन, कान्तिपुर यी तीनै राज्य भएको समयमा किल्ला रूपमा बनेका यी शहरमा आवतजावत गर्नु जोखिमको काम थियो। कुमारको जात्राको आरम्भ मल्लकालदेखि मात्र भएको भए काठमाडौंको शहरी भागमा हुने जात्रामा पाटनका इलाकामा पर्ने गाउँका मानिसहरूले प्रमुख रूपमा भाग लिनु असम्भव थियो। यस कारण काठमाडौं उपत्यकामा यस्तो स्थिति आउनुभन्दा अघि नै यो जात्रा चलेको हो भन्ने कुरो स्पष्ट छ। यताबाट पनि कुमारको प्राचीनता साबित हुन आउँछ।

प्राचीन कालमा पुरुषको रूपमा पुजिएका केही देवताहरू पछि आएर स्त्रीको रूपमा प्रसिद्ध हुन गएका देखिन्छन्। उदाहरणार्थ लिच्छविकालमा मानेश्वर[2] भनी प्रसिद्ध देवता लिच्छविकालपछि मानेश्वरीको रूपमा[3] देखिएको छ। यसै गरी कुमारको स्त्रीरूप कुमारी मान्ने चलन चलेको देखिन्छ। प्रतिमालक्षणमा मातृदेवता स्थापना गर्ने प्रसङ्गमा ब्रह्माणीको मूर्ति बनाउँदा ब्रह्माको मूर्त्ति जस्तै गरी बनाउनू, माहेश्वरीको मूर्ति बनाउँदा शिवको मूर्ति जस्तै

---

१. गोपालराजवंशावली ५१ ख पत्रमा यस विषयमा यस्तो उल्लेख पाइन्छ– "स. ४६७ अश्विनी शुद्धि ३ श्रीदेवलदेविस वो अनखराम महाथस वो जग्स्यं मनिगलया राज काया, मुह्लिखा, कितपुरि, वलम्बु, येटाक्वाठ ख्वयंपः ॥" थसि द्यननी गणेशस्थानमा रहेको पाटनका राजा योगनरेन्द्रमल्लको राज्यकालमा राखिएको अप्रकाशित अभिलेखबाट थसि पाटनमा पर्दथ्यो भन्ने बुझिन्छ। त्यसमा यस्तो लेखिएको छ– "संवत् ८१९ चैत्रमासे शुक्लपक्ष। अस्तम्यां तिथि पुनवशुनक्षत्रे शुभजोगे जथाकरणमुहुत्तरे अंगारवारस श्रीसुवर्णचक्र सिंह तया ॥.... श्रीश्रीयोगनरेन्द्र मल माहाराजाधिराज ॥"

२. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३२० पृ. "मानेश्वरस्य पु ३५१"

३. मानेश्वरीको पहिलो उल्लेख वि. सं. १२८० मा सारिएको भारतीय नाटचशास्त्र (राष्ट्रिय अभिलेखालय दोस्रो २१५) मा आएको छ। त्यहाँ यस्तो लेखिएको छ– "श्रेयोस्तु ॥ स्वस्ति-अमरक्रीडाकेतुभट्टारकपादानुगृहीनित्याराधमाना भगवती श्रीमानेश्वरीपादपङ्कज ॥ राजाधिराजपरमेश्वरपरमभट्टारक । रघुवंसश्रीमदभयमल्लस्य विजयराज्ये ॥ ॥ कुमारश्रीअनेकमल्लदेवस्य पुस्तकमिदं लिखापितं ॥ ॥ सम्वत् ३४४ कार्तिकशुक्लपूर्ण्णमास्यां ॥ वृहस्पतिवारे ॥ स्वमदिने ॥ भरतशास्त्र संपूर्ण समाप्तमिति"

गरी बनाउनू, कुमारीको मूर्ति बनाउँदा कुमारको मूर्ति जस्तै गरी बनाउनू भनी लेखिएको छ[1] । कुमारीको वाहन र कतिपय आयुध कुमारको वाहन र आयुधसंग मिल्दाजुल्दा हुन्छन् भन्ने कुरो मल्लकालमा लेखिएको ग्रन्थबाट बुझिन्छ[2] । यस कारण मानेश्वरको मानेश्वरी जस्तै कुमारको स्त्रीरूप कुमारी हुन् भन्ने कुराको ज्ञान हुन्छ ।

बालिकालाई कुमारीको रूपमा पूजा गर्ने चलन प्राचीन मल्लकालदेखि नै चलेर आएको देखिन्छ । पछि जयप्रकाशले कुमारीको रूपमा पूजा गरिएको बालिकालाई रथमा राखी शहर घुमाउने जात्रा चलाए । कुमार जस्तै कुमारी पनि राजदरवारभित्रकी देवी थिइन् । कुमारीचोक आजभोलि हनूमान्ढोका दरवारबाट पृथक् छ तापनि मल्लकालमा सो चोक हनूमान्ढोका दरवार अन्तर्गत थियो । कुमारीजात्रा प्रारम्भ गर्ने ठाउँ दरवारभित्रै पर्दथ्यो । यस कारण कुमारको खटजात्रा गर्ने प्राचीन परम्परासंग कुमारीको सम्बन्ध देखिन आएको छ । जयप्रकाशले कुमारीजात्राको चलन चलाउँदा कुमारको जात्राकै अनुकरण गरी जात्रा हिंडाउने बाटो निर्धारण गरेको देखिन्छ ।

## गाईजात्रा

नेवारीमा गाईजात्रालाई 'सायात' भनिन्छ । श्रावणशुक्ल प्रतिपदाको दिन यो जात्रा संपन्न गरिन्छ । विक्रमको पन्ध्रौं शताब्दीमा लेखिएको गोपालराजवंशावलीमा सायात (गाई जात्रा) को उल्लेख आएको छ[3] । यताबाट यस जात्राको प्राचीनताको बोध हुन्छ । नेपाल उपत्यकामा तीन मल्ल राज्य स्थापना भएको समयमा लेखिएका ठ्यासफुहरूमा पनि गाईजात्राका चर्चा पाइन्छन्[4] ।

---

१. डि. एन्. शुक्ल 'वास्तुशास्त्र' २ भाग २३२ पृ.,
"अथातः संप्रवक्ष्यामि मातृणां स्थापनं परम् ।.
व्रह्माणीं व्रह्मवत् कुर्यान् महेशीमीश्वरात्मिकाम् ।
कुमारवच्च कौमारीं विष्णुवच्चैव वैष्णवीम् ।।"

२. "कुमारीपूजाविधि" राष्ट्रिय अभिलेखालय पहिलो ७५३, ३४१ विषय संख्या २७० ख–२७१ क पत्र; "महामयूरमारूढं कौमारी बालरूपिणी । रक्तवस्त्रपरिधानां रक्तमांसावशासिनि ।। रक्तपुष्परतां देवीं सिंदूरारुणविग्रहं रक्तवत्का रक्तनेत्री मुण्डमालाविलंविनी शक्ति शूलकरा देवी विन्दुकापालधारणी कोलाक्षेत्र गता देवी कौमारी च नमोस्तु ते ।।"

३. गोपालराजवंशावली ६० क, ६१ पत्र, "स ५०३ फाल्गुण शुद्धि तृतीया वृहस्पतिवारचा श्रीधर्मदेवठाकुस विवाह दिन . . . .स ५०४ जेष्ठशुदि १५ ।। ।। शुभविवाह जुदं गुणलान झरे वोये माल्व. . . .सायात कोन्हु ज्वांपानस थङाव मुललन्न यो ठंङ मुलखास चोय"

४. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट १०५–१२१ पृ. "सं. ८५८ श्रावन शुक्ल पूर्णिमासि घटि १ पादु तुत जुयाव द्वितीया उदय कुन्हु सायात . . . ." "श्रावण कृष्ण ।। प्रतिपदा कुन्हु सायत ।। कोमतीस पुषुडी यात" (ठ्यासफु)

काठमाडौं, भक्तपुर, देउपाटन, थानकोट आदि विभिन्न शहर र गाउँमा गाईजात्रा संपन्न गरिन्छन् । तत्तत् स्थानका व्यक्तिहरू आफ्-आफ्नो प्रदेशमा मनाइने गाईजात्रामा उल्लासपूर्वक भाग लिन्छन् । तिनीहरूको रीतिस्थितिमा केही भिन्नता पाइन्छन् तापनि मौलिक रूप एउटै देखिन्छ ।

काठमाडौंमा हुने गाईजात्रामा मानिसहरू आफू गाईको रूप लिएर गाईलाई अघिअघि लाएर शहरको निश्चित भागमा परिक्रमा गर्दछन् । दिवङ्गत पितृहरूको संझनामा यो जात्रा मनाइने हुनाले आफ्नो परिवारको कुनै सदस्यको मृत्यु भएको वर्षमा मात्र त्यस परिवारले गाई बनेर शहर घुम्न मान्छे पठाउँछ । यस कारण सबैले हरेक वर्ष यस जात्रामा भाग लिनु आवश्यक मानिंदैन । बौद्धमार्गीहरूको यस जात्रासंग कुनै सम्बन्ध छैन । शिवमार्गीहरू मात्र यस जात्रामा भाग लिन्छन् ।

स्वर्ग जाने बाटोमा पर्ने वैतरिणी नदी तर्दा जसले गाईको पुच्छर समातेर नदी तर्ने अवसर पाउँछ त्यसले मात्र पार उत्रन सक्दछ, पूर्वजन्ममा गाईको सेवा नगर्ने व्यक्तिलाई गाईले मद्दत दिंदैन र पार उत्रन नसकी अलपत्र पर्छ भन्ने लोकधारणा छ । गाईलाई अघि लाएर शहर घुम्ने प्रथा यही धारणामा आधारित देखिन्छ । यसैले दिवङ्गत आत्मालाई दुःख नहोस् भन्ने कामनाले पूजनीय गोमातालाई प्रसन्न पार्न यस जात्रामा गाईप्रति श्रद्धाभाव प्रकट गरिन्छ ।

यस जात्रामा गाईको रूप लिएर जाने व्यक्तिलाई भव्यरूपले सजिसजाउ गरिएको हुन्छ । गाई बनेर जाने व्यक्ति प्रायः किशोर अवस्थाको हुन्छ । उसको शिरमा गाईको चित्र लेखिएको मुकुट पहिऱ्याइएको हुन्छ । आँखामा गाजल, गालामा लाली लगाइदिएर उसलाई सिंगारिन्छ तथा उसको कम्मरमा पटुका बाँधेर त्यसको टुप्पो दायाँबायाँ भुईंसम्म छुने गरी लत्त्याइ-एका हुन्छन् । कोही कोही गाई बनेर शहर घुम्नाको सट्टा भिक्षा माग्न हिंडेको जोगीको रूपमा पनि शहर घुम्ने गर्दछन् ।

यस जात्रामा भाग लिनेहरूले हनूमान्ढोकाको प्राङ्गण भएर जानु अनिवार्य छ । हरेक साल शहरमा मृतव्यक्तिहरूको मोटामोटी गणना गर्न उहिलेका राजाहरूले यो चलन चलाएका हुन् भन्ने किंवदन्ती छ ।

राजपरिवारको कुनै सदस्यको मृत्यु भएको वर्ष जातृहरू राजपरिवारप्रति समवेदना प्रकट गर्न सिंहढोकाबाट हनूमान्ढोका दरबारमा पस्छन् र त्रिशूलडबली, मूलचोक, नासलचोकको बाटो गरी सुवर्णद्वारबाट निस्कन्छन् । दरबारबाट तिनीहरूलाई फलफूल र मिठाइ वितरण गरिन्छ ।

गाईजात्रा बिहान सबेरैदेखि शुरू हुन्छ र अपराह्न हुनुभन्दा अघि नै समाप्त हुन्छ । तर यस दिन अपराह्नतिर मनोरञ्जनको लागि गाईजात्राकै बाटो गरी विचित्र भेषभूषामा संवाद र अभिनयद्वारा दर्शकहरूलाई हँसाउँदै हिंड्नेहरूको ताँती चल्दछ । यस्ता प्रहसन गाईजात्राको

दिनदेखि सात दिनसम्म चलाइन्छन् । त्यो हेर्न मन्दिरको पेटी, सत्तलपाटीहरूमा दर्शकहरू जम्मा भएका हुन्छन् । त्यस्ता हरेक प्रहसन हनूमान्ढोकाको प्राङ्गणमा आउनैपर्ने चलन हुनाले त्यहाँ बढी भीड जम्मा भएका हुन्छन् । मल्लहरूको समयमा झ्यालझ्यालमा बसेर राजपरिवारका सदस्यहरू ती प्रहसन हेरी मनोविनोद गर्दथे तथा जनताहरू व्यङ्ग्यात्मक प्रहसनद्वारा राजपरिवार-लाई देशको परिस्थिति बोध गराउँथे भन्ने अनुश्रुति प्रसिद्ध छ ।

## चाँगुनारायणको जात्रा

भक्तपुर शहरबाट दुइ कोश जति उत्तरतिर डाँडामा चांगुनारायणको मन्दिर रहेको छ । यस मन्दिरभित्र रहेको गरुडासन विष्णु नेपालका प्राचीनतम देवताहरूमध्ये पर्दछन् । त्यस मन्दिर-को मूलद्वार नजीकै रहेको मानदेव (वि. सं. ५२०–५६२ आ.) को स्तम्भाभिलेखमा चांगुनारा-यणको स्तुति लेखिएको छ[1] । राजा मानदेवको समयभन्दा अघिदेखि नै चाँगुनारायणको प्रसिद्ध भइसकेको कुरो त्यस स्तुतिबाट बुझिन्छ । सो स्तम्भाभिलेख नेपालीहरूले राखेर गएका अहिलेसम्म पाइएका अभिलेखहरूमा सबभन्दा पुरानो मानिएको छ । यसरी नेपालको प्रामाणिक इतिहास शुरू हुनुभन्दा अघिदेखि नै यस देवताको स्थापना भइसकेको कुरो प्रमाणित हुन्छ[2] ।

चाँगुनारायणको मूल प्रतिमा प्रस्तरको छ तापनि त्यसको खोलको रूपमा बनाइएको कवचमूर्ति सुनको छ । राजा अंशुवर्मा (वि. सं. ६६२–६७८ आ.) ले सो कवचमूर्तिको जीर्णो-द्धार गरेका थिए । सो कवचमूर्तिको पादपीठमा अङ्कित अभिलेखबाट यो कुरो थाहा पाइन्छ[3] । भगवान् नारायणको पहिलेको सुनको कवच र गरुड कालक्रमले जीर्ण भएको देखेर राजा अंशुवर्माले पुरानै नमूनाबमोजिम सम्पूर्ण जीर्णोद्धार गर्नुभयो भनी त्यहाँ लेखिएको छ । अभिलेखयुक्त धातुको सो कवचमूर्ति नेपाली धातुकलाको इतिहासमा निकै महत्त्वपूर्ण देखिएको छ । योभन्दा पुरानो अरू कुनै धातुनिर्मित नेपाली कलाकृति प्राप्त भएको छैन । यसरी चाँगुनारायणको सो कवचमूर्ति नेपालको सबभन्दा पुरानो धातुनिर्मित कृतिको रूपमा देखापरेको छ ।

तर मल्लकालमा आएर सो कवचमूर्तिको शिरोभाग जीर्ण भयो र राजा भूपालेन्द्रको समयमा वि. सं. १७५० मा राजमाता ऋद्धिलक्ष्मीले त्यसको जीर्णोद्धार गरिन् । यसरी जीर्णो-द्धार गर्दा त्यस कवचमूर्तिको घाँटीभन्दा माथि शिरोभाग मात्र नवीकरण गरिएको थियो । घाँटीभन्दा तलको भाग पूर्ववत् नै रह्यो । यो कुरा चाँगुनारायणस्थानमा रहेको ऋद्धिलक्ष्मीको शिलालेख[4] र

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" १० पृ.

२. वज्राचार्य र अरू, "इतिहास–संशोधनको प्रमाणप्रमेय" ७३–७४ पृ.

३. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३१७ पृ.

४. बुद्धिसागर पराजुली, " काष्ठमण्डपाधिराज–भूपालेन्द्रमल्लमातुर्देव्या ऋद्धिलक्ष्म्याः शिलालेखः" संस्कृतसन्देश (वि. सं. २०१० आश्विन) १ वर्ष ६ अंक ३६–३७ पृ.: "नेपाले वर्षवर्ये श्रुतिहिमकिरणेभोन्नते मासि पौषे चक्रेऽग्निस्थापनं सा रसवन f(मते

तात्कालिक ठ्यासफु[1] मा स्पष्ट शब्दमा लेखिएको छ। यसरी त्यस कवचमूर्तिको अभिलेख अङ्कित पादपीठ, गरुड तथा विष्णुको काँधसम्मको भाग अंशुवर्माको समयमा बनेका र शिरोभाग मात्र पछि बनेको देखिएको छ।

आजभोलि दिनप्रतिदिन चाँगुनारायणलाई स्नान गराउँदा शिरोभाग मात्र झिकी जलहरीमा राखिन्छ, स्नान सिद्धिएपछि फेरि सो शिर यथास्थानमा जोडिन्छ। यो चलन राजमाता ऋद्धिलक्ष्मीले वि. सं. १७५० मा गरुडनारायणको नयाँ शिर बनाउनुभन्दा अघिदेखि नै चलेर आएको थियो। ठ्यासफुको अर्को वर्णनबाट यो कुरो ज्ञात हुन्छ। वि. सं. १७३२ पौष शुक्ल पञ्चमीको दिन सधैं झैं विष्णुको शिर झिकेर घीउ र महद्वारा स्नान गराउँदा शिर झिकेको वेलामा घाँटीमा लाएको कण्ठी (गहनाविशेष) समेत तल खस्यो र यो अशुभ घटना हो भन्ने संझी शान्ति-स्वस्ति गरेको कुरो त्यहाँ लेखिएको छ[2]। यताबाट वि. सं. १७५० मा नयाँ शिर फेरिनुभन्दा अघिदेखि नै गरुडनारायणको शिर झिक्नु हुने गरी बनाइएको रहेछ भन्ने बुझिन्छ। दिनप्रतिदिन शिर झिकेर स्नान गर्ने चलन अघिदेखि चलेर आएको हुनाले नै शिर र घाँटीनिरको भाग खिइँदै जानु स्वाभाविक थियो। यसैले अठारौं शताब्दीमा सो कवचमूर्ति जीर्णोद्धार गरिहाल्नुपर्ने परिस्थितिमा पुगेको देखिन्छ। शिर गिद अघिदेखि भिन्नाभिन्नै गरी बनाइएको हुनाले नै राजमाता ऋद्धिलक्ष्मीले देवताको शिरोभाग मात्र नवीकरण गर्नु अनुचित नसम्झेको देखिन्छ।

यसरी चांगुनारायणको शिर गिद छुट्टिनामा के हेतु थियो भन्ने विषयमा नेपालमाहात्म्यमा एउटा मनोरञ्जक कथा लेखिएको छ– चण्डनामक दैत्यका परममित्र एकजना ब्राह्मणलाई सुदर्शन चक्रले प्रहार गरी मारेको हुनाले विष्णुलाई ब्रह्महत्याको पाप लाग्यो र ती ब्राह्मणका गुरु शुक्राचार्यबाट श्राप पाएर भगवान् विष्णु चाँगुको डाँडामा रहेको चम्पक वृक्षको मुनि आएर बस्न

. . .) नव्यं शीर्षं विधाय व्यधित सह हरेस्तोरणेन प्रतिष्ठां, तत्पश्चान्मासि तस्मिन् रवि-तिथिसहिते होमपूर्ति चकार ॥४॥' . . . संवत् ८१४ फाल्गुणमासे शुक्लपक्षे सप्तम्यान्तिथौ . . . .थ्व कुन्हु चोया दिन जुरो."

१. तेवारी, "भूपालेन्द्र मल्ल" पूर्णिमा १ वर्ष ३ अङ्क ४१ पृ. "स. ८१४ पौषकृष्ण, षष्ठमी, हस्तनक्षत्र, शुक्रम्भयोग आदित्यवार, थ्व कुन्हु, श्रीश्रीभूपारेन्द्रमल्ल जुजुन, चंगुस, कोटचाहुति जज्ञे आरंभ यात अग्निस्थापन, माघशुक्ल दशमी, रोहिणीनक्षत्र ऐन्द्रयोग वृहस्पतिवार, थ्वकुन्हु श्रीश्रीश्रीगरुडनारायणया शिर ह्रिर ह्लापाया लिकायाव्गो तोरन तर, ब्राम्हुण भोज नकु, दक्षिणा छमोहोर ह्मन पिय ङान्हुतो जज्ञे याङाव्गो फाल्गुणशुक्ल, सप्तमी, रोहिणीनक्षत्र बुधवार थ्व कुन्हु जज्ञे पूर्ण यात ॥" (ठ्यासफु)

२. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष, ४ अङ्क २५ पृ., "सम्वत् ७९६ पौष शुक्ल ॥ पंचमी शनैश्चरवार, थ्वकुन्हु श्री ३ गरुडनारायण नित्यपूजा याङ ह्याव शिर जरधरिस तयाव घेर कस्तिन स्नान यातकाव शिर ह्लङा वेलस गतपोतन सुद्धान कंठि कुतिङ वव जुरो ॥ थ्वयान स्वन्हु कुन्हु, सहश्राहुति यज्ञ, महावरि सगत सुद्धान वाक ॥"

लागे। त्यहाँ चाँगुडाँडामा एउटा ऋषि बस्दथे। त्यस ऋषिको गाई दिनप्रतिदिन सो चम्पकवृक्षको मुनि गएर चर्दथ्यो। भगवान् विष्णुले प्रतिदिन गाईको दूध चोरेर खान लागे। ऋषि रीसले चूर भएर हातमा खड्ग लिएर आई दूध चोर्नेको टाउको काटिदिए। दूध चोर्ने त भगवान् विष्णु पो रहेछन् भन्ने कुरो ऋषिलाई पछि मात्र थाह भयो। आफूले नजाती काम गरेकोमा ऋषिलाई साह्रै पश्चात्ताप लाग्यो। शुक्राचार्यको श्रापद्वारा तिमीले मेरो टाउको काटेका हौ भनी विष्णुले उनलाई संझाए। त्यसै बेलादेखि चाँगुनारायणको शिर छुट्टिएको हो भन्ने भावको कुरो उक्त माहात्म्यमा लेखिएको छ[1]। नेपालमाहात्म्य कुन बेला लेखिएको हो भन्ने कुरो निश्चित छैन। यस कारण यो कथा कहिलेदेखि चल्यो भन्ने विषयमा इदमित्थं गरी भन्न सकिंदैन।

चाँगुनारायण हनूमान्ढोका ल्याउने जात्रा वर्षको दुइपल्ट मनाइन्छ। तिनमा पहिलो श्रावणशुक्ल द्वादशीको दिन र दोस्रो पौषशुक्ल पूर्णिमाको दिन संपन्न गरिन्छ। ती दुवै जात्रामा लक्ष्मी र सरस्वतीसहित चाँगुनारायणको प्रतिनिधित्व गर्ने तीनवटा चाँदीका कलश बोकेर ल्याइन्छन्। चाँगुडाँडाको पश्चिमपट्टिको ढोकाबाट ओर्ली शङ्खदह, बौद्ध, चाबहिल, सानो गौचरण, नक्साल भगवती, नागपोखरी, कमलादी, जमलको बाटो गरी रानीपोखरीको उत्तरपट्टि रहेको पाटीमा ल्याएर ती कलश राखिन्छन्। हनूमान्ढोका दरवारबाट गुर्जुको पल्टन र राजकीय खड्ग लिने राजप्रतिनिधि आई चाँगुनारायणलाई लिन आउँछन्। त्यहाँदेखि बढाईं गर्दै लगी कमलादी, असन, इन्द्रचोक, मखन भएर हनूमान्ढोका दरवारको सिंहढोकामा पुऱ्याइन्छ। मल्लकालमा राजा र राजपरिवारका व्यक्तिहरू रानीपोखरीको कुनासम्म आफैं आई स्वागत गर्न आउँथे। यसलाई पुष्टि गर्ने उल्लेख ठ्यासफुमा पाइन्छ[2]। सिंहढोकामा विशेष पूजा हुन्छ। त्यस बेला कुमारी पनि ल्याइराखेको हुन्छ तथा कुमारीलाई पनि संगै पूजा गरिन्छ। पूजा सिद्धिएपछि त्यहाँबाट भित्र लगी तलेजुको मन्दिरको दक्षिणपट्टि मूलचोकको पूर्वोत्तर कुनामा रहेको भवनको भुइँतलामा लगिन्छ। त्यहाँ धातुनिर्मित सानो सिंहासनमा ती कलश राखिन्छन् र राजोपाध्याय ब्राह्मणद्वारा विधिपूर्वक पूजा गरिन्छ। पूजापछि प्रसाद वितरण हुन्छ। तदनन्तर विष्णुमती नदीमा लगी कलशको पानी सेलाइन्छ र कलश फेरि चाँगुको मन्दिरमा फर्काइन्छ।

धातुनिर्मित उक्त सिंहासनमा राजा प्रतापमल्लको अभिलेख कुँदिएको छ। वि. सं. १७२८ श्रावणमा राजा प्रतापमल्लले सो सिंहासन बनाउन लगाएका थिए। गुनपोपोमा श्री र लक्ष्मीसहित चाँगुनारायणको स्वागत गरेर ल्याउँदा ती देवदेवीहरूलाई पूजा गर्न यो सिंहासन

१. नेपाल–माहात्म्य (काठमाडौं, नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान वि. सं. २०२८) दोस्रो अध्याय ११–२१ पृ.

२. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ अङ्क ३५ पृ.; "सं ८३४ पौखशुक्ल पूर्ण्णमाशि आदित्यवार थ्वकुन्हु श्री २ जयभास्कर मल्ल जुजु मयाहोस सनान बिज्याय धक पस्थान यात धर्म्मथिरिस. . . .थ्वकुन्हु श्री ३ चगुनाजु देव विज्यातकर जुजु र स्वर मबिज्याक माजुं र स्वर बिज्यात ॥"

बनाइएको हो भनी त्यसमा लेखिएको छ। प्राचीन नेवारी भाषामा राजदरवारलाई पो भनिन्थ्यो। यस कारण गुनपोपोको अर्थ गुनपो नामक राजदरवार भन्ने हुन्छ। हनूमान्ढोकाको प्राचीन नाम गुनपो राजकुल थियो भन्ने विषयमा हामीले माथि लेखिसकेका छौं। गुनपो राजदरवारमा चाँगु-नारायण भित्र्याएको उल्लेख तात्कालिक ठ्यासफुहरूमा पनि ठाउँठाउँमा टिपिएका छन्। हनू-मान्ढोका दरवारको प्राचीनता बुझ्न यस कुराले ठूलो सहायता पुऱ्याएको छ[1]।

साधारणतः श्रावण र पौषमा हुने चाँगुनारायणको दुवै जात्रा एकै किसिमका छन् तापनि तिनको अभिप्राय भने बेग्लाबेग्लै देखिएका छन्। श्रावणमा हुने जात्रा राजदरवारमा चाँगुनारायण आई राजालाई दर्शन दिन आएको रूपमा मनाइन्छ। पौषमा हुने जात्राचाहिं चाँगुनारायणले नेपालउपत्यका छोडी बाहिर जानलाग्दा तलेजु भवानीले अनिष्ट हुन लाग्यो भन्ने बुझी उनलाई संझाई बुझाई फेरि चाँगुडाँडामै फर्काइदिएको घटनालाई संझेर सम्पन्न गरिन्छ। पौषमा हुने जात्रामा मछिन्द्रबहाल, इन्द्रचोक आदि विभिन्न ठाउँमा फुटेका भाँडाहरूको ढोका बनाइएका हुन्छन्। उपत्यका छोडेर जान लागेका गरुडनारायणलाई अपशकुन देखाई फेरि चाँगुकै डाँडामा फर्काउने अभिप्रायले त्यसो गरिएको हो भन्ने कथा प्रसिद्ध छ। श्रावणमा हुने जात्रामा चाहिं फुटेका भाँडाको ढोका बनाइँदैन, किनभने सो जात्रा राजाले चाँगुनारायणलाई आफ्नो दरवारमा स्वागत सत्कार गरी बोलाएको कथासंग सम्बद्ध छ। सो लोककथाअनुसार परापूर्वकालमा कुनै राजाको समयमा सरुवा रोग फैलिएर असंख्य मानिसको मृत्यु हुँदा अनेकन् उपाय गर्दा पनि सो रोगको उपद्रव शान्त भएन। एक दिन राजालाई सपनामा चाँगुनारायणले दर्शन दिई चाँगुडाँडामा उम्रेका दूधे कर्कलो मलाई चढाई शान्तिस्वस्ति गऱ्यौ भने रोगको उपद्रव शान्त हुन्छ भनी उपदेश दिए। रोगशान्तिको लागि राजाले विष्णु भगवान्ले भने जस्तै गरी धूमधामसंग शान्तिस्वस्ति गरे। त्यो दिन श्रावण शुक्ल द्वादशीको दिन थियो। यसैले त्यस वेलादेखि ती राजाले हरेक वर्ष चाँगुनारायणलाई जात्रा गरेर ल्याई दरवार भित्र्याउने रीत चलाए इत्यादि। यस सम्बन्धमा गोपालराजवंशावलीमा पनि छोटकरीमा केही लेखिएको छ; जुन यस प्रकारको छ–

"चङगुया दुदु फंकया हेतु श्रीप्वस्येदेव राजास प्रज्यास असहन देशस मह्लं डव, थ्वतेस सातक याङा ह्मंग्वस क्यंङा। गुणिलाथोव दुह्निसि कोन्हु दुदु फंकन खुंञो थ्वन द्वारस तेये गुह्लतो एका पलका सखी अभिसेष श्रपरक्षा, मह्लं निवारण।" (३० क पत्र)

(चाँगुको दूधे कर्कलोको कारणले गर्दा श्रीप्वस्यदेव (पुष्यदेव) राजाको पालामा.... देशमा महामारी फैलियो। यसको लागि शान्तिस्वस्ति गर्ने कुरा सपनामा देखाइयो। श्रावण शुक्ल द्वादशीको दिन दूधे कर्कलो पकाउनुपर्छ, त्यसलाई द्वारमा राख्नुपर्छ, नौ दिनसम्म सर्स्यु, रायोको बीज र पिंडालुद्वारा स्नान गर्नुपर्छ। यसो गर्दा श्रापबाट रक्षा हुन्छ, महामारी हट्दछ।)

---

१. यसको सविस्तार चर्चा "प्राचीनता" शीर्षकमा गरिसकेका छौं।

यसरी श्रावण शुक्ल द्वादशीमा चांगुनारायण हनूमान्ढोका दरवार भित्र्याउने जात्राको दूधे कर्कलोसंग सम्बन्ध हुनाले आजभोलि पनि त्यस दिन जात्रा चलाउनुभन्दा अघि चांगुनारायण-लाई पूजा गर्दा दूधे कर्कलो चढाएर अर्घ दिने परम्परागत रीति चलेको छ। यस सम्बन्धमा यो विशेष महत्त्वको कुरो छ ।

विक्रमको पन्ध्रौं शताब्दीमा राजा स्थितिमल्लको समयमा गोपालराजवंशावली लेखिएको थियो भन्ने निश्चित छ । यसको एक शताब्दी जति पछि स्थितिमल्लका पनाति रत्नमल्लले काठमाडौंमा आफ्नो एकाधिपत्य जमाएदेखि मात्र काठमाडौंका मल्ल राजाहरूको शासन शुरू हुन्छ । यसरी तिनीहरूको शासन शुरू हुनुभन्दा धेरै अघि लेखिएको गोपालराजवंशावलीमा गुनपो राजकुलमा चांगुनारायण भित्र्याउने रीतिसंग सम्बन्ध राख्ने कथाको उल्लेख भएको देखिनाले यस दरवारको प्राचीनतामा अझ बढी पुष्टि मिलेको छ। आजभोलि जुन तिथिमा चांगु-नारायण हनूमान्ढोका दरवार भित्र्याउने जात्रा संपन्न गरिन्छ,सोही तिथिको उल्लेख त्यहां भएको छ। यस सम्बन्धमा यो कुरो विशेष ध्यान दिन योग्य छ।

## इन्द्रध्वजोत्सव

इन्द्रध्वज उठाएर उत्सव गर्ने परम्परा हाम्रो यता निकै प्राचीन समयदेखि चलेर आएको देखिन्छ । महाभारत, विष्णुधर्मोत्तर पुराण, वृहत्संहिता आदि प्राचीन ग्रन्थमा यसको वर्णन पाइन्छ । यस सम्बन्धमा एक मनोरञ्जक कथा उपर्युक्त ग्रन्थमा दिइएका छन्– दैत्यहरूदेखि हार खाएर देवताहरू इन्द्रलाई अघि लगाएर विष्णुकहां शरण परी सहायता माग्दा विष्णुले एउटा ध्वजा दिएर यो ध्वजा लिएर युद्ध क्षेत्रमा गयौ भने दैत्यहरूले तिमीहरूलाई हराउन सक्दैन भनी विष्णुले भने । इन्द्र आदि देवगणले विष्णुले भने जस्तै गरेको हुनाले देवताहरूको विजय भयो । पछि इन्द्रले प्रसन्न भएर सो ध्वजा चेदि देशका राजा उपरिचर वसुलाई दिए । एक वर्षपछि ती राजाले इन्द्रको संमानमा त्यस ध्वजालाई भुईंमा गाडी पूजा गरे । त्यसै वेलादेखि उपरिचर वसुको उदाहरण लिई अरू राजाहरूले इन्द्रको लिङ्गो गाड्न लागे[1] ।

कालिदासको रघुवंश र अश्वघोषको सौन्दरानन्दमा पनि प्रसङ्गवश इन्द्रध्वजको चर्चा परेको छ । यताबाट त्यस वेला भारतवर्षमा इन्द्रध्वजोत्थापन गर्ने चलन खूबै चलेको देखिन्छ। इस्लामको प्रवेश भएपछि हिन्दु राजाहरूको चेतना हराउँदै गएको हुनाले भारतमा यो महोत्सव घट्दै गयो र अब लोप नै भइसकेको छ[2] । तर नेपालमा इस्लामको आतङ्क

---

१. ऐ. शि. बाबुराम आचार्य, "इन्द्रजात्रा" हिमवत्संस्कृति (काठमाडौं, हिमवत्संस्कृति–सञ्चालक समिति, वि. सं. २०१६ पौष) १ वर्ष २ अङ्क १९ पृ., नयराज पन्त, "इन्द्रजात्राको विषयमा ऐतिहासिक शिरोमणि श्रीबाबुराम आचार्यज्यूसंग प्रार्थना" पूर्णिमा (वि. सं. २०२६ माघ) ६ वर्ष, ४ अङ्क, ३००–३०२ पृ.

२. आचार्य, "इन्द्रजात्रा" हिमवत्संस्कृति १ वष २ अङ्क१९ पृ.

ज्यादा मञ्चिन नपाएको हुनाले यो परम्परा कायमै रह्यो । मध्ययुगमा नेपालराज्य टुक्रिएर सानसाना धेरै राज्य खडा हुँदा विभिन्न राज्यमा भिन्नाभिन्नै रूपले यो उत्सव मनाइएको देखिन्छ ।

प्राचीन भारतमा भाद्रशुक्ल एकादशीको दिन इन्द्रध्वज उभ्याइन्थ्यो । वृहत्संहितामा यस कुराको चर्चा गरिएको छ[1] । परन्तु आजभोलि हाम्रो यहां भाद्रशुक्ल द्वादशीको दिन लिङ्गो गाड्ने काम हुन्छ । काठमाडौं उपत्यकाका मल्ल राजाहरूचाहिं भाद्रशुक्ल एकादशीकै दिन इन्द्रध्वजोत्थापन गर्दथे । यो कुरा तात्कालिक ग्रन्थ र ठ्यासफुहरूबाट ज्ञात हुन्छ[2] । अट्को नारायणस्थान अगाडि आजभोलि पनि भाद्रशुक्ल एकादशीको दिन लिङ्गो गाड्ने काम विधिपूर्वक सम्पन्न गरिन्छ । मल्लकालिक परम्पराको अवशेषको रूपमा यो देखिएको छ । हनूमान्ढोकाको प्राक्रूप यतातिरसम्म फैलिएको देखिनाले मल्लकालको लिङ्गो गाड्ने ठाउँ पनि यहीं नै थियो कि भन्ने अनुमान यताबाट हुन्छ ।

आजभोलि हनूमान्ढोकाको प्राङ्गणमा काकेश्वरको मन्दिरनिर लिङ्गो गाडिन्छ । यो चलन श्री ५ प्रतापसिंह शाहको पालादेखि मात्र चलेर आएको देखिन्छ । भाषावंशावलीअनुसार श्री ५ प्रतापसिंहले नुवाकोटमा लिङ्गो गाडे जस्तै काठमाडौंको आफ्नो दरवार सामुन्ने लिङ्गो खडा गरी इन्द्रजात्रापछि लिङ्गो ढाल्ने नियम बनाई गुठी राखी प्रतिवर्ष यो जात्रा चलाएका थिए[3] । उनैका दरवारिया पण्डित शक्तिवल्लभ भट्टाचार्यले लेखेको इन्द्रध्वजोत्सव नामक विस्तृत ग्रन्थ पनि पाइन्छ[4] । त्यस ग्रन्थमा लेखिएको विधि आजभोलि गरिने इन्द्रध्वजोत्थापनको परिपाटिसँग धेरै मिल्दोजुल्दो छ ।

इन्द्रध्वज बनाउनको लागि प्रतिवर्ष भादगाउँको इलाकामा पर्ने योसिंगु नामक सल्लाघारीमा गई सुरिल्लो अग्लो लक्षणयुक्त सल्लाको रूखको चयन गरिन्छ । यस सम्बन्धमा इन्द्र-

---

१. वरामिहिर, "वृहत्संहिता" 'इन्द्रध्वजसम्पत्' नामक ४२ अध्याय २९ श्लोक: "सन्तक्ष्य पुनस्तक्षा विधिवद् यष्टि प्ररोपयेद्यन्त्रे, जाग्राममेकादश्यां नरेश्वर : कारयेच्चास्याम् ।"

२. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट २० पृ., "सं. ८०२ भाद्रपद शुक्ल ।। एकादशी शनैश्चरवार कुन्हु एन्दकिरि स्वाङा ।। " सोही, १२० पृ.; "भाद्रशुक्ल ।। एकादशी उदयस इन्द्रदेव स्वाय." (ठ्यासफु) । वज्राचार्य "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ अङ्क ३७ पृ., "स ८४१ भा. शु ११ एकिल स्वाङा द्वादशीस मत छोयका. . . ." "वर्षक्रिया" राष्ट्रिय अभिलेखालय ८४५ विषयसंख्या "इति इन्द्रयात्राकृत्यं ।। मतांतरे एकादश्यां ध्वजस्थापन ।"

३. मोहननाथ पाँडे (उर्फ द्वीपेन्द्रकुमार पाँडे) को संग्रहमा रहेको अप्रकाशित भाषावंशावली २४ पृ., "यिन माहाराजा (प्रतापसिंह) का पालामा अघि नेपालमा नभयाको नुवाकोट्का लिंगको उपमाले कांतिपुर सहरमा प्रतिवर्ष लिङ्ग उभ्याईन्या इन्द्र थापना गरी इन्द्रयात्रा सोभा गराया."

४. "इन्द्रध्वजोत्सव" राष्ट्रिय अभिलेखालय तृ. ३२०, १ ख विषयसंख्या

ध्वजोत्सवमा विस्तारपूर्वक लेखिएको छ । यस कामको लागि सरकारी कर्मचारी, गुठियार, पुरोहित तथा अरू सम्बद्ध व्यक्तिहरू त्यहाँ पुगेका हुन्छन् । उचित ठहऱ्याएको रूखलाई विधिपूर्वक पूजा गरी बोकाको बलि दिइन्छ र साइत हेरी रूख काट्ने काम हुन्छ । रुखका हाङ्गा बिङ्गा सबै काटी लिङ्गो तयार गरी काठमाडौं रानीपोखरीको किनारामा रहेको भोटाहिटी टोलमा ल्याई केही दिन राखिन्छ । त्यसपछि भाद्र शुक्ल अष्टमीको दिन राजकीय खड्ग लिने व्यक्ति र गुर्जुको पल्टन आई इन्द्रध्वजको स्वागत गरिन्छ । उहिले रानीपोखरी काठमाडौं शहरको ठीक बाहिर पर्दथ्यो । मल्ल राजाहरू पाहुनाको रूपमा आएका मित्र राष्ट्रका राजाहरूको स्वागत गर्न रानीपोखरीको कुनासम्म आई सत्कार गर्दथे[1] । भोटाहिटीसम्म आई इन्द्रध्वजको स्वागत गर्ने चलनले यस कुराको संझना गराउँछ । शक्तिवल्लभको इन्द्रध्वजोत्सवमा पनि शहरको छेउसम्म गएर राजा र भारदारहरूले इन्द्रध्वजलाई सत्कार गरी ल्याउने कुरो लेखिएको छ[2] । मल्लकालमा मल्ल राजाहरू आफैं गई इन्द्रध्वजको स्वागत गरी ल्याउँथे । यसरी राजकीय सत्कारपूर्वक शहर भित्र्याई सो लिङ्गो काकेश्वरको मन्दिरनगीचै लिङ्गो गाड्ने ठाउँनिर राखिन्छ । भाद्रशुक्ल एकादशीको दिन सरकारी अधिकारीहरू रातभरी जाग्राम बस्नुपर्ने नियम छ । भोलिपल्ट भाद्रशुक्ल द्वादशीको दिन शुभ मुहूर्तमा राजपुरोहितको निर्देशनअनुसार शास्त्रोक्त विधिपूर्वक लिङ्गो उभ्याइन्छ । यसै दिनदेखि इन्द्रजात्रा शुरू हुन्छ । लिङ्गो उभ्याउने काम मानन्धरहरूबाट हुन्छ । योबाहेक विस्केटको लिङ्गआदि उभ्याउने काम पनि मानन्धरहरूबाटै संपन्न गर्ने चलन छ । इन्द्रध्वजको मुनि हात्ती चढेको इन्द्रको सुनको सानो प्रतिमा राखिन्छ । मूर्तिकलाको दृष्टिले सो मूर्ति प्रतापसिंहकै समयतिर बनेको प्रतीत हुन्छ । इन्द्रजात्रा सिद्धिसकेपछि आश्विनकृष्ण चतुर्थीको दिन सो लिङ्गो ढाली वाग्मतीमा होलाइदिने रीति छ ।

उहिले यो उत्सव बडो धूमधामसंग सम्पन्न गरिन्थ्यो । इन्द्रध्वज उभ्याउने एक दिन अगाडि भाद्रशुक्ल एकादशीदेखि इन्द्रध्वज नढालेसम्म हरेक रात प्रधानमन्त्री तथा सबै ठूलठूला भारादारहरू हनूमान्ढोकाको प्राङ्गणमा हाजिर भएर रातभर जाग्राम बस्नुपर्दथ्यो । यस उत्सवमा उपस्थित भएका भारदारहरूको नाम लेखिएका तात्कालिक कागतबाट यो कुरो ज्ञात हुन्छ[3] । रातभरि प्राङ्गणमा विभिन्न नाच नचाइन्थे । श्रृङ्गाररसले भरिपूर्ण भंडिनीको नाच सबभन्दा प्रसिद्ध थियो । लिङ्गो उभ्याउने बखत श्री ५ को पनि सवारी हुन्थ्यो तथा सरकारी उच्च पदाधि-

---

१. यसको प्रमाण "मोहनचोक" शीर्षकअन्तर्गत टिप्पणीमा उद्धृत गरिसकेका छौं ।

२. "इन्द्रध्वजोत्सव" १०–११ पत्र, "तत : शुक्लाष्टमीदिने, पुरोहितसचिवदैवज्ञवर्द्धकीविप्रादिसहितो राजा पुरद्वारं गत्वा ।। पुण्याहवाचनं गणपतिपूजनं च निर्वर्त्य नृत्योत्सवपुष्पमाला धूपदीपमंगलद्रव्यवेदवाक्यगीतघोषसुवेषगणिकामृदङ्गपटहभेरीदुंदुभिवीणादिपंचवाद्यजयजयशब्दपुरस्सरं. . . . ध्वजदण्डं शकटस्थं जनापहृतं वा नगरं प्रवेशयेत्"

३. वसन्तपुर दरबारमा पाइएका ती कागतपत्र अहिले नेपाल र एशियाली अध्ययन संस्थानमा सुरक्षित छन् ।

कारीहरूद्वारा हनूमान्ढोकाको प्राङ्गण खचिखचाउ हुन्थ्यो[1]। तर आजभोलि यस उत्सवको उक्त रौनक सिद्धिसकेको छ। धार्मिक रीति मात्र विधिपूर्वक सम्पन्न गरिन्छ।

## इन्द्रजात्रा र कुमारीजात्रा

वैदिककालदेखि देवताहरूका राजाको रूपमा विशेष सन्मान पाएका इन्द्रको जात्रा नेपाली इतिहासको प्रारम्भदेखि नै कुनै न कुनै रूपमा चलेर आएको प्रतीत हुन्छ। लिच्छविकालका अभिलेखहरूमा इन्द्रयात्राको उल्लेख प्राप्त भएको छैन तापनि इन्द्रगोष्ठी नामक गुठीको चर्चा लेले र च्यासलटोलको लिच्छवि शिलालेखमा गरिएको छ[2]। सो इन्द्रगोष्ठी अवश्य पनि इन्द्र-जात्रासंग सम्बन्ध भएको गुठी हो भन्ने देखिन्छ। विक्रमको पन्ध्रौं शताब्दीमा त इन्द्रयात्रा निकै लोकप्रिय भइसकेको थियो। त्यसताका लेखिएको गोपालराजवंशावलीमा यस जात्राको उल्लेख पाइएको छ। सो प्राचीन वंशावलीमा वि. सं. १४३६ भाद्र कृष्ण द्वितीया (पूर्णान्तमानले आश्विन कृष्ण द्वितीया)को दिन द्विजराज भन्ने महत्त्वपूर्ण व्यक्तिले पाटनको पुलचोकबाट तोरण ल्याई इन्द्र-जात्रा मनाएको र सोही वर्ष राजा स्थितिमल्ल र रानी राजल्लदेवीले महालक्ष्मीव्रत बसेको कुरो लेखिएको छ[3]। पुलचोकको तोरणसंग इन्द्रजात्राको के सम्बन्ध थियो भन्ने कुरो केही बुझ्न सकिएको छैन। तर महालक्ष्मीव्रतसंग कुमारीजात्राको केही सम्बन्ध देखिएको छ।

नेपालउपत्यकामा तीन मल्ल राज्य खडा भएको समयमा आफ्आफ्नो दरबारको आसपास भाद्रशुक्ल एकादशीको दिन इन्द्रध्वजोत्सव गरी इन्द्रजात्राको प्रारम्भ गर्दथे। इन्द्रध्वजोत्सवको सम्बन्धमा हामीले माथि लेखिसकेका छौं। मल्लकालमा लेखिएका ठ्यासफुहरूमा इन्द्रजात्राका चर्चा अनेक ठाउँमा पाइन्छन्। काठमाडौंमा टिपिएको एउटा ठ्यासफुमा वि. सं. १७४१ देखि इन्द्रजात्रामा हुने कुनै उत्सवको समयावधि बढाएर आश्विन कृष्ण तृतीयासम्म सो उत्सव मनाउने चलन चलाएको कुरो लेखिएको छ[4]। यताबाट त्यस समयभन्दा अघि इन्द्रजात्रामा हुने सो उत्सव आश्विनकृष्ण तृतीयासम्म मनाइँदैनथ्यो भन्ने बुझिन्छ। यसले मल्लकालमा इन्द्रजात्रा बढी लोकप्रिय हुँदै गएको संकेत गर्दछ। कुमारीको रथजात्रा पनि इन्द्रजात्राको एक अङ्गको रूपमा

---

१. मोहिनीविनोद शर्माले संग्रह गर्नुभएको वंशावलीको आधारमा

२. वज्राचार्य, "लिच्छविकालका अभिलेख" २८३, ५४० पृ.

३. गोपालराजवंशावली २९ पत्र; "नेपाले ग्रहनन्दशागरगते सम्वत्सरे भाद्रके, मासे कृष्ण-मतम्गजाधिपतिथौ सूर्ये हनिश्रवया। आचीर्ण्णं स्थितिराजम(ल्)लविभुना राजल्लदेव्या समम्, श्रीलक्ष्मीव्रतमुत्तमम् स्थिरधिया सर्व्वार्थकामप्रदम् ॥ थ्व सम्वच्छलवु श्रीद्विजराज-जुस्यँ यह्लं पुलचोया तोरण हस्यँ एन्दयात याङा गाक्व दुराखन :।"

४. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट २३ पृ.; "सं. ८०४ भाद्रपद कृष्ण, गाक-तिराख कून्हुतों इन्द्रजात्रायात दयकु."

राजा जयप्रकाशले पछि मात्र थपेका थिए। यो कुरो भाषावंशावलीको वर्णनबाट थाहा पाइन्छ[1] । राजा जयप्रकाशको वि. सं. १८१० को टकमा कुमारी भनी लेखिएको छ। यताबाट यही सालदेखि मात्र काठमाडौंमा कुमारीजात्रा चलेको अनुमान हुन्छ[2] ।

आजभोलि भाद्रशुक्ल द्वादशीको दिन इन्द्रध्वजोत्थापन गरिन्छ तथा त्यही दिनदेखि आठ दिनसम्म इन्द्रजात्रा मनाइन्छ। यस समयावधिमा हनूमान्ढोका दरवारको प्राङ्गणमा विभिन्न सांस्कृतिक गतिविधि देख्न पाइन्छ । जुन दिन इन्द्रध्वज उभ्याइने हो, सोही दिन देगुतलेजुको मन्दिरसंगै रहेको श्वेतभैरवको प्रदर्शन गरिन्छ । माजुदेवलको अगाडि पनि सानो मञ्च बनाई त्यसमाथि धातुनिर्मित भैरवको मूर्ति सजाएर राखिन्छ। माटो काठ र धातुबाट बनेका भैरवका यस्ता मूर्ति नेपालउपत्यकामा विभिन्न ठाउँमा इन्द्रजात्राभरि प्रदर्शित गरिन्छन् । यिनमध्ये इन्द्रचोकमा प्रदर्शित गरिने आकाशभैरव प्रसिद्ध छन्। आकाशभैरवको उल्लेख गोपालराजवंशावलीमा पनि गरिएको छ[3] । यसै वेला पुलिस गोस्वाराअगाडि राजा प्रतापमल्लले बनाएर गएको विश्वरूपको भव्य मूर्ति प्रदर्शित गरिन्छ। त्यसको पादपीठमा लेखिएको राजा प्रतापमल्लको वि. सं. १७१४ श्रावणको अभिलेखमा सद्धर्मयात्रा (श्रावणमा हुने नेवारीमा बहि बोय् भनिने जात्रा) र इन्द्रयात्रामा सुनको सो मूर्ति बाहिर ल्याएर देखाउन बनाइएको हो भनी लेखिएको छ[4] । यसै गरी शिवपार्वतीको मन्दिरसंगै पूर्वपट्टि रहेको भगवतीको मन्दिरमुनि दलानमा आनन्दभैरव र आनन्दभैरवीको दुइ मूर्ति ल्याएर प्रदर्शित गरिन्छन् । आनन्दभैरवको पादपीठमा रहेको वि. सं. १७५६ भाद्रको अभिलेखमा इन्द्रजात्रामा ती मूर्ति प्रदर्शन गर्नुपर्ने कुरो लेखिएको छ[5] । मरुसत्तलनगीचै दोबाटोमा काठको अग्लो मञ्च बनाई हात फैलाइरहेको इन्द्रको सुन्दर मूर्ति देखाइन्छ। इन्द्रका यस्ता मूर्ति इन्द्रजात्राभरि नेपालउपत्यकामा विभिन्न स्थानमा देखाइन्छन्। हनूमान्ढोका दरवारभित्र नासलचोकको डबलीमाथि इन्द्रको त्यस्तो मूर्ति इन्द्रजात्रा भरि राखिन्छ। इन्द्रजात्राको प्रथा नेपालउपत्यकामा कसरी चल्यो भन्ने लोककथासंग ती मूर्तिको सम्बन्ध छ ।

लोककथाअनुसार स्वर्गका राजा इन्द्रलाई पारिजातको फूल खूबै मनपर्थ्यो। तर स्वर्गमा कुनै वेला पारिजातको बोट कतै थिएन। नेपालउपत्यकामा भने ती फूल प्रशस्त थिए। इन्द्रकी आमालाई व्रत बस्न पारिजात फूलको आवश्यकता भयो र आमाको आज्ञाबमोजिम बादल र

---

१. लंसाल, "भाषावंशावली" २ भाग ११८ पृ.

२. ऐ. शि. बाबुराम आचार्य, "श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको संक्षिप्त जीवनी" (काठमाडौं, श्री ५ महाराजाधिराजका प्रमुख संवादसचिवालय राजदरवार वि. सं. २०२५) ३ भाग ५२३ पृ.

३. गोपालराजवंशावली ५६ क पत्र, "स. ४९६ कार्त्तिकपूर्णमी कोन्हु, पश्चिमाहरी पण्डेसन, आकास भैरवस चपाह्ल आवन चेस्यं ध्वजा छाया दिन ॥"

४. परिशिष्ट, २६ संख्याको अभिलेख.

५. परिशिष्ट, ५० संख्याको अभिलेख.

कुइरोभित्र लुकेर पारिजातको फूल चोर्न भनी इन्द्र मानिसको रूप लिएर नेपालउपत्यकामा उत्रे। साधारण मानिसको रूपमा आएको इन्द्रलाई मानिसहरूले चिनेनन् र पारिजातको फूल चोर्न लाग्दा उनी पक्रिए। मानिसहरूले उनलाई डोरीले बाँधी दोबाटोमा राखिदिए। इन्द्रजात्रामा प्रदर्शित गरिने हात पसारेर बसेका इन्द्रको मूर्तिले सोही कुराको प्रतिनिधित्व गर्छ भन्ने लोक-धारणा छ।

छोरालाई खोज्दै हिंड्दा इन्द्रका आमा पनि नेपालउपत्यकामा आइपुगिन्। छोरालाई बाँधिराखेको डोरी फुस्काउन लाग्दा उनीहरूको संवादको आधारमा मानिसहरूले आमा छोरा दुवैलाई चिने। यसपछि राजा प्रजा सबै मिली इन्द्र र इन्द्रको आमाको सत्कार गरी धूमधामसंग पूजा गरे भनी त्यस कथामा बताइएको छ।

इन्द्रको यस कथासंग प्रत्येक वर्ष इन्द्रजात्रामा दहचोक डाँडामा रहेको इन्द्रदहमा स्नान गर्न जाने रीतिसंग पनि सम्बद्ध छ। छोरालाई छुटाएर लैजान इन्द्रको आमाले गहुँ र धान पकाउन शरद् ऋतुमा शीत र कुइरो पठाइदिने तथा वर्षभरिमा मरेका आत्माहरूलाई स्वर्ग जाने बाटो देखाइदिने कबोल गरेका थिए। शरद् ऋतुमा शीत र कुइरोको बन्दोवस्त त उनले गरिदिइन्, तर उनीसंग स्वर्गमा जान भनी पछि लागेका आत्माहरूलाई दहचोक डांडासम्म पुग्दा अलपत्र पारेर इन्द्रका आमा छोरालाई साथमा लिएर स्वर्ग पुगिन्। ती अलपत्र परेका आत्माहरू बाटो नदेखेर यताउता भड्कंदा इन्द्रदहमा हाम फाल्न पुगे। त्यसैले इन्द्रजात्रामा भाद्र शुक्ल चतुर्दशीको दिन मकुण्डो लगाएको व्यक्तिको पछि पछि लाम लागेर शहर घुम्छन्। त्यसपछि इन्द्रदहमा गई त्यहां स्नान गरी दिवङ्गत आत्माहरूको परलोक सप्रोस् भन्ने कामनाले देवदेवताको पूजा गर्दछन्। डागिं जाने भन्ने नामले यो मेला प्रसिद्ध छ। मकुण्डो लगाएर अघि अघि जाने व्यक्ति इन्द्रकी आमा हुन् भनी लोककथामा भनिएको छ। डागिं जाने मेला मरुसत्तलनगीचैको पाटीदेखि शुरू हुन्छ। पारिजातको फूल चोर्न लाग्दा इन्द्र मरुसत्तलकै आसपासमा पकडिएका थिए तथा उनलाई त्यहींनिर दोबाटोमा बांधेर राखिएको थियो भन्ने दन्त्यकथाको भनाइ छ। यसैले मरुसत्तलनिर दोबाटोमा प्रदर्शित गरिने इन्द्रको मूर्ति विशेष प्रसिद्ध छ। मानिसको आकारभन्दा केही ठूलो सो मूर्ति कलाको दृष्टिले पनि महत्त्वपूर्ण देखिन्छ।

विक्रमको सत्रौं शताब्दीको अन्त्यतिर तिब्बत पुगेका एकजना पादरीले इन्द्रजात्राको वर्णन अनौठो ढङ्गले गरेका छन्। ती पादरीले नेपालउपत्यकाबाट भोट पुगेका एकजना सुनारलाई चांदीको क्रूस बनाउन दिंदा सुनारले यस्तो क्रूस हाम्रो देशमा पनि पाइन्छन् भनी भने। काठ अथवा धातुमा विभिन्न नापमा ती बनाइन्छन्। हरेक वर्ष पांच दिनसम्म बाटामा राखेर धूमधामसंग क्रूसको पूजा गरिन्छ। ती क्रूसलाई तिनीहरू इन्दोर् भन्छन् भनी ती पादरीले लेखेका छन्[1]।

---

१. रेग्मी, "मेडियाभल् नेपाल" २ भाग १००५–१००६ पृ.; "The king of this place (of Caparangue i. e. Chaprang) has three or four goldsmiths, natives of the country separated from here by two months of marching

इन्द्रजात्रामा देखाइने हात फैलाएर बसेको इन्द्रको मूर्ति क्रूस जस्तो देखिने हुनाले नेपालउपत्यकामा क्रूसलाई इन्दोर् (इन्द्र) भनी पूजा गरिन्छ भन्ने भ्रम उत्पन्न भएको देखिन्छ।

इन्द्रजात्राभरि हरेक रात त्रैलोक्यमोहन नारायणको पेटीमा भगवान् विष्णुको दशावतार देखाइन्छ। आतसबाजीमा जस्तै रासायनिक वस्तु बालेर त्यसको प्रकाशमा मूर्तिवत् स्तब्ध भएर प्रत्येक दृश्यमा एकेक अवतारको प्रदर्शन त्यसमा गरिन्छ। योबाहेक हनूमानढोका दरवारअगाडि ठाउँठाउँमा विभिन्न देवदेवीको नाच नचाइन्छन्। मल्लकालमा र त्यसभन्दा पछि पनि त्यस्ता नाच बडो उत्सुकतापूर्वक हेरिन्थे, तर आजभोलि तिनको महत्त्व प्रतिवर्ष घट्दै गइरहेको छ। जङ्गबहादुर राणाको पालामा लेखिएको कागतबाट इन्द्रजात्राभरिमा शयभन्दा बढी नाच हनूमानढोका प्राङ्गणमा ल्याएर नचाइन्थे तथा तिनीहरूको सरकारबाट चाहिंदो बन्दोवस्त हुन्थ्यो भन्ने बुझिन्छ।

विक्रमको अठारौं शताब्दीतिर काठमाडौंमा लेखिएको एउटा ठ्यासफुमा इन्द्रजात्रामा प्रदर्शित गरिने एउटा आकर्षक प्रदर्शनको चर्चा गरिएको छ। हनूमानढोका राजदरवारभित्र बेलुका देखाइने सो प्रदर्शन एक किसिमको रोमाञ्चकारी कृत्रिम युद्धको रूपमा प्रस्तुत गरिन्थ्यो। मल्लकालमा युद्ध हुँदा शत्रुको किल्लामा आगो लगाइदिने काममा विशेष जोड दिइने हुनाले उक्त कृत्रिम युद्धमा पनि विपक्षी दलले आएर शत्रुको किल्लामा आगो लगाइदिएको दृश्य देखाउने चलन थियो। खट जस्तो गरी बनाइएको सो नक्कली किल्लामा पनि आक्रमणको प्रतिरोध गर्न मानिसहरू बसेका हुन्थे। यसरी यो कृत्रिम युद्ध सांग्रामिक कुशलताको प्रदर्शन थियो। तर वि. सं. १७३९ मा देखाइएको यस किसिमको कृत्रिम युद्धमा आगो लगाउनुभन्दा अघिनै किल्ला भत्केको हुनाले त्यसमा बसेका मानिसहरू घाइते भए तर कोही मरेनन् भनी उक्त ठ्यासफुमा वर्णन गरिएको छ[1]। मल्लकालमा मनाइने इन्द्रजात्राको एक झलक यसले प्रस्तुत गरेको छ।

---

and subjugated to two kings, each one individually more powerful than this one, but of the same religion. I gave these goldsmiths some silver to make a cross, according to a model I showed them, they assured me that many of the same pattern were to be found in their nativeland, and that different sizes were made in wood and in various metals. They were usually placed in the temples, and for five days in the year they were planted on the public roads, where the people came in crowds to adore them, throw flowers and light up a great number of lamps. These crosses were named in their tongue "Indor". (C. Wessels, Op. cit, pp. 43—68)

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट २० पृ.; "सं. ८०२ भाद्रपद शुक्ल ॥ एकादशी शनैश्चरवार कुन्हु एन्दकिरि स्वाङा ॥ एन्दकिरिलृया गाक तिराक कुन्हुं, वरह्नि राजकुलस, झरेचाया क्वाथ मि चोय धक झरेचा ल्वातका वेलस क्वाथ मि चोय मरातक झरेचा खत दुंङाव खतस चोकों ह्लाक जुरो, सि जुको छह्मं मसीक जुरो ॥" (ठ्यासफु)

आजभोलि बचेका इन्द्रजात्रामा प्रदर्शित गरिने प्रदर्शनहरूमध्ये भैरव र सवःभक्कुको नाच तथा लाखेको नाच प्रसिद्ध छन् । कुमारीको रथजात्रामा रथ तान्ने बाटोमा ती दुइ नाच विउँसै पनि नचाइन्छन् । अहिलेभन्दा केही दशकअघिसम्म हनूमान्ढोका दरबारको नासलचोकमा सवःभक्कुसहित भैरवलाई रांगो दिने चलन थियो । त्यस प्रदर्शनमा रांगोलाई रक्सी खुवाएर मत्त पारेर मैदानमा छोडिन्थ्यो । भैरवको मुकुण्डो लाएको व्यक्तिले हातमा खड्ग लिएर रांगोसंग ज्यान हत्केलामा राखेर लड्थ्यो । उस वेला यो खतरनाक प्रदर्शन निकै लोकप्रिय भएको थियो । तर आजभोलि यो प्रदर्शन बन्द भइसकेको छ ।

इन्द्रजात्रामा प्रायः हनूमान्ढोकाको प्राङ्गणतिर प्रदर्शित गरिने हात्तीको एउटा रमाइलो नाच छ, जसलाई नेवारीमा पुलुकिसि प्याखं भन्ने चलन छ । हात्ती इन्द्रको वाहन मानिन्छ । यस कारण इन्द्रजात्रामा यस नाचको विशिष्टस्थान रहेको छ । भखारी र काठ मिलाएर हात्ती जस्तो देखिने गरी बनाएको आकृतिभित्र दुइजना मान्छे बसेर घण्टाको धुनमा यो नाच नचाइन्छ । उक्त आकृतिलाई हात्तीको मकुण्डो लेखिएको बाक्लो कपडाले छोपिएको हुन्छ,ङ्वाट्ट हेर्दा हात्ती जस्तै देखिन्छ । पुच्छर र टाउको हल्लाएर सो हात्ती स्वतन्त्रतापूर्वक नाच्दै उफ्रन्छ । यसरी नाच्दा दर्शकहरूलाई उसको अगाडि बसिरहनु मुस्किल हुन्छ । हात्तीको यो नाच हेर्दा उसको संमान प्रकट गर्न टोपी लाएर बस्नु उचित मानिंदैन । हात्तीले कहिले काहीं टोपी लाएर नाच हेरिरहने व्यक्तिको टोपी अकस्मात् खोसेर लगिदिन्छ र त्यसले त्यो फिर्ता पाउँदैन ।

राजा जयप्रकाशले इन्द्रयात्राको समयमा कुमारीको रथ तान्ने प्रथा चलाएदेखि कुमारी जात्रा पनि इन्द्रजात्राको एउटा प्रमुख अङ्ग बनेको छ । यसभन्दा अघि कुमारीको रथ तान्ने चलन थिएन भन्ने कुरो निश्चित छ । तर इन्द्रजात्रामा कुमारीको प्रतिमालाई पूजा गर्ने चलन धेरै अघिदेखि थियो भन्ने बुझिन्छ । विक्रमको छैठौं शताब्दीका प्रसिद्ध विद्वान् वराहमिहिरको वृहत्संहितामा इन्द्रध्वजोत्सव गर्दा शक्रकुमारीको पूजा गर्ने कुराको उल्लेख छ[1] । मल्लकालमा विशेष श्रद्धा पाएको[2] कालिकापुराणमा पनि यस कुराको चर्चा पाइन्छ[3] । इन्द्रध्वजोत्सव गर्दा शक्रकुमारीलाई पूजा गर्ने यो परम्परासंग इन्द्रजात्राको समयमा कुमारीको पूजा गर्ने रीतिसंग अवश्यै पनि कोही सामञ्जस्य हुनुपर्छ भन्ने देखिन्छ ।

---

१. "वृहत्संहिता" इन्द्रध्वजसम्पत् नामक ४२ अध्याय ३६ श्लो., "शक्रकुमार्य : कार्या : प्राह मनु सप्त पञ्च वा तज्ज्ञै : ।" यसको टीकामा यस्तो लेखिएको छ– "तथा गर्ग : – दृढकाष्ठकृत पञ्च सप्त वा लक्षणान्विता : । इन्द्रध्वजस्य शोभार्थं कुमारी : कारयेद् द्विज : ॥"

२. मल्लराजाहरू पररस्परमा सन्धि गर्दा हरिवंश तथा कालिकापुराणको उल्लेख गरी शपथ खान्थे । रेग्मीको "मेडियाभल् नेपाल" ४ भाग ११३ पृ. मा प्रकाशित ताम्रपत्रबाट यो कुरो बुझिन्छ ।

३. कालिकापुराण ८७ अध्याय १८–१९ श्लो. "कुमार्य : पञ्च कर्तव्या : शक्रस्य नृपसत्तम ।. . . केतो : पादप्रमाणेन कार्या: शक्रकुमारिका: ।"

आश्विनकृष्ण चतुर्थीको दिन स्थितिमल्लले महालक्ष्मीव्रत बसेको कुराको चर्चा हामीले माथि गरेका छौं। महालक्ष्मीको व्रत बस्ने चलन आजभोलि पनि देखिन्छ। भाद्रशुक्ल अष्टमी-देखि यो व्रत शुरू हुन्छ तथा आश्विनकृष्ण अष्टमीको दिन समाप्त हुन्छ। यसरी यो महालक्ष्मी व्रत इन्द्रयात्राकै समयतिर संपन्न गरिन्छ। स्थितिमल्लको पालामा र त्यसभन्दा धेरै अघि लेखिएका महालक्ष्मीव्रत भन्ने ग्रन्थ पाइन्छन्। तिनमध्ये सबभन्दा पुरानो प्रति वि. सं. १३१७ मा राजा भीमदेवको पालामा सारिएको छ[1]। यताबाट विक्रमको चौधौं शताब्दीमै महालक्ष्मीको व्रत बस्ने चलन लोकप्रिय भइसकेको बुझिन्छ।

स्थितिमल्लको राज्यकालमा वि. सं. १४४४ मा लेखिएको महालक्ष्मीव्रतमाहात्य नामक ग्रन्थ[2] मा कुमारीको प्रादुर्भावको विषयमा एउटा चाखलाग्दो कथा दिइएको छ; जुन यस प्रकारको छ–

"कोलासुर दैत्य र उनका दुइ भाइले घोर तपस्या गरी शिवजीलाई प्रसन्न पारे। शिवजीले तिनीहरूलाई वरदान दिन पार्वतीलाई पठाइदिए। तर ती दैत्यहरूले स्त्रीजातिबाट वरदान लिन मञ्जूर गरेनन्। यो देखी पार्वतीले रिसाएर तिनीहरूलाई स्त्रीजातिबाटै तिमीहरूको नाश होस् भनी श्राप दिएर फर्किन्। तर ती दैत्यहरूले तपस्या गर्न छोडेनन् र आखिरमा शिवजी आफैं आई तीनै लोकमा तिनीहरूको आधिपत्य रहोस् भनी वरदान दिए। उनको यो वरदान पाएर ती दैत्यहरूले इन्द्र आदि सबै देवताहरूलाई दुःख दिन लागेको हुनाले सबै देवताहरू ब्रह्माजीलाई अघि लाएर पार्वतीकहां पुगे। पार्वतीले मानिसको कोखमा जन्म लिएर ती दैत्यहरूको संहार गर्ने कबोल गरिन्। ब्राह्मणको कोखबाट महालक्ष्मीको अवतार लिएर, क्षत्रीयको कोखबाट कुमारी-को अवतार लिएर, डोम्ब (डुय्याँ) को कोखबाट कालिकाको अवतार लिएर मानवकन्याको रूपमा मर्त्यलोकमा उनी आइन्। ती तीनै मानवकन्या रुद्रशक्तिका अवतार हुनाले तिनीहरूको परस्परमा ठूलो मित्रता हुन गयो। तर ब्राह्मण जस्तो उच्चकुलकी छोरीले डोम्बपुत्रीसंग संपर्क बढाएको उनका आमाबाबुलाई राम्रो लागेन र उनीहरूको सो मित्रसम्बन्ध छुट्याइदिने प्रयास उनीहरूले गरे। यसै कुरामा रिसाएका आमाबाबुलाई उनले सम्झाएर भनिन्, "पिताजी, न त म हजूरकी छोरी हुँ, न त कोही मेरा लोग्ने हुनेछन्, म त कुमारी हुँ, रुद्रशक्ति हुँ। यी डुय्याँकी छोरी पनि कालिकादेवीकी अवतार हुन्। कोलासुर दैत्यलाई मार्न मानवकन्या भएर जन्मेका हौं[3]।"

---

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग २२६–२२७ पृ.

२. सोही, ३५४ पृ..

३. "महालक्ष्मीव्रतमाह्रात्म्य" केसरपुस्तकालय २१ संख्या (ताडपत्र) ६ पत्र "ततस्तु पितरौ क्रुद्धौ वभाषे विजया स्वयं। नाहं व्रह्मंस्तव सुता न च कश्चित् पतिर्मम॥ जानीहि मां रुद्रशक्तिं त्रिषु लोकेषु पूजितां। एषापि कालिका देवी न डोम्बगृहसंभवा॥ कोलासुरवधार्थाय मान-षीतनुमाश्रिता ॥....मां कुमारीं विजानीत निहन्तुं कोलदानवं ॥"

यो कुरो थाहा पाएर सबैजना छक्क भए। त्यस वेलादेखि ती मानवकन्याहरूलाई रुद्र-शक्तिका रूपमा श्रद्धापूर्वक पूजा गर्न लागे।

महालक्ष्मीव्रतमाहात्म्यमा यस्तो कथा लेखिएको र महालक्ष्मीव्रत बस्ने चलन चौधौं शताब्दीमै लोकप्रिय भइसकेको देखिनाले इन्द्रयात्राको समयतिर कुमारीको प्रतिमालाई पूजा गर्ने चलन नेपालमा धेरै अघिदेखि नै थियो भन्ने बुझिएको छ।

कुमारीले मानिसको कोखमा अवतार लिएको यस्तै पौराणिक कथाको आधारमा उचित लक्षणले युक्त बालिकालाई कुमारीदेवीको रूपमा पूजा गर्ने प्रथा चलेको देखिन्छ। यो प्रथा पनि धेरै शताब्दीअघिदेखि चलेर आएको प्रमाण पाइन्छ। विक्रमको चौधौं शताब्दीमा सारिएको 'त्रिभूमिकविद्यापीठप्रतिष्ठाविधि' भन्ने ग्रन्थको कुमारीपूजाविधि नामक प्रकरणमा आठ वर्षकी रूपवती बालिकालाई कुमारी देवीको रूपमा पूजा गर्ने विधान लेखिएको छ। यताबाट प्राचीन मल्लकालमै कुमारीको पूजा गर्ने चलन लोकप्रिय भइसकेको बुझिन्छ। नुहाई धुवाई गराई गाजल लगाइदिई निधारमा केशर र वासना आउने पदार्थ लेपन गराई वस्त्र आभूषण र फूलको माला पहिराई कुमारीलाई सिंगार्ने विधि त्यहां दिइएको छ[1]। कुमारीको रथजात्रामा कुमारीलाई यसरी नै सिंगार्ने चलन अद्यापि चलेको छ। उक्त ग्रन्थअनुसार कुमारीको अङ्ग प्रत्यङ्गमा देवदेवीले वास गरेका हुन्छन्— ब्रह्मरन्ध्रमा ब्रह्माणी, दुइ आंखामा रुद्राणी, नाकमा वैष्णवी, मुखमा वाराही इत्यादि। यसरी धेरै देवताहरूको संयोगबाट कुमारीको शरीर बनेको हुन्छ भन्ने कुरो त्यहां देखाइएको छ[2]। यही भावना अनुसार कुमारीलाई तलेजुभवानीको अभिन्न रूप पनि मानिन्छ।

वि. सं. १६८५ को दसैंमा महानवमीको दिन कुमारीलाई हनूमान्ढोका दरबारको मूलचोकमा राखी पूजा गरेको वर्णन काठमाडौंमा लेखिएको हालै पाइएको अप्रकाशित ठ्यासफुमा

१. "त्रिभूमिकविद्यापीठप्रतिष्ठाविधि" केसरपुस्तकालय (भ्रमवश यस ग्रन्थको नाउँ पुस्तकालयको सूचीमा "कुमारीपूजाविधि" भनी लेखिएको छ।) २९ संख्या, "शृणुदेवि यथातथ्यं कौमारीतर्प्पणक्रियाम्। अष्टमं जन्मवर्षन्तु कन्या तु सुमनोहरा। स्नानमुद्वर्तनं कृत्वा.... पादप्रक्षालनं कृत्वा सर्व्वालंकारभूषितां। पृष्ठसिन्दुरगंधञ्च माल्याभरणचन्दनं कज्जलवस्त्र-कास्मीरैः गण्डस्थलविलेपनं पुष्पगंधादिधूपञ्च दापयेद् विधिना वुधः।....इति कुमारी-पूजाविधिः॥ ॥ समाप्तोऽयं त्रिभूमिकविद्यापीठप्रतिष्ठाविधिः श्रीमन्नेपालिकसम्वत्सर ४०६ मार्ग्गशिरकृष्ण.'!

२. "सोही, "ब्रह्मरंध्रे च ब्रह्माणी रुद्राणी नेत्रयोः स्थिता॥ कर्ण्णमूले चकौमारी वैष्णवी नाशिका स्मृता॥ मुखे वाराहिका देवी कंठे ऐन्द्री तु संस्थिता हृदयस्था च चामुण्डा लक्ष्मी च नाभि-मंडले गुह्ये विनायकं देवं गुदे कालं प्रतिष्ठितं॥"

आएको छ[1] । यस दिन आजभोलि पनि राजदरवारकी कुमारीलाई मूलचोकमा ल्याइन्छ र विधिपूर्वक पूजा गरिन्छ । यताबाट राजा जयप्रकाशले कुमारीजात्रा चलाउनुभन्दा अघिदेखि नै राजदरवारमा कुमारीलाई संमानपूर्वक राख्ने चलन थियो भन्ने देखिन्छ ।

मल्लकालमा सारिएको महाकालसंहिता भन्ने ग्रन्थको शारदीय पूजाविधान नामक प्रकरणमा पनि कुमारी बनाउन योग्य बालिकाको चयन, कुमारीलाई पूजा गर्ने विधि र उनको हावभावद्वारा शुभाशुभ छुट्याउने विषयमा केही लेखिएको छ[2] । सातदेखि नौ वर्षसम्मकी नीच जातमा नजन्मेकी, गोरी, बाबुआमा जीवित भएकी, दांत मिलेको, केश ज्यादै लामो नभएकी, हँसिलो मुख भएकी, रूपवती बालिकालाई कुमारी बनाउनुपर्छ भनी त्यहां भनिएको छ । घाउको खत बसेकी, स्तन उत्पन्न भइसकेकी, रजस्वला भइसकेकी बालिकालाई कुमारी बनाउँदा खराब हुन्छ भन्ने भावको कुरो त्यहां लेखिएको छ । कुमारीलाई पूजा गरिसकेपछि भोजन पनि गराउनू, कुमारीलाई कुनै चीज चढाउँदा उनले त्यो ग्रहण गर्छन् वा गर्दैनन् भन्ने विषयमा गम्भीरतापूर्वक

---

१. "सम्वत् ७४८ आश्विणिशुक्ल ६ महनि, थ्व दिन कुन्हु मूलचुकस हिकोड निग्वड तपज्याक गणकुमारि जोङ राजकुलभरि छह्म मदयाओ उपाध्यायाके ङेडाओ कारकभारुण ज्वणका नयराकं तेओधकं जोनकु रिपाचोङ मिजन जोनकल जुरो ।।" (ठ्यासफु)

२. महाकालसंहिता, ५४७–५५१ पत्र;
"न तथा तुष्यति शिवा बलिहोमैस्तु तीरणैः (?)। कुमारीपूजनेनात्र यथा सद्यः प्रसीदति ।। न केवलं पूजयेत्तां भोजयेच्चापि यत्नतः।। भावि भद्राभद्रमुभे तद् व्यनक्ति सुरेश्वरि।। स्वयं तद्रूपमास्थाय मूढभावमुपेयुषी ।। दिदृक्षुरायाति शिवा भक्तिपूजनसंभृती ।।. . . . सुस्नातां रक्तपीतादिनानारागोज्वलांशुकां ।। सर्वालङ्कारचित्राङ्गीमज्ञातानङ्गचेष्टितां ।। अजातपुंमनःसङ्गां सप्ताष्टनववार्षिकीं ।। अनीचज्ञातिगौराङ्गीं पितृमातृमतीमपि। अदन्तु-रामवादत्तामधिकोनाङ्गवर्जितां ।। अदीर्घकेशीमुद्रिक्ता सुस्मितास्यां मनोहरां ।। श्यामां दीर्घदतीमोतुनयनां (?) पिङ्गमूर्द्धजां गतिस्वनतत्कुल्यां कुब्जां खञ्जां च खर्वटां ।। भ्रूकेशाल्पत्वसहितां तथा चैव गलद्व्रणां जातस्तनरजोनङ्गां प्रयत्नेन विवर्जयेत् ।। एतद् भिन्नां कुमारी तु वरणीयार्चनक्रमे. . . .भूषणानि दुकूलानि सिन्दूरालक्तकानपि कर्दलादर्श-विख्याता लालवृन्तानि पोतिका ।। पसि(?)कर्मा धारचोलमंचिका पीठदोलिकाः । पञ्चालिका सच्छङ्गा पादुके कुलपट्टिके ।। चण्डातकं च संव्यानं तथोद्वर्तनभाजनम् शय्योप-धानपर्यङ्कसमुद्गाश्च प्रसाधनी प्रतिग्राहिश्वहिग्वेला तथा सीमन्तचर्तिका । गोरोचनामृगमदौ कर्पूरकुङकुमं तथा ।। एवमादीनि चान्यानि यावच्छक्तानि सुन्दरि प्रदातव्यानि वस्तूनि कुमारी तुष्यते यथा ।।. . . .ततो यत् स्थापितं पात्रं कुमार्यै प्रतिपादयेत् । स्वीकुर्यात्सा च तत्रैव तथा यत्नं समाचरेत् ।। अगृहीते तु तत्पात्रे महान् दोषोभिजायते । अतो यत्नस्तथा कार्य्यः स्वीक्रियेत यथा तया ।
(महाकालसंहिताको मल्लकालमा लेखिएको प्रति राष्ट्रिय अभिलेखालयमा सुरक्षित छ । यहां दिइएको पाठ मेरो घरको संग्रहमा रहेको पछि सारिएको प्रतिबाट दिइएको छ ।)

विचार गर्नू, केही गरी उनले त्यो ग्रहण गरिनन् भने अनिष्ट हुन्छ भनी जान्नू, यसरी अनेक हाव-भावद्वारा शुभाशुभको संकेत कुमारीले दिन्छिन्; सोही कुरा जान्न कुमारीको पूजा गर्नुपर्छ भन्ने भाव त्यसमा परेको छ। आजभोलि पनि कुमारीको पूजा गर्दा शुभाशुभको विषयमा सतर्कता-पूर्वक निकै ध्यान दिएर हेरिन्छ।

कुमारीको सम्बन्धमा विचार गर्दा उल्लेख गरिने एउटा बहुचर्चित ग्रन्थ कुमारीतन्त्र हो। तर सो तान्त्रिक ग्रन्थसंग हाम्रो यहां गरिने कुमारीपूजा वा कुमारीजात्रासंग कत्ति पनि सम्बन्ध देखिंदैन। नटुवा, धोबी, शूद्र, गोठालो आदि नीच जातिकी कन्यालाई ल्याई योनिमा पूजा गरी संभोगक्रिया संपन्न गर्ने कुरो त्यस तन्त्रमा लेखिएको छ। हाम्रो यहां प्रचलित धार्मिक भावनासंग एकदमै प्रतिकूल कुरो यो छ।

सिठीको भोलिपल्ट हुने कुमारको खटजात्रा र कुमारीको रथयात्रा गर्ने बाटो मिल्दोजुल्दो छ। कुमारको खटजात्रा एउटा प्राचीन जात्रा हुनाले राजा जयप्रकाशले कुमारीको रथयात्रा त्यसैको अनुकरणमा चलाएको हुनुपर्छ भन्ने विषयमा हामीले माथि लेखिसकेका छौं।

कुमारीजात्रामा गणेश, भैरव र कुमारीको समेत गरी जम्मा तीन रथ तानिन्छन्। सुनको छाना हालिएको दुइतले मन्दिरको आकारमा रथको निर्माण गरिएको हुन्छ। रथ तान्दा गणेश त्यसपछि भैरवको रथ तानिन्छन् । कुमारीको रथ सबभन्दा पछि रहेको हुन्छ।

भाद्रशुक्ल चतुर्दशीको दिनदेखि कुमारीको रथजात्रा शुरू हुन्छ। त्यस दिन काठमाडौंको दक्षिणीभागमा रथजात्रा सम्पन्न गरिन्छ। यसको लगत्तै भोलिपल्ट काठमाडौंको उत्तरीभागमा रथजात्रा गरिन्छ। प्राचीन परम्पराअनुसार यङ्गल र यम्बु यी दुइ इलाकामा भिन्नाभिन्नै दिनमा यो समारोह मनाइएको देखिन्छ। त्यसपछि दुइ दिन खामोश खाई आश्विनकृष्ण तृतीयाको दिन फेरि एक पटक कुमारीको रथजात्रा गरिन्छ। यो अन्तिम रथजात्रा नानीचायात्रा भन्ने नामले प्रसिद्ध छ। राजा जयप्रकाशले बाहिर राखेको किलागढटोलमा बसेकी रखौटी स्वास्नी (नानीचा) लाई देखाउन यो जात्रा पछि थपेका थिए भन्ने अनुश्रुति छ। कुमारीको हरेक रथजात्रा गद्दीबैठक र कुमारीचोकको अन्तरालमा रहेको प्राङ्गणदेखि शुरू हुन्छ तथा त्यहीं आएर टुङ्गिन्छ।

कुमारीको पहिलो दिनको रथयात्रा विशेष धूमधामसंग मनाइन्छ। यो दिन रथजात्रा

---

१. ऐ. शि. बाबुराम आचार्य, "इन्द्रजात्रा" हिमवत्संस्कृति १ वर्ष २ अङ्क २० पृ., "हुनता प्रताप-मल्लका समयमा पनि कुनै बौद्ध उपासककी बालिकालाई कुमारी नामकी प्रतीक बनाएर पूजा गर्ने नियम भैसकेको थियो; जयप्रकाशमल्लले अरू दुइ जना कुमार ल्याएर गणेश र भैरवका प्रतीक बनाई कुमारीको साथ पूजा गर्ने र इन्द्रजात्राका समयमा नै उनीहरूलाई अलग अलग रथमा चढाई काठमाण्डौ शहरका तल्ला टोलमा चतुर्दशीका दिन परिक्रमा गराउने नियम गरिदिएका (हुन्)।" ऐ. शि. ज्यूको यो भनाइ विश्वसनीय देखिन्छ।

शुरू हुनुभन्दा अघि गद्दीबैठकमा श्री ५ को सवारी हुन्छ । राजपरिवारका सदस्यहरू र उच्चपदस्थ स्वदेशी तथा विदेशी गण्य मान्य व्यक्तिहरू पनि त्यहाँ भेला भएका हुन्छन् । श्री ५ बाट कुमारी, भैरव, गणेश यी तीनै देवदेवताको दर्शन गरिबक्सेपछि रथजात्रा शुरू हुन्छ । यस दिन जैसीदेवल, लगन, ब्रह्मटोल, कोहिटी, भीमसेनस्थानको बाटो गरी रथ तानिन्छन् । काठमाडौं शहरको दक्षिणी भागमा हुने यही रथयात्राको दिन श्री ५ पृथ्वीनारायणले काठमाडौंमा हमला गरी विजय प्राप्त गरेका थिए । त्यस वेला काठमाडौंका मल्ल राजा जयप्रकाश कुमारीको रथमा आफैं बसी रथजात्रामा भाग लिइरहेका थिए । रातको समय थियो । कुमारीको रथ कोहिटीसम्म पुगिसकेको थियो[1] । अकस्मात् गोरखाली फौज काठमाडौंको शहरी किल्ला फुटाई भित्र पसे । राजा जयप्रकाश त्यतैबाट पाटनतिर भागे । यसरी काठमाडौं शहरमा विजय प्राप्त गरेपछि रथजात्रा यथावत् चलाउन दिई पृथ्वीनारायणले कुमारीको दर्शन गरे । नेपालको इतिहासमा गोरखालीहरूको काठमाडौं विजय युगान्तकारी घटना थियो । यस कारण हरेक वर्ष उठानका शाह राजाहरूले यस दिन विजयोत्सवको रूपमा कुमारीजात्रालाई बढी धूमधामसंग मनाए । राणाहरूको समयमा पनि प्रधानमन्त्रीदेखि लिएर सारा सैनिक कर्मचारीहरू यस जात्रामा भाग लिन्थे । उच्च ओहदाका व्यक्तिहरू हात्ती र घोडामा चढी सजधजसंग नगरपरिक्रमा गर्दथे । केही दशक अगाडिसम्म पनि यो प्रथा चलेर आएको थियो ।

कुमारीजात्राको पहिलो दिन जात्रा सिद्धिएपछि गद्दीबैठकअगाडिको डबलीमा सुनको सिंहासन ल्याएर राखिन्छ । काठमाडौं विजय गरेको दिन श्री ५ पृथ्वीनारायण शाहले त्यस डबलीमा सुनको सोही सिंहासनमा बसी त्यस दिनदेखि आफू काठमाडौंको पनि राजा भएको कुरो जनाएका थिए । यसैले हरेक वर्ष यस दिन डबलीमाथि राखिएको उक्त सिंहासनमा राजप्रतिनिधिस्वरूप खड्ग ल्याएर राखिन्छ । यो प्रथा गद्दीमा राज हुने समारोह भन्ने नामले प्रसिद्ध छ ।

भाद्रशुक्ल पूर्णिमाको दिन हुने दोस्रो पटकको रथजात्रामा प्याफल, नरदेवी, बाङ्गेमुढा, ह्नैकनतला, असन, इन्द्रचोकको बाटो गरी रथ तानिन्छन् । यसको दुइ दिनपछि आश्विनकृष्ण तृतीयाको दिनचाहिं प्याफल, नरदेवीकै बाटो लगी त्यहांबाट सोझै पूर्वतिर किलागढको बाटो गरी नाउदेवलको पछिल्तिरबाट इन्द्रचोक पुऱ्याइन्छ । त्यताबाट हनूमान्ढोकाको गद्दीबैठकनिरको प्राङ्गणमा रथ पुगेपछि त्यस वर्षको कुमारी रथजात्रा समाप्त हुन्छ ।

कुमारीजात्राको अन्तिम दिन बेलुका कुमारीघरमा श्री ५ आफैं सवारी भई कुमारीबाट टीका ग्रहण गरिबक्सिन्छ । त्यसपछि राजपरिवार, उच्च ओहदाका व्यक्तिहरू तथा अरू सबै भक्तजनहरू क्रमशः कुमारीको दर्शन गरी कुमारीको हातबाट टीका लगाउँछन् । यसरी नेपालका राजा प्रजा सबै कुमारीजात्रामा विशेष अभिरुचि राख्दछन् । नेपालको सांस्कृतिक इतिहासमा यसको विशिष्ट स्थान छ ।

---

१. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ८७८–८८० पृ.

# पचलीभैरवको जात्रा

दक्षिणकोलिग्राम वा यङ्गलको इलाकामा हुने पचलीभैरवको जात्रा संस्कृति र इतिहासको दृष्टिले विशेष चाखलाग्दो देखिएको छ। पचलीभैरवको अर्को नाम स्वच्छन्दभैरव हो। यस देवताको जात्रा गर्दा शहर घुमाइने धातुनिर्मित घ्याम्पोमा स्वछन्दभैरवको मूर्ति अङ्कित गरिएको छ। यसको पीठ काठमाडौं शहरबाहिर दक्षिणपट्टि रहेको छ तापनि जात्रामा शहर घुमाइने घ्याम्पो भने गुठियारहरूको परम्परागत वासस्थानमा एकेक वर्षको पालो गरी राखिन्छ[1]। ती सबै वासस्थान काठमाडौं शहरको दक्षिणी भागमा पर्ने यङ्गलकै इलाकाभित्र पर्दछन्।

स्वच्छन्दभैरवसंग सम्बन्ध राख्ने केही हस्तलिखित तान्त्रिक ग्रन्थ राष्ट्रिय अभिलेखालयमा सुरक्षित छन्। तिनमध्ये स्वच्छन्दललितभैरव नामक ताडपत्रमा लेखिएको एउटा प्राचीन ग्रन्थमा पचलीभैरवसंग सम्बन्ध राख्ने एउटा महत्त्वपूर्ण उल्लेख आएको छ। त्यस ग्रन्थको अन्तिम पत्रमा ने. सं. ३१६ (वि. सं. १२५२) फागुनमा दक्षिणेश्वर स्वच्छन्दमहादेवको प्रतिष्ठा भयो भनी लेखिएको छ [2]। पचलीभैरव काठमाडौं शहरको दक्षिणी भागका देवता भएकोले र भैरव महादेवकै अर्को रूप हुनाले उक्त ग्रन्थमा दक्षिणेश्वर स्वच्छन्दमहादेवको प्रतिष्ठा गरियो भनी जुन लेखिएको छ, सो पचलीभैरवलाई नै लक्ष्य गरी लेखिएको हुनुपर्छ भन्ने बुझिन्छ।

नेपालको इतिहासमा विक्रमको बाह्रौं तेह्रौं शताब्दीतिर पालवंशी वैश्यठकुरीहरू निकै प्रभावशाली भई निस्केका थिए। यस वेला शिवदेव, इन्द्रदेव आदि राजाहरू नेपालउपत्यकामा शासन गर्दथे तापनि उनीहरू शक्तिहीन भएको मौका पारी ती वैश्यठकुरीहरू राज्यको विभिन्न भागमा अधिकार जमाउँथे। गोपालराजवंशावलीको वर्णनबाट हामी यो कुरो बुझ्दछौं[3]।

काठमाडौंमा पुस्तैनी अधिकार जमाएर बसेका तिनै वैश्य ठकुरीहरूका सन्तानहरूलाई हराई रत्नमल्लले काठमाडौंमा अधिकार जमाएका थिए। तिनका वंशजहरू काठमाडौंमा अद्यापि

---

१. यस्ता वासस्थान जम्मा बाह्रवटा छन्।

२. "स्वच्छन्दललितभैरव" राष्ट्रिय पुस्तकालय, पहिलो २२४, २०६ विषयसंख्या, "श्रेयोस्तु सम्वत् ३१६ फार्गुण शुक्ल चतुर्थि....पञ्चम्या। रेवतिघटि....नक्षत्रे शुक्लयोगे॥ सोमदिने....घटि २३ कर्कटलग्ने....दक्षिणेश्वर स्वछंदमहादेवप्रतिष्ठा शुभमस्तु।"

३. गोपालराजवंशावली ३१ क पत्र, "सम्वत् २१९ माघकृष्ण अष्टम्म्यां मूलनक्षत्र यह्लम् येथोवहार वरपाल भारोटों नायक नेपालया विक्षात, महाप्रभुत उभयराजकुल उधरण धारणसमर्थः। अस्तवर्ष ८७॥"

सोही; ३३ पत्र, "सम्वत् ३६२ ज्येष्ठ पुह्नीशि कुन्हुचा पालखुह्नि तव कितपाल भासन देश लुह्नि याङास गामलन पपाल फुङटों ख्वप्व चाल्व....सम्वत् ३६१ जेष्ठ शुक्ल अष्टमी यम्वु याटुम्बहार क्वाठ चाल्यका, यह्लं कीर्तिपाल भारोस"

छन् । ठकु जुजु भन्ने नामले तिनीहरू प्रसिद्ध छन्[1] । पचलीभैंरवको जात्रा उनीहरूकै पुर्खाले चलाएका हुन् भन्ने किंवदन्ती छ । यसैले पचलीभैंरवको जात्रामा तिनीहरूको महत्त्वपूर्ण भूमिका रहेको हुन्छ । यिनै कुराको आधारमा विचार गरी हेर्दा उक्त हस्तलिखित ग्रन्थमा टिपिएको पचलीभैंरवको स्थापनासम्बन्धी मिति विश्वसनीय देखिन्छ ।

मरुसत्तलमा टांगिएको वि. सं. १३६० मार्गको ताम्रपत्रमा पचलीभैंरवलाई "पांचालि भट्टाट्ह" भनी लेखिएको छ[2] । विक्रमको अठाह्रौं शताब्दीतिर लेखिएका ऐतिहासिक सामग्रीहरूमा चाहिं यस देवतालाई पंचदि भैंरव, पंचलि भैंरव, पंचदि मण्डल आदि भनिएको छ । नेवारीमा आजभोलि यिनलाई पचिमह्वः भनिन्छ । पांचालि शब्दकै अपभ्रंश भएर पंचालि, पंचदि पचि आदि रूपमा परिणत भएको देखिन्छ । यताबाट एउटा चाखलाग्दो कुरो प्रकाशमा आएको छ । प्राचीन कालमा पञ्चायतलाई बुझाउन पाञ्चाली भनिन्थ्यो । लिच्छवि राजाहरूले ठाउँठाउँका पाञ्चालिक (पञ्चायतका सदस्यहरू) लाई स्वायत्त शासनको अधिकार दिएका थिए । यस कारण त्यस वेलाको जनतामा पाञ्चालीको निकै प्रभाव थियो[3] । मल्लकालमा पनि देश रक्षा तथा स्थानीय बन्दोवस्त आदि काममा पञ्चायतको महत्त्वपूर्ण स्थान रहेको हुन्थ्यो[4] । यस कारण यस देवताको 'पांचालिभट्टाट्ह' भन्ने यो नाम काठमाडौंको दक्षिणी भागका पाञ्चालिकहरूको रेखदेखमा रहेको उनीहरूको आफ्नै देवता भएको हुनाले रहन गएको बुझिन्छ ।

मल्लकालमा पचलीभैंरवको जात्रा खूबै लोकप्रिय भएको थियो । ठ्यासफुहरूमा धेरै ठाउँमा यसको उल्लेख आउँछ[5] । राजपरिवारका सदस्यहरू पनि यस जात्रामा ठूलो अभिरुचि

---

१. ठकुजुजुहरूको पुस्तैनी संग्रहमा रहेका घर जग्गा सुकी विकी गर्दा लेखिएका ताडपत्रबाट ठकुजुजुहरू रत्नमल्लले जितेका वैश्यठकुरीका वंशज हुन् भन्ने थाहा पाइन्छ । यसबारे भिन्नै लेखमा सप्रमाण लेख्नेछु ।

२. परिशिष्ट, ५ संख्याको अभिलेख.

३. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३२६–३३१ पृ.

४. तेवारी र अरू, "ऐतिहासिक पत्रसंग्रह" २ भाग ५२–५४ पृ.

५. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष, ४ अङ्क, २६ पृ., "सम्वत् ७९६ आश्विन शुक्ल । चतुर्थी घटि ६ पंचमी घटि ० वि १५ थ्वत दयाव चतुर्थी उदय प्रमानन, पंचदीमण्डल देव कोहा बिज्यातका, पंचमी घटि मदल्यं देव थहा विज्यातका." रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग ३ परिशिष्ट २२ पृ. "सं. ८०३ आश्विन शुक्ल ।। पंचमी शनैश्चरवार थ्वकुन्हु श्रीश्रीश्रीपंचरिभैरव जात्रा याङा. . ." (ठ्यासफु) । पचलिभैरवको पीठदेखि हनूमान्ढोका राजदरवारसम्मको पचलीभैंरवको जात्रा मल्लकालमा "तोरभिव यात" भन्ने नामले प्रख्यात थियो । पूर्णिमा ३ वर्ष, ४ अङ्क, २८ पृ. मा प्रकाशित ठ्यासफुको एक अंशमा यस्तो लेखिएको छ– "सं ८२६ आश्विन शुक्ल :।। प्रति(प)दा धनुलग्नस नवरात्र स्वङा ।।. . . थ्वगुली दन, पंचदिमन्दरदेव राजकुरस तोरभिव यात धुनकाओ पार राक ह्मया छेस तया देव धलिङ स्वपु तोक धुयाओ कोस कुतिं वव पिंवारपनिं ग्वरघार जुव ।।"

राख्दथे। भाषावंशावलीअनुसार राजा शिवसिंह (वि. सं. १६३५–१६७७ श्रा) ले पचलीभैरव-को धातुनिर्मित घ्याम्पो बनाइदिएका थिए[1] । त्यसभन्दा पहिले सो घ्याम्पो माटोको थियो। पछि राजामाता भुवनलक्ष्मीले राजा भास्करमल्ल (वि. सं. १७५७–१७७६) को राज्यकालमा सो घ्याम्पो जीर्ण भएको हुनाले नयां घ्याम्पो फेरिदिएका थिए। यस कुराको चर्चा ठ्यासफुमा गरिएको छ[2] ।

आश्विनशुक्ल प्रतिपदादेखि यस जात्राको गतिविधि शुरू हुन्छ। त्यस दिन पचलीभैरव-को मूर्तिअङ्कित घ्याम्पो गुथियारहरूको वासस्थानबाट ल्याई चित्रकारको घरमा लगिन्छ। त्यहां पूजाविधानपूर्वक घ्याम्पोलाई अलंकृत गरिन्छ र चौथीको दिन भीमसेनस्थाननगीचै क्वा-बहालमा बस्ने वैश्य ठकुरीहरूका वंशज ठकु जुजुहरूको घरमा लगेर राखिन्छ। सोही दिन राति पूजा सिद्धिएपछि ठकु जुजुको घरबाट उठाएर लगी टेकुदोभाननगीचै रहेको उनको आफ्नो पीठमा लगेर राखिन्छ। त्यस दिन बिहान ठकु जुजु, पुरोहित, जोशी, आचार्य र अरू गुथियारहरू बसी देवतालाई बोका बलि दिई मांसाहुति यज्ञ गर्दछन्। दिनभरि भने जस्तै त्यहां पीठमा दर्शनार्थी भक्तजनहरूको भीड लागेको हुन्छ। बेलुका एघार बजेतिर पीठबाट पचलीभैरवको घ्याम्पो उठाएर ल्याई मुख्य जात्राको प्रारम्भ गरिन्छ। घ्याम्पोसंगै भैरवकी पत्नी अजिमाको प्रतिनिधित्व गर्ने सुरापात्र तथा उनका पुत्र गणेशको प्रतिमा संगै ल्याइएको हुन्छ। बाजा गाजासहित मचली, मतुलाछी, इनाखाटोल, ब्रह्मटोल, लगनटोल, ज्यावहाल, जैसीदेवल, चिकंमुगल, मरुटोलको बाटो गरी पचलीभैरवको जात्रा हनूमान्ढोका दरवारको सुवर्णद्वारअगाडि पुऱ्याइन्छ। त्यहां सरकार-तर्फबाट पचलीभैरवलाई सिङ्गै रांगो बलि चढाई परम्पराअनुसार पूजा गरिन्छ। त्यसपछि त्यहां-बाट उठाएर ल्याई गुथियारहरूको पालोअनुसार जुन वासस्थानमा पचलीभैरवलाई राख्नुपर्ने हो, त्यहां लगेर राखिन्छ र अर्को वर्षको जात्रा नआएसम्म देवता त्यहीं रहन्छन्।

यसरी रत्नमल्लले काठमाडौं जित्नुभन्दा अघिका वैश्यठकुरी राजाहरूले चलाएको पचलीभैरवको जात्रासंग हनूमान्ढोका दरवारको सम्बन्ध देखिएको छ। यताबाट यस दरवार-को ऐतिहासिक र सांस्कृतिक महत्त्वबारे अझ बढी कुरा प्रकाशमा आएको छ।

पचलीभैरव र उनका अष्टमातृकागणसहित प्राचीन नाच काठमाडौं शहरमा निश्चित समयमा अद्यापि नचाइन्छन्। मोहिनीविनोद शर्माको वंशावलीअनुसार सो नाच नचाउने प्रथा राजा अमरमल्ल (वि. सं. १५८६–१६१७ आ.) ले चलाएका थिए। नेपालको सांस्कृतिक इति-हासमा यस नाचको विशिष्ट स्थान छ। गथु प्याखं भन्ने नामले प्रसिद्ध सो नाच आठ वर्षमा एक-

१. लंसाल, "भाषावंशावली" २ भाग ६० पृ.

२. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष, ४ अङ्क, ३२ पृ.; "सं. ८३० आश्विन शुद्धि ५ श्री ३ पंचदि भैरवया मूर्ति तेपो ह्लापायागुलि हिरा न्हुर दयकर श्रीश्रीभुवनलक्ष्मी माजुन, श्रीश्रीभास्करमल्ल जुजुन थ्वगुलि दस."

चोटि यङ्गलको इलाकामा तथा चार वर्षमा एकचोटि यम्बुको इलाकामा बसी अभ्यास गरिन्छ । यङ्गलको इलाकामा नाच नचाइने वर्ष मरुसत्तलअगाडि र यम्बुको इलाकामा नाच नचाइने वर्ष मखनटोलमा पचलीभैरवको खड्गसंग गद्दीनशीन राजाको खड्ग विनिमय गर्ने परम्परागत चलन छ । विजयादशमीको दिन संपन्न हुने यस अवसरमा श्री ५ आफैं सवारी हुन्छ र पचलीभैरवको खड्गसंग आफ्नो खड्ग विनिमय गरिबक्सिन्छ । नेपालको सांस्कृतिक इतिहासमा खड्गसिद्धि भन्ने नामले यो रीति प्रसिद्ध छ ।

## दसैं

दसैं विशेषतया सांग्रामिक महत्त्वको चाड हो । अनिष्ट तत्त्वमाथि विजय प्राप्त गर्ने अभिलाषाले दसैंभरि भवानीको उपासना गरिन्छ । भवानीले विभिन्न रूप लिएर महिषासुर आदि अजेय दानवहरूको संहार गरेको कथा देवीभागवत्, सप्तशती आदि पौराणिक ग्रन्थमा बयान गरिएको छ । भगवान् रामचन्द्रले दसैंकै दिन देवीको आराधना गरी रावणमाथि विजय प्राप्त गरेका थिए भन्ने कथा हाम्रो यहां प्रसिद्ध छ । यसरी विजय प्राप्त गर्न मनाइने यस चाडमा शरद्ऋतुमा खेतमा लहराइरहेका धानको बाला देखेर उत्पन्न प्रसन्नताले विशेष चहलपहल ल्याइ दिएको हुन्छ ।

'दसैं' शब्द संस्कृत 'दशमी' शब्दको अपभ्रंश हो । दशमी तिथि यस चाडमा सबभन्दा महत्त्वपूर्ण दिन भएको हुनाले यस चाडलाई 'दसैं'' भन्ने चलन चलेको छ । पाटन च्यासलटोलको लिच्छवि अभिलेखमा नारायणदेवकुलदशमीगोष्ठीको उल्लेख आएको छ[1] । यो दशमीगोष्ठी नारायणको मन्दिरमा दसैंमा गर्नुपर्ने विधिविधान सम्पन्न गर्न बनाइएको गुठी हुनुपर्छ भन्ने देखिन्छ । यताबाट लिच्छविहरूको समयदेखि नै दसैं चाड मनाउने प्रथा चलिसकेको अनुमान हुन्छ ।

मल्ल राजाहरूको समयमा यो चाड शस्त्राभ्यास वा खड्गसिद्धिको रूपमा मनाइन्थ्यो । आजभोलि जस्तै घटस्थापना, फूलपाती आदि विधान पनि मल्लकालमा सम्पन्न गरिन्थे तापनि मुख्यतया उनीहरू आश्विनशुक्ल अष्टमीको दिन खड्गसिद्धिको प्रार्थना गरी देवीको समीपमा पूजाविधानपूर्वक खड्गस्थापना गर्दथे । त्यसको पर्सिपल्ट दशमीको दिन धार्मिक रीतिअनुसार खड्गको संचालन गर्ने काम गर्दथे । त्यस क्रियालाई उनीहरू पायात, खड्गजात्रा वा खड्गचालन भन्दथे, छोट्करीमा चालन पनि भन्दथे[2] ।

---

१. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ५४० पृ.

२. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट, २२ पृ.; "सम्वत् ८०३ आश्विनशुक्ल ।। प्रतिपदा, हस्तनक्षत्र, अंगारवार थ्व कुन्हुया वेला घटि १६ वेङाव घटि २१ थ्वतेन ह्ला नवरात्र स्वंङा ।। सप्तमी प्र अष्टमीया वेला घटि २१ वेङाव घटि २५ थ्वते न ह्ला केतुदले मक्र लग्नस खण्ड स्वङा. . . .दशमीया वेला घटी २ × वेङाव घटि ७ थ्वतेन ह्ला चारन याङा पूर्व्वमगन. . . ." (ठ्यासफु)

गोपालराजवंशावलीमा राजा स्थितिमल्ल र उनका भारादारहरूले आश्विनशुक्ल अष्टमीको दिन खड्गस्थापना (खण्ड स्वेंएका) गरेको उल्लेख आएको छ[1]। यताबाट सांग्रामिक सफलताको कामना गरी दसैंमा देवीको उपासना गर्ने चलन त्यस वेला पनि प्रचलित भइसकेको बुझिन्छ ।

दसैंभरि हनूमान्ढोका दरवारमा विभिन्न सांस्कृतिक गतिविधि देख्न पाइन्छन् । ती परम्परागत प्रथा ऐतिहासिक आधारमा केलाई हेर्दा निकै चाखलाग्दा र ज्ञानवर्द्धक देखिएका छन् ।

सर्वप्रथम आश्विनशुक्ल प्रतिपदाको दिन मूलचोकसंगै पूर्वपट्टि रहेको दसैं घरमा घटस्थापना र जमरा राख्ने काम सम्पन्न गरिन्छ । नारायणहिटी राजदरवारको निम्ति जमरा यतैबाट लगिन्छ । घटस्थापनाको मुख्य तात्पर्य दसैंको पूजाको लागि अभीष्ट देवताको आवाहन गर्नु हो भन्ने देखिन्छ ।

त्यसपछि सप्तमीको दिन फूलपाती भित्र्याउने काम हुन्छ । नुवाकोटमा पर्ने धुनिबेसी भन्ने ठाउँबाट फूलपाती ल्याइन्छ । यसको लागि हनूमान्ढोका दरवारबाट नियुक्त व्यक्तिहरू केही दिन अगावै धुनिबेसी पुगेर लक्षणयुक्त बेलको बोटलाई पूजा गरी बोका बलि दिन्छन् र त्यसको पात टिपेर ल्याई फूलपातीको दिन रानीपोखरीको उत्तरी किनारामा आएर बस्छन् । त्यस दिन हनूमान्ढोका दरवारबाट पुष्पगुच्छ, केराको पात, रातो कपडाले सिंगारेको पूर्णकलश लिएर रानीपोखरीको कुनासम्म गई फूलपाती लिन जाने चलन छ । यस समारोहमा नेपाल उपत्यकाका सबैजसो मध्यम र उच्च सरकारी कर्मचारीहरू उर्दीको पोसाक लाएर फूलपाती लिन जान हाजिर हुन्छन् । झल्लरी छाता ओढाएर बढाईं गर्दै बडो सजधजसाथ डोलीमा राखेर फुलपाती ल्याइन्छ । चहकिला बहुमूल्य वस्त्र लाएका दरवारी केटीहरूले पूर्णकलश बोकेका हुन्छन् । यसरी राजकीय संमानपूर्वक हनूमान्ढोकामा फूलपाती भित्र्याइन्छ । यही उत्सवको उपलक्ष्यमा टुंडिखेलमा बढाईं गरिन्छ । बढाईं नजर गरिबक्सन श्री ५ को पनि सवारी हुन्छ । बढाईं सिद्धिएपछि श्री ५ को सवारी हनूमान्ढोका दरवारतिर हुन्छ । तदनन्तर श्री ५ कै उपस्थितिमा नासलचोकमा राखेर फूलपातीको पूजा गरिन्छ र त्यसपछि फूलपातीलाई मूलचोकको बाटो गरी दसैंघरमा लगिन्छ । दसैं पूजाको लागि फूलपाती अत्यावश्यक वस्तु मानिएको छ । दसैंघरमा धार्मिक विधिविधान समाप्त भएपछि त्यताबाट श्री ५ को फिर्तिसवारी हुन्छ ।

मल्ल राजाहरू पनि आफ्नो दरवारमा पत्रिकास्थापना भन्ने नामले फूलपातीको उत्सव मनाउँथे । ठ्यासफुमा यसको उल्लेख आएको छ[2] । मल्लकालमा लेखिएको वर्षक्रियानाभक

१. गोपालराजवंशावली ६० ख पत्र, "स ५०२ अशुनि शुदि अष्टमीन श्रीश्रीजयस्थितिराजमलदेवप्रभुसन स्मस्त एक शर भारोपनि चोक दुंवोङ खण्ड स्वेंएका. . . ."

२. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट १०२–१०३ पृ.; "सं. ७८९ आश्विण शुक्ल ॥ दसमि तुत जुर, पत्रिकास्थापन, सप्तमिन तुयकाव. . . ." (ठ्यासफु)

ग्रन्थमा पनि पत्रिकास्थापनासम्बन्धी विधि लेखिएका छन्[1] ।

अष्टमीको दिन तलेजुको ठूलो मन्दिरबाट शुभ मुहूर्तमा तलेजुभवानीलाई मूलचोकको मन्दिरमा ल्याएर राखिन्छ । त्यस दिन तलेजुका पूजारीहरू मूलचोकमा तलेजुको ठूलो पूजा गर्छन् । यो चलन मल्लकालदेखि नै चलेर आएको पाइन्छ । खड्गस्थापना गर्ने काम पनि यही दिन सम्पन्न गरिन्छ[2] । अष्टमी र नवमीको बीचमा पर्ने रात कालरात्रि भन्ने नामले प्रसिद्ध छ । यस दिन रातभरि मूलचोकको तलेजुमा गुप्तरीतिले पूजा चल्छ ।

नवमीको दिन बिहान सबेरै तलेजुभवानीलाई प्रसन्न पार्न मूलचोकको मौलोमा बाँधेर सय्यौं रांगा र बोका बलि दिइन्छन् । मल्लकालमा लेखिएका ठ्यासफुमा पनि यस दिन देवीलाई भोग दिएका वर्णन पाइन्छन्[3] । यस दिन बिहान हज्जारन् नरनारी तलेजुको फूल प्रसाद ग्रहण गर्न तलेजुको मन्दिरमा आउँछन् । यसरी वर्षको एकपल्ट सबै दुनियाँदारहरूले हनूमान्ढोका दरबारभित्र पसी तलेजुभवानीको मन्दिर परिक्रमा गर्ने अवसर पाउँछन् ।

दशमीको दिन दसैंघरमा लामो पूजा हुन्छ । पूजा सिद्धिएपछि नारायणहिटी दरबारको लागि त्यहाँबाट प्रसादस्वरूप टीका लगिन्छ । यस दिन मूलचोकमा पनि दिनभरि भने जस्तै पूजा हुन्छ र बेलुका दश एघार बजेतिर मूलचोकबाट खड्गजात्रा निस्कन्छ । यस खड्गजात्रामा मल्ल राजाहरू आफैं भाग लिन्थे । यसैले आजभोलि पनि राजप्रतिनिधिको रूपमा राजकीय खड्ग लिने व्यक्ति यस जात्रामा अघि अघि हिंड्छ । यो खड्गजात्रा सिंहढोकाबाट निस्की मरुटोल

---

१. "वर्षक्रिया" राष्ट्रिय अभिलेखालय ८४५ विषयसंख्या, "प्रातः स्नायी जितेन्द्रियस्त्रिकालं शिवपूजक : बोधयेद् विल्वशाखासु षष्टयां देवि फलेषु च ।।१७२।। सप्तम्यां विल्वशाखार्थी चाहृत्य प्रतिपूजयेत् ।।. . . .अथ नवपत्रिका भविष्य (पुराणे) रेभा कच्वी हरिद्रा च जयंती विल्वदाडिमौ । अशोकमानकश्चैव धान्यं नवपत्रिका ।।"

२. वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष, ४ अङ्क २८ पृ. "सं. ८२७ आश्विन शुक्लः ।। प्रतिपदास नवरात्र स्वङा धनुलग्नस, तृतिया वाधि थ्वगुलि दस ।। सप्तमी घटि २१ प्र अष्टि वयकाव कुंभलग्नस खण्ड स्वङा देव कोहा बिज्यातका ।। नवमी घटि २९ वेतकाओ दशमी वयतुनं मीनलग्नस चारन याङा देव थाहा बिज्यातका चाह्लस. . . ."

३. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट ४१ पृ., "सं. ७९७ आश्विन शुद्धि ।। पादु कुन्हुं नवरात्र स्वङा. . . .अष्टमी कुन्हुया रात्रीस खड्गस्थापन याङा जुरो ।। अष्टमी अन्तर वनका, नवमीसं भोग विया. . . ." (ठ्यासफु)

वज्राचार्य, "अप्रकाशित ठ्यासफु" पूर्णिमा ३ वर्ष, ४ अङ्क २३पृ.; "सम्वत् ७९४ आश्विन शुक्ल ।। प्रतिपदा कुन्हु नवरात्र स्वङा दिन ।। थ्वयान खुन्हु यर राजाया छय सिङात्र देव कोहा विज्यातके मदयाओ श्री ३ तरेजुसकें तवदेवरसं दुगु ह्मं १२६ स्याङा, त्रिशूलसं मेशह्मं ४४ स्याक. . . ."

पुग्छ र सिंहसत्तललाई प्रदक्षिणा गरी यट्खातिर लाग्छ र कंपुकोटभित्र पसी महेन्द्रेश्वर महादेवको मन्दिर घुमी मखन हुँदै इन्द्रचोक पुग्छ। त्यसपछि मखनकै बाटो गरी सिंहढोकाबाट मूलचोक फर्कन्छ। जामा र पकडी लाएका दश बाह्र जना जति व्यक्ति हातमा खड्ग लिई यस जात्रामा भाग लिन्छन्। साँच्चिकै युद्धक्षेत्रमा जान लागेका लडाकाहरूले जस्तै उनीहरूले खड्ग उचालेका हुन्छन् तथा उनीहरूको प्रत्येक अवयवमा कम्प छुटिरहेको हुन्छ। युद्धक्षेत्रमा बजाइने प्राचीन ढङ्गको बाजा बजिरहन्छ, त्यसैको धुनमा उनीहरू पंक्तिबद्ध भएर शहर घुम्छन्। ठ्यासफुहरूमा राजदरवारबाट प्रारम्भ हुने यस खड्गजात्रा (पायात वा चारण) को उल्लेख अनेक ठाउँमा पाइन्छन्[1]। वर्षक्रियामा उद्धृत वाराहीतन्त्रमा पनि आश्विनशुक्ल दशमीको दिन यसरी नगरपरिक्रमा गर्ने विधि बताइएको छ[2]। टेबहाल, कोहिटी, महाबौद्ध आदि काठमाडौं शहरका विभिन्न भागमा पनि यस दिन खड्गजात्रा निस्कने चलन छ।

यसरी हनूमान्‌ढोका दरवारमा खड्गसिद्धिको लागि दसैं चाड मनाइन्छ। यससंग सम्बन्ध राख्ने सबैजसा रीतिथिति मल्ल राजाहरूकै समयदेखि चलेर आएका हुनाले तात्कालिक संस्कृतिको एउटा झलक यसले प्रस्तुत गरेको छ। यसबारे अझ बढी गम्भीर अध्ययन गर्न सक्यौं भने अरू पनि निकै महत्त्वपूर्ण कुरा उपलब्ध हुने आशा गर्न सकिन्छ।

## गुह्येश्वरीको जात्रा

गुह्येश्वरी नेपालउपत्यकाका प्रसिद्ध देवता हुन्। पशुपतिबाट पाउभर पूर्व बाग्मती नदीको किनारामा यसको मन्दिर रहेको छ। मल्लकाल र शाहकालका केही अभिलेख यहां प्राप्त भएका छन्। तर राजा प्रतापमल्ल (वि. सं. १६९८–१७३१) भन्दा अघिको कुनै अभिलेख यहां पाइएको छैन। अठाह्रौं शताब्दीको उठानतिर राजा प्रतापमल्लले गुह्येश्वरीको जलकुण्डमा जतनपूर्वक फलामका दलिन बिछ्याई अष्टदल कमलको आकार कुँदिएको ढुङ्गाले छोपी त्यसमाथि मन्दिर बनाइदिएका थिए। त्यसभन्दा पहिले यो स्थान एउटा जलकुण्डको रूपमा थियो। यो कुरा राजा प्रतापमल्लका दुइ अभिलेख[3] र मोहिनीविनोद शर्माको वंशावलीबाट ज्ञात हुन्छ। तर यस मन्दिरको वर्तमान रूपचाहिं शाहकालमा गरिएको जीर्णोद्धारपछि मात्र बनेको छ।

अष्टदल कमलको मध्यभागमा रहेको विवरबाट सो जलकुण्ड देखापर्छ। प्रायः सो विवर पूर्णकलशले छोपेर राखेको हुन्छ। जलप्रसाद लिन तथा कुण्डमा भेटी चढाउन मात्र सो

१. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट, ११–१२ पृ., "सम्वत् ८०० आश्विन शुक्ल ।।....दशमी...चारण याङा जुरो, दिग पूर्व्व याङा, पायात थहा वया जुरो ।।" (ठ्यासफु)

२. "वर्षक्रिया" राष्ट्रिय अभिलेखालय ८४५ विषयसंख्या, "अथ यात्रामुक्तं महाकालसंहितायां खड्गयात्रां ततः कुर्याच्छस्त्रास्त्रयोश्च चालनं। देशभ्रमणं कर्त्तव्यं रात्रौ कुर्याद् विचक्षण :।।"

३. योगी नरहरिनाथ, "गुह्येश्वर्या इतिहासः" संस्कृत–सन्देश १ वर्ष १०–१२ अङ्क २६–३२ पृ.

पूर्णकलश झिकिन्छ। कर्माचार्यहरू यस देवताका पूजारी छन्। पशुपतिमा जस्तै यस मन्दिरमा पनि हिन्दूहरूबाहेक अरू कसैलाई पस्न दिइंदैन।

तलेजु तथा देगुतलेजु जस्तै गुह्येश्वरी पनि शक्तिको एक रूप हो। यसैले राजा प्रतापमल्लको स्तम्भाभिलेखमा अंकित गुह्येश्वरीको स्तोत्रमा चण्डिका, कालिका आदि नामद्वारा यस देवीलाई संबोधन गरिएको छ। तलेजुको जस्तै गुह्येश्वरीको वाहन पनि सिंह नै छ। ती दुवै देवीको मन्दिरअगाडि स्तम्भमाथि सिंहको प्रतिमा बनाई राजा प्रतापमल्लले चढाएका हुन्।

विभिन्न पौराणिक ग्रन्थहरूमा गुह्येश्वरीको प्रादुर्भावको सम्बन्धमा चाखलाग्दा कथा लेखिएका पाइन्छन्। ती कथाअनुसार दक्षप्रजापति आफ्ना छोरीज्वाइँ शिवजीको बानीबेहोरादेखि अप्रसन्न थिए। जिउभरी खरानी लगाएर नाङ्गै हिंड्ने, सर्पको माला लगाउने, सांढे चढेर हिंड्ने ज्वाइँ प्रति उनको कत्ति आस्था थिएन। एक दिन दक्षप्रजापतिले ठूलो यज्ञोत्सवको आयोजना गरेका थिए। त्यस उत्सवमा सबैजसा देवदेवताहरू बोलाइएका थिए। तर आफ्ना छोरी सतीदेवी र शिवजी भने बोलाइएका थिएनन्। सतीदेवीलाई यो कुरो साह्रै खट्क्यो र शिवजीले रोक्दा रोक्दै पनि उनी आफ्नो माइतमा हुन लागेको सो यज्ञोत्सवमा सामेल हुन हिंडिन्। तर त्यहां उनलाई कसैले वास्ता गरेनन्। यो अपमान सतीदेवीलाई असह्य भयो र यज्ञको अग्निकुण्डमा हाम फालेर प्राणत्याग गरिन्। शिवजीलाई यो कुरो थाहा भयो र रीसले चूर भएर उनी दक्षप्रजापतिको यज्ञस्थलमा आइपुगे। शिवजीको क्रुद्ध रूप देखेर सबै देवताहरू डरले कांप्न लागे। अग्निकुण्डबाट सतीदेवीलाई टपक्क टिपी कांधमा हालेर शोकले बहुला जस्तो भएर खोला नाला पहाड उपत्यका नाघ्दै शिवजी यताउति लर्खराउँदै घुम्न लागे। उनको कांधमा सतीदेवीको शरीर छंदै थियो। यसरी कैय्यन् दिनसम्म घुम्दा सतीदेवीको शरीर गल्दै गयो र ठाउँठाउँमा उनका हातगोडा आदि अवयव झर्दै गए। जहां जहां उनका अवयवहरू झरे, त्यहां त्यहां एक एकवटा पीठदेवताको उत्पत्ति भयो। नेपालउपत्यकामा सतीदेवीको गुह्याङ्ग झरेको थियो। यसैले यहां गुह्येश्वरीको प्रादुर्भाव भयो। स्वस्थानी माहात्म्य आदि ग्रन्थमा वर्णित यो कथा हाम्रो यहां निकै प्रसिद्ध छ।

मार्गकृष्ण नवमीको दिन बेलुका गुह्येश्वरीको जात्रा हुन्छ। हनूमान्ढोकाको तलेजुको मन्दिरबाट यस जात्राको प्रारम्भ गरिन्छ। पूजाविधानपूर्वक गुह्येश्वरीदेवीको प्रतिनिधिस्वरूप एउटा कलश खटमा राखिन्छ र गुह्येश्वरीको मन्दिरमा लगिन्छ। त्यहां ठूलो पूजा हुन्छ र भोलिपल्ट दशमीको दिन बेलुका तलेजुकै मन्दिरमा फेरि खटजात्रा गरी फर्काइन्छ।

मोहिनीविनोद शर्माको वंशावलीअनुसार राजा जगज्जयमल्लले आफूले राजगद्दी पाएको खुशियालीमा वि. सं. १७७६ देखि यो जात्रा चलाएका थिए। उनले यो जात्रा चलाउन गुठीको वन्दोवस्त गर्दा भोट र भारतमा व्यापार गर्न जाने बत्तीस कोठी महाजनहरूलाई गुठियार बनाई दिएका थिए। यसैले आजभोलि पनि गुह्येश्वरीको यस जात्रामा व्यापारीहरू विशेष रुचि लिन्छन्।

हनूमान्ढोकाबाट प्रारम्भ भई हनूमान्ढोकामा आएर टुङ्गिने चारवटा जात्रामध्ये यसको गणना हुन्छ ।

## वसन्तश्रवण

वसन्तोत्सव मनाउने प्राचीन परम्परा छ । वैदिक ग्रन्थमा यसको उल्लेख पाइन्छ[1] । कामदेवको पूजा गरी उनीहरू यो उत्सव मनाउँथे । परन्तु लिच्छविकालका अभिलेखमा वसन्तोत्सवको स्पष्ट उल्लेख पाइएको छैन । गोकर्णको खण्डित लिच्छवि अभिलेखमा '. . .शुक्लपञ्चमी' को दिन नुहाई धुवाई गर्ने कुरो लेखिएको छ[2] । माघ शुक्लपञ्चमीको दिन हुने विशिष्ट दिनलाई संकेत गरी सो लेखिएको अनुमान हुन्छ । मल्लराजाहरू श्रीपञ्चमीको रूपमा वसन्तोत्सव मनाउँथे । यो कुरो भक्तपुरका राजा जितामित्रमल्ल र भूपतीन्द्रमल्लका वि. सं. १७४५ तथा १७५५ का अभिलेखबाट ज्ञात हुन्छ[3] । राजा प्रतापमल्लको वि. सं. १७०५ को मोहनचोकको दलानमा रहेको अभिलेखमा माघशुक्ल पञ्चमीको दिन कामदेवलाई पूजा गर्ने कुरो लेखिएको छ[4] ।

आजभोलि नासलचोकमा वसन्तश्रवणको काम सम्पन्न गरिन्छ । श्री ५ को उपस्थितिमा हनूमान्ढोका दरबारमा सम्पन्न गरिने विशिष्ट समारोहमध्ये यसको गणना हुन्छ । श्रीपञ्चमीको दिन बिहान हुने यस समारोहमा राजपत्रांकित र त्यसभन्दा माथिका सबैजसा सरकारी कर्मचारीहरू हाजिर हुन्छन् । नासलचोकमा सुसज्जित राजकीय सिंहासन ल्याएर राखिन्छ तथा माथितिर ठूलो समेना टांगिएको हुन्छ । समेनामुनि अघिबाट विभिन्न पूजासामग्री तयार गरिएका हुन्छन् । मूलपुरोहितले ती पूजासामग्रीद्वारा पूर्णकलशमा विधिवत् पूजा गर्छन् । पूजा सिद्धिएपछि शुभ मुहूर्त्तमा गीतगोविन्द नामक प्रसिद्ध संस्कृत काव्यको दोस्रो अध्याय पढेर श्री ५ लाई सुनाउँछन् । यसलाई वसन्तश्रवण भन्ने चलन छ । यसपछि उस्ताजहरू वसन्तराग गाउन शुरू गर्छन् । धाँवी भनी प्रसिद्ध परम्परागत प्राचीन गाना गाउनेहरूचाहिं व्याञ्चलि राग गाउन थाल्छन् । तदनन्तर श्री ५ को फिर्तिसवारी हुन्छ र त्यस वर्षको वसन्तश्रवण समारोह टुङ्गिन्छ ।

## फागु

फाल्गुनशुक्ल अष्टमीदेखि पूर्णिमासम्म वसन्तोत्सवको रूपमा फागु मनाइन्छ । फागु-

---

१. ए. एल्. बासम्, "द वन्डर ह्वाट् वाज् इन्डिया" (फोन्ताना बुक्स् ई. सं. १९७१ (वि. सं. २०२८)) २०९ पृ.

२. वज्राचार्य, "लिच्छविकालका अभिलेख" ३७१ पृ.

३. रेग्मी, "मेडियाभल् नेपाल" ३ भाग, ३ परिशिष्ट २१२ पृ.; पौडेल "अभिलेख–संग्रह" ४ भाग ८ पृ.

४. परिशिष्ट, २० संख्याको अभिलेख, १८ पङ्क्ति.

लाई होली भन्ने पनि चलन छ। गोपालराजवंशावलीमा लिच्छवि राजा मानदेवले होलीको परम्परा चलाए भन्ने उल्लेख छ। तर यहां पौषशुक्ल पूर्णिमाको दिन होली मनाएको कुरो लेखिएको छ[1]। यो अलि आश्चर्यको कुरो छ। मल्लराजाहरू पनि फागुन महीनामैं होली मनाउँथे। यो कुरो त्यस ताकाका अभिलेखहरूबाट बुझिन्छ[2]। आ-आफ्नो दरवारको अगाडि मयलको रूख गाडी तिनीहरू फागुको उत्सव सम्पन्न गर्दथे। फागुमा तीन मल्लदरवारको अगाडि मयलको रूखको चीर गाड्ने चलन अद्यापि चलेर आएको छ। हनूमान्ढोका दरवारमा ठूलो हनुमान्को सामुन्ने चीर गाड्न प्रस्तरको बीचमा प्वाल बनाइएको छ। सानो मयलको रूख त्यहां आजभोलि पनि प्रतिवर्ष गाडिन्छ। भगवान् कृष्णले मयलको रूखमा चढी गोपिनीहरूको चीरहरण गरेका थिए भन्ने पौराणिक कथा छ। त्यसको संझनामा मयलको रूखमा कपडाका टुक्रा झुण्ड्याई यस उत्सवको प्रारम्भ गरिएको देखिन्छ।

शाहराजाहरू काठमाडौंमा आई बस्न लागेदेखि गद्दीबैठक र कुमारीचोकको बीचमा रहेको प्राङ्गणमा रङ्गी विरङ्गी कपडा झुण्ड्याएर बनाइएको छत्राकार चीर गाडी फागुको आरम्भ गर्ने चलन चलेको बुझिन्छ। यस सम्बन्धमा भाषावंशावलीमा एउटा रमाइलो घटना दिइएको छ। नेपाल अधिराज्यमा बाइसी चौबिसी आदि सानसाना राज्य खडा हुँदा त्यहांका सानसाना राजाहरू सबै मयलको रूख गाडी होली गर्थे। पर्वतका राजाचाहिं एक छते चीर गाडी फागुको उत्सव मनाउँथे। अरू कसैले एक छते चीर गाड्यो भने पर्वतका राजाले सुन्नेबित्तिकै त्यहां आक्रमण गरी सो एक छते चीर च्यातिदिन्थे। यसरी पर्वतका राजाले आफ्नो प्रभुता प्रदर्शन गर्दै आएको थियो। यो कुरो श्री ५ पृथ्वीनारायण शाहलाई थाहा भयो। पर्वतका राजाले के गर्न सक्दा रहेछन् हेरूँ त भनी उनले गोरखामा तीनछते चीर गाडी होली मनाए। यो खबर पर्वतका राजाकहां पुग्यो। तर त्यस वेला गोरखाको स्थिति मजबूत भइसकेको हुनाले गोरखामा आक्रमण गरी तीनछते चीर च्यात्ने आंट गर्न सकेनन्[3]। पृथ्वीनारायणले काठमाडौं जित्नुभन्दा अगाडिको कुरो यो थियो। यस कारण गोरखालीहरूले काठमाडौं जितेपछि मात्र गद्दीबैठकनिर तीनछते चीर गाड्ने चलन चलेको बुझिन्छ।

शाहराजाहरू फागुको उत्सव बडो धूमधामसंग मनाउँथे। यसको लागि प्रशस्त पैसा खर्च गरिन्थ्यो। देशविदेशबाट नाच नचाएर हेरिन्थे। श्री ५ पृथ्वीनारायणको उपदेशमा पनि यसको चर्चा पाइन्छ[4]। फागुमा विदेशबाट नाच झिकाउँदा एक दुइ दिन मात्र राखी चांडै विदा गरिदिनू भनी उनले आफ्नो उपदेशमा भनेका छन्। मनोरञ्जनको लागि नेपालउपत्यकामा

---

१. गोपालराजवंशावली, २० ख– २१ क पत्र, "तस्य : श्रीमानदेव. . . .तस्य राजे गहामुत्पात भवेत् तस्य सान्ति कृत पोष्यपूर्णमी होलि कृतम् तेन सान्ति भवति."

२. पौडेल, "अभिलेख-संग्रह" ४ भाग ८ पृ.

३. पन्त र अरू, "श्री ५ पृथ्वीनारायण शाहको उपदेश" ७८७ पृ.

४. सोही, ३३१ पृ.

चलेका नेवारहरूको नाच झिकाइ हेर्नू, तिनीहरूलाई दिएको पैसा त आफ्नै देशमा रहन्छ, विदेशी-हरू आए भने सम्पत्ति बाहिर जान्छ, आफ्नो देशको रहस्य रहँदैन भन्ने भावको कुरो त्यहां परेको छ।

आजभोलि फागुमा नाचगान गर्ने चलन लुप्तप्रायः भइसकेको छ। लहडीहरू अबीर रङ्ग खेली यो उत्सव बनाउँछन्। फाल्गुन शुक्ल पूर्णिमाको दिन राती गद्दीबैठकअगाडि उभ्याइएको तीनछते चीर ढालेर टुंडिखेलमा लगी पोलिदिएपछि यस उत्सवको अन्त्य हुन्छ।



## १ संख्या

## श्वैतभैरवको मुनि पाइएको लिच्छवि अभिलेख[1]

१. विविधशकुन्तपशु....ङ्कृतयुद्धरुह.... तककिरातवर्षधर.... करः यः
२. चिरन्तनं लिच्छविराजकारितं पुरातनैर्व्वृत्तिभटैरुपेक्षि(तं)
३. ................................ रुह
४. ................................ क्षेत्रम् भग्नक
५. ................................ पुनः पुनर्व्वसुः ॥

## २ संख्या

## तानाबहालमा रहेको लिच्छवि अभिलेख

१. ......आषाढकृष्णसप्तम्याम्....
२. राजपरमेश्वरश्रीमानदेवराज्ये।.....
३. ....................
४. ....................

## ३ संख्या

## नासलचोकमा रहेको लिच्छवि अभिलेख

१. ॐ भक्त्या विष्णोः समुद्दिश्य....
२. आषाढकृष्णसप्तम्याम् दत्तं अमृतवर्मणा
३. सम्वत् २०७

## ४ संख्या

## सुन्दरचोकमा रहेको लिच्छविकालपछिको अभिलेख[2]

(१) संगरादकृतिभिर्दुर्लस्यतो भीषणात्तस्मै श्रीपतये ममास्तु करयोः साश्लिष्टिरेषा सदा ॥
(२) व ग्ख्यातो धर्मनिधि वीरमतिमान् श्रीवीरपालः सुतः। भार्या तस्य सती सदा प्रणयिनी सौभाग्यलक्ष्मी....
३ णयभूर्जातः शशीवाम्बुधेः ॥ काले कारितपाणिपीडनविधे : श्रीगङ्गलक्ष्म्या स्वयं स्वल्पस्रोगमवा....

---

१. यहां अप्रकाशित भनी टिप्पणीद्वारा सूचना नगरिएका अभिलेखहरू 'अभिलेखसंग्रह', 'इतिहाससंशोधनको प्रमाणप्रमेय', 'ऐतिहासिक पत्रसंग्रह', 'मेडियाभल नेपाल' आदि ग्रन्थ र 'संस्कृतसन्देश', 'पूर्णिमा', 'कैलास' आदि पत्रपत्रिकामा प्रकाशित भएका छन्।

२. अप्रकाशित.

४ तः कालेन नीतः क्षयम् । ज्ञात्वा पुण्यचयम्विभोरनुमृतौ पत्नी मनोवर्त्तिनी सार्द्धन्तेन चितानले भ.

५ न् जहाय क्षणात् ॥ पित्रा शोकमपास्य धर्ममतिना शास्त्रार्थसंवेदिना वाछिनागकुलान्तकेन सहितो विष्णुः प्रतिष्ठापितः

६ कृत्वा पुत्रवधूसमां प्रतिकृतिं चानन्तपादस्थितांन्तद्वत्सार्धमनन्तसद्मनिलया भूयादिति श्रीपते : ॥ लक्ष्मीवा. . . .वांघ्रिसेवनपरो

७ भूयात्मदीयः सुतो लक्ष्म्याः सापि ममात्मजन्मगृहिणी भर्त्रा समं या मृता। भूया संवरपाद-पंकजरजः लोकाः सन्तु निलो–

८ ग दुःखरहिता : पुत्रस्य वध्वा अपि ॥ शुभम् ॥

## ५ संख्या

## मरुसत्तलको ताम्रपत्र

१. ॐ स्वस्ति श्रेयोस्तु सम्वत् ४५४ मार्गशिर वधि ११ श्रीयँगाल श्रीत्रिभय छचं पांचालि
२. भह्लाह्लस सुदिस श्रीच्याछ तव तव मीसन संमतन जुर उदेशन थिति लोपन
३. याङ स्ताक्व थिति थिरारपरंङा भाष थ्वते जुव, श्री पाचालि भह्लाह्लस श्रीच्याछ त–
४. व तव मी संमतन जुर उदेशेन जुगि सामरगी याके लागरपं च मतेव याङ थि
५. ति थिरारप रंङा भाष थ्वते कदाचित् विद्‌वकारी याङ स्वदेशी परदेशी
६. ननो मथिरापुं ध्वंसरप यंग्वद्वाल्य गोहत्या ब्रह्महत्या स्त्रीहत्या थ्वतेया महा
७. पातक लाक जुप्वं निवंश नि, साखा जुयमाल्व जुप्वं ब्रह्मताल रुद्रताल
८. विष्णुतालनों ह्लह्लपे धाल्व जुरं थ्व थिति लोप याकया रौख महारौख तप–
९. न महातपन, अविचि महानरकस पह्लह्लपो थ्व जुरं थुते भाषया थिरा–
१०. रपाया साक्षि श्री श्रीलिंछिनारायण भाट्टारकस जुन्वं, थ्वते तात प्रज याक्वंस
११. लक्ष्मीवृद्धि आयुवृद्धि थ जुर, थ्व थिंरारपेक्वोस शुभमस्तु ॥

## ६ संख्या

## मरुसत्तलमा टाँगिएको कोले (नाप्ने भाँडो)मा अङ्कित अभिलेख[1]

१. शुभ ॥ श्रीयंग्रमंन्दोस, निरकं थवंको,
२. जोगी भरादत्वं, सहजिरवदायिनिस्यं,
३. थ्व कोलेन फलके कुरच्छि धारे, ग्वरदो
४. छग्वर धारे दोहोपा जुरो, थ्वया पूण्यार्थ–
५. न जोजमान स्वर्ग संप्राप्ता भवंन्ति ॥ श्रेयो–
६. स्तु ॥ सम्वत् ५३७ आखाढ कृष्ण ॥ अमावा–

---

१. अप्रकाशित.

७. स्याया तिथ्व ॥ प्वक्षनक्षत्रे ॥. . . . जोगे ॥ सनि–
८. चरवासरे ॥ शुभ

७

## जगन्नाथको मन्दिरभित्र चतुर्मूर्ति विष्णुको पादपीठमा कुँदिएको महेन्द्रमल्लको अभिलेख[1]

१. स्वस्ति श्री श्री जयमहेन्द्रमल्लदेवेन. . . .
२. देवादि प्रतिमा (स्था)पितेति सम्वत्
३. ६८३ माघ शुक्ल

८ संख्या

## उमामहेश्वरको पादपीठमा कुँदिएको रानी जयन्तिकाको अभिलेख[2]

१. . . . .मल्लस्य जननी श्रीजयन्तिका ॥ अचिकरत्सप्रतिमं सा मठं शिवतुष्टये ॥ अन्नं महेन्द्रमल्लेन वीरशैवाय कल्पितं एतन्मठनिवासिभ्यस्तत्तया दीयते. . . .
२. शुचौ शुक्लप्रतिपदि गुरुपुष्ये प्रतिष्ठितं ॥
३. नेपालीयगते वर्षे नन्दरंध्ररसान्विते ॥

९ संख्या

## तलेजुको मन्दिरमा रहेको लक्ष्मीनरसिंहमल्ल र सिद्धिनरसिंहमल्लको सन्धिपत्र

ॐ स्वस्ति ॥ श्री ३ तवदेवर स्वेष्टदेवता सपर्ण(?) याङन श्रीश्रीजयलक्ष्मीनरसिंहमल्लदेव श्रीश्रीजयसिद्धिनरसिंहमल्लदेव उभय ठाकुलसन एकानि शत्रु एकानि मित्र याङन सत्य पुरस्कार याङ बंध याङ बिज्याङाया भाखा, श्रीश्रीकिंजाजुया राज्यस गाम क्वाठ जन परिजन बारन संङव बिज्याययस्तननो, दुर्जनन भेद याङ हर ङस्यं थेथे लह्ला याङ बिज्याययस्तनननो, श्रीश्रीकिंजाजुनं श्रीश्रीददाजुया राज्यस गाम क्वाठ जन परिजन बारन संङवबिज्यायस्तननों, दुर्जनन भेद याङ हर ङास्यं थेथे लह्ला याङ बिज्याययस्तननों, परचक्र साधरपे जुरङासेन उभय ठाकुल सम्मतन हानि लाभ अर्थ सामर्थ संसर्ग याङ बिज्याययस्तननों, थ्वते अर्थ मधरपं असत्य याङ बिज्यातसा थ्व श्री ३ स्वेष्टदेवतास कुदृष्टि निग्रह जुयिव, थ्वते अर्थ धररपं सत्य याङ बिज्याङा जुरसा श्री ३ स्वेष्टदेवतास सुदृष्टि अनिग्रह जुरो, थ्वते बंधया आवदि उभय ठाकुलस दुच्छि जुरो. थ्वते बंधया दृष्टसाक्षि श्रीविश्वराजदेव उपाध्या रामानन्द जोसि कृष्णप्रमुख आचार्य थ्वते जुरो. श्रेयोस्तु सम्वत् ७४१ माघ वदि चतुर्दशी शनैश्चरवार शुभम् ॥

---

१. अप्रकाशित.
२. अप्रकाशित.

## १० संख्या

## जगन्नाथ मन्दिरको लक्ष्मीनरसिंहमल्लको ताम्रपत्राभिलेख

१. ॐ स्वस्ति दत्तात्रेयाय गुरवे नमः ।। श्रीमत्पशुपतिचरणकमलेत्यादि विविध वि
२. रुदावलीविराजमान मानोन्नत महाराजाधिराज श्रीश्रीजयलक्ष्मीनरसिंह
३. मल्लदेवानां, परमहंस दशनाम सन्यासी, वस्त्रधारी दयालभारती रेणु
४. का भारती, दिगंवर दयाल भारती, रामरत्न दिगंवर, रामचन्द्र दिगंवर, राम
५. गिरि, दिगंवर विद्यानन्द, पुरी निरंजन पुरी, वालगिरि शंकरनाथ गदाधर गिरि,
६. भगवान् भारती, संयोगी पूर्णगिरि, संयोगी अयोध्या गिरि, संयोगी कुलगिरि
७. संयोगी अयोध्यागिरि, संयोगी विद्यागिरि, संयोगी पुरुषोत्तम गिरि, श्रीधर भाजु टेखु
८. सिंह भाजु, नरहरि प्रधान, भाजुदेव प्रधान, रामचन्द्र प्रधान, श्रीकृष्णदास जोसि टेकन
९. सिंह खडगा, श्रीवासुदेवराजा, सूर्याभान खडगा, श्रीविश्वम्भरराजा, एतना पाँच मिलि,
१०. काष्ठमण्डपनगरे वंधक दुल, मुअर, अपतारि दण्ड कुण्ड चार अंश तेहिमह एक अंश रा–
११. जाक, एक अंश वरामीक, एक अंश संयोगी सन्यासिक, आध अंश खताधारी आध अंश पाँ
१२. चक कदाचित् खताधारी नहितों पाँचक, नेपाल संवत् ७५३ मार्गकृष्ण षष्ठयां शुभमस्तु ।।
१३. लक्ष्मीनरसिंह मल्ल राजाक राज्यमह रहल संयोगी संन्यासी सवक मुअर अपतारि दण्ड
१४. कुण्ड महाराजा, कमन्डसे विगल दशनाम संन्यासी विलसे लडयनहि दशनाम संन्यासी राजा दण्डना
१५. म मण्डसे मिलि जे करके योग्य हदु, से करिय, दुःखी गरीव के दुःख देदुय नहि अपना राया क न्याय
१६. अपन करिय अप्न राज्य वुका दुय
१७. वैरागी संन्यासीक दण्डकुण्ड, मह यथायोग्य तीककका
१८. राकेके देदुयदु वधक साक्षी गुसाइ वालकृष्ण
१९. प्रमुख दशनाम संन्यासी ।।

## ११ संख्या

## अग्निशालापुरको अभिलेख[1]

सम्वत् ७५७ माघ शुक्ल

## १२ संख्या

## शिवपार्वतीको मन्दिरसँगै डबलीमा रहेको लक्ष्मीनरसिंहमल्लको अभिलेख

१. श्रीशाके १५६३ श्रीसम्वत् ७६१ मासे ४ तिथौ ७
२. वारे १ आषाढ सुदि ७।। स्वस्ति श्री ३

---

१. अप्रकाशित.

३. पशुपतिचरणकमलधूरिधुसरित शिरो–
४. रुह श्रीमन्माहेश्वरिष्टदेवता वरलव्द–
५. प्रसाद देदिप्यमानोन्नतः महाराजा–
६. धिराज श्रीमच्छ्रीजय । श्रीश्रीलक्ष्मीनृ–
७. सिंहमल्लदेवेन ।। मण्डनं महादेव भूमिने ।।
८. अत पर भाषा । संनू चैत्रत पश्चिमे अ–
९. गिनहोत्रेन उत्तर चौडवात्रेन पूर्व्वतो पुराना छ–
१०. त्रेनदछिन यति भूमिमह धर्न्नुरोजो–
११. हान्मारु गर्न्नु नाहि जस्ले गन्या महा
१२. देवघात् गन्याको पाप येति सिवान
१३. भित्र रह्या देवता घात् गन्याको पाप् त–
१४. स्का शिर कदाचित् हट् गरी रहत
१५. अफाल्या प्राश्चित्य नाहि
१६. साछि व्राह्मन प्रधान षस मग्र पा
१७. . . . . ते श्राप . . . . . . . .

## १३ संख्या

## त्रिशूलडबलीको प्रतापमल्लको अभिलेख

१. ॐ नमः श्रीचण्डिकायै ।। नेपालक्षितिपालभालतिलकश्रीमत्प्रतापोद्भव, प्रोद्यत्कीर्त्ति लतादलं सुविमलं प्रायो दि–
२. धीर्षुर्हठाल्, चञ्चत्केतकिशङ्कयात्मकवरीं गाढं मुहुर्वृण्वती, हस्ताभ्यां त्रिपुरारिराज– रमणी पायात्प्रतापं नृपं. ।। दिग्दन्तावल–
३. कर्ण्णतालजनितैर्वातैः सदानर्त्तितप्रोद्यत्प्रौढतरप्रतापशिखिनो विश्वैकसंरक्षिणी । प्रासादे जयतीन्दुमौलिमहिषी सा
४. भ्रंलिहेऽस्मिन्मुहुरुत्पाद्य प्रवलप्रतापनृपतेरानन्दकन्दोदयं ।। आसीच्छ्रीहरसिंहदेवनृपति- र्दातावदाताशयः, श्रीकार्ण्णाट
५. वसुंधराधिपमहावंशोद्भवो भावुकः । उन्मीलन्मिथिलापुरीं निरुपमां नीत्या प्रशासद्द्विषां हन्ता शोभियशोऽपरा सुरस–
६. रित्स्रोतोविधायी गुणी । अन्तर्व्वल्लितविद्युदम्वुदसमाः स्तम्वेरमा दुर्द्दमा दाहोत्तीर्ण्ण– सुवर्ण्णशृंखलयुता ग्रैवयघण्टोद्यताः यस्या वा–
७. सगृहाजिरं मदजलैर्ज्जम्वालितश्चक्रिरे वल्गद्वाजिपतत्पदातिनिचयं प्रह्लादवृन्दप्रदं ।। आक्राम्तं यवनैर्भृशं विधिवशात्सोपद्रवं
८. वान्धवैः सार्द्धं तत्परिहाय चात्मनगरं नेपालमभ्यागतः । सोत्राधिष्ठितमेदिनीपरिवृढान्नि- र्द्धूय दिव्यास्पदं तेने भक्तपुरा–

९. ह्वयश्च कलितं हृष्टैश्च पुष्टैर्ज्जनैः । एतस्यैव महामतेः समभवद्वंशे जगद्वन्दिते दुष्टानां द्विषतां विनाशनकरः श्रीयक्षमल्लो

१०. नृपः । भूमीनायकमौलिसंभृतलसन्माल्योद्भवै रेणुभिष्कामोद्दीपनगन्धिभिः प्रतिदिनं संरञ्जितांघ्रिद्वयः । एतस्मात्समजीजन–

११. द्विजयिनो दर्भाग्रसंतीक्ष्णया बुद्धचा वाक्पतिभावमभ्युपगतः श्रीरत्नमल्लो नृपः। अम्भोधेरिव शर्व्वरीपरिवृढो वीर्य्यैकस–

१२. द्भ्राजनं येनाकारि हि काष्ठमण्डपपुरीरक्षा प्रसिद्धात्मना ।। श्रीसूर्य्यमल्लोऽजनि सूनुरस्य प्रशान्तवाधं हृदयं दधान ।

१३. सोयं सतामेव हितो म(न)स्वी धर्मैकचित्तः किल साधुवृत्तिः।। वभूव पुत्राऽमरमल्लनामा कामाभिरामोऽस्य महानुभावः पु

१४. राणसाहित्यरसैकवेत्ता छेत्ता रिपूणां सुहृदां हितेप्सु : । तन्नन्दनो निन्दितशर्व्वरीशो यशोभिपूरैर्नृ पनीतिशुद्धः । महेन्द्र

१५. मल्लो रिपुचित्तभल्लो महानुभावो निजवंशकेतु :।। आश्चर्यकर्म्मा तदिमं प्रसादमभ्रंलिहं स स्थपतिव्रजेन । निर्म्माय धर्म्मानु

१६. रतो मणीषी निःश्रेयसाय प्रददौ भवान्यै ।। अनेकराजन्यशिरोमणीनामनीचरोचिःपरिधौतपादः । दाता गुणी नीतिविदां

१७. वरिष्ठस्तन्नन्दनोभूच्छिवसिंहदेव : । संगीतविद्याम्बुधिपारदृश्वा विश्वानुरक्त : सचिवावतंसः । हर्य्याद्यचश्चद्हरसिंहदेवो

१८. देवो जनानामजनीह तस्मात् ।। सुतोऽथ जातो गुणिनोस्य नाम्ना लक्ष्मीनृसिंहः स्पृहनीयकीर्त्ति : । मखेन दानेन स तेन तेन

१९. देवावनीदेवमुदं वितेने ।। एतस्मादुदयाचलादिव रविर्द्देवोऽम्बुराशेरिव श्रीमद्यामिनिजानिरुज्ज्वलरुचिष्प

२०. द्मादिव श्रीविधिः। जातोऽयं ललितप्रतापवलितःश्रीमत्प्रतापो नृपो मार्त्तण्डान्वयकैरवामृतकरो ज्ञानाम्बुरा–

२१. शिर्व्वशी ।। श्रीमत्प्रतापकविना कविनायकेन केषामदायि सुखजालमनेन नेह । गीतेन तेन तरुणीहृदयं वि–

२२. शुद्धं कामाभिलाषपदमानयतेव हन्त ।। यदा यदायं तुरगाधिरूढस्तदा तदा कस्य मनो न मोदि। तदा तदा वर्द्धि–

२३. तकामभावं वभूव चेतो वनिताजनानां।। मद्रूपचौरोयमितीव मत्वा कोपाकुल : काम इमञ्जघान । आस्थाय रूपं कि

२४. मु कामिनीनां भ्रूकार्म्मुकोन्मुक्तकटाक्षवाणैः ।। अत्यन्तसुन्दरपदं ललितप्रबन्धं गीतं मनोभवसहोदरवर्ण्णभा–

२५. जः । अस्याधुनापि वदतीव गुणाञ्जनानामाश्रित्य कण्ठममलं सुखकर्ण्णपेयान् ।। निकटमुपगतेऽस्मिन्क्वापि वा–

२६. ला वभूव स्मितमधुरमुखातिव्रीडितेन्दुश्च कापि। पुलकिततनुभिन्दत्कञ्चकग्रन्थिरुद्यन्नयनमिह च कापि प्र(प्रे)मदिग्धं व–

२७. हन्ती ।। एतत्कीर्त्तिजिगीषुरेव रजनीनाथोत्र चान्द्रायणं धत्ते पक्षयुगक्रमादिव वपुः सम्वर्द्धय ञ्छातयन्। स्नायं

२८. स्नायमतोऽन्तरीक्षसरिति प्राप्नोति नैतत्कुलं चिन्ताव्याकुलितो यतोऽङ्ककपटान्म्लानायमानो दिवि ।। अद्याप्युत्त

२९. मपद्मिनीभिरभितस्तत्कीर्त्तिद्गीयते प्रातः प्रातरूदञ्चदम्वरमणेर्व्यक्तं पुरो लीलया। आत्मीयोदरसंभ्रमन्म–

३० धुकरव्यूहोन्नम ज्झांकृतिव्याजात्कर्ण्णसुखप्रदायिनिनदैर्व्यर्थीकृतेन्दू रुचा ।। एतद्घोटकराजतापविदलद्भूख–

३१. ण्डकोटच्युत्पतद्धूलीधोरणिकान्धकारनिवहैर्द्दिक्चक्रमाक्रम्यते । दृष्ट्वा यामिनिशङ्कया तदभितश्चक्राङ्गना–

३२. नाङ्गनाः काकुङ्कातरमालपन्ति नृपतेरस्यारिवामा यथा ।। सोऽयं वै जयति प्रतापनृपतिर्द्दानैरनेकैः स–

३३. तां दारिद्र्यादिविपद्गणंगुणवतां निर्म्मूलतामानयन्। एतस्मात्स्तवकभ्रमद्भ्रमरिकाव्याजेन कल्पद्रुमो धू

३४. मश्वासमिवानिशं वितनुते येनाभिभूतः स्वयं ।। अस्य श्रीमत्प्रतापक्षितिरमणमणेर्दनकीलाल धाराप्रो–

३५. द्भूता जातभङ्गा सरिदिह शुभगा वर्द्धमाना विरेजे। उत्क्षिप्तैः कीर्त्तिसंघैष्कुमुदवनभरैः फुल्लितैरञ्जिताति

३६. प्रोद्यत्तारासमूहैरमलतरदिवः संपदं संहरन्ती।। युग्मे(ग्म)तु(र्तु)वाजि परिरञ्जितहायनेऽस्मिन् ज्येष्ठस्य कृष्णनव–

३७. मीभृगुरेवतीके। आरोप्यते हरवधूपरितुष्टये तु सिंहध्वजोयममुना विधिना नृपेण ।। गीते भव्ये च काव्ये कुशलम–

३८. तिरतिस्वच्छसंकीर्ण्णकीर्त्तिप्रोद्यद्गङ्गाप्रवाहैरतिधवलतरैष्प्लाविताशेषभूमिः। प्रोदञ्चत्क्षोणिपालोज्वलमुकुट–

३९. मणिज्योतिरुद्योतितांघ्रिः सोयं राजाधिराजश्चिरमवनितरे(ले) जीवतु श्रीप्रतापः ।। शुभ ।। श्रेयोस्तु ।। श्रीनेपा–

४०. ल ।। सम्वत् ७६२ ज्येष्ठमासे कृष्णपक्षे नवम्यान्तिथौ रेवतीनक्षत्रे शोभनजोगे यथाकरण-मुहूर्त्ते

४१. शुक्रवासरे मिथुनरासिगते सवितरि मीनरासिगते चन्द्रमसि ।। थ्व कुन्हु श्री ३ तवदेवल इष्टदे–

४२. वता प्रीतिन श्रीश्रीजयप्रतापमल्लदेव प्रभु ठाकुलसन् थ्व सिंहध्वजस्थापन याङा दिन जुरो ।। पुनः

४३. भाखा मोर लाक्व वुरो १ थ्वते वुया वलसानं महनीया माहाष्टमी कुन्हु चेकन फं १ कुड २ थ्वते चेक

४४. न थ्व सिंहध्वज खंभस पायमार जुरो मपास रोभ यातसा पंचमहापातक राक जुरो ॥ लिखित राजदै–

४५. ज्ञ मयूरध्वज भारो ॥ शुभमस्तु सर्व्वदा : ॥ श्रावनरि गोह्म राजानं सुनान थ्व सिंहध्वज सेनकरसां

४६. यिचिलथिचिल यातसां गुप्तयातसां थ्व श्राखर म्हुतसां कोटिपंचमहापातक राक जुरो ॥ भिनकाव निदान यातसां

४७. समस्त कर्म्म पूर्ण्ण जुरो ॥ थ्यते दक्व वुरो २ थ्वतेया वलसानन चेकन फन ३ दयकाव वर्षप्रति महाष्टमी कुन्हु श्रीश्रीप्रतापध्वज वुयक माल ॥

## १४ संख्या

## त्रिशूलचोकको सिंहध्वजको प्रतापमल्लको अभिलेख

१. श्रीश्रीश्री स्वइष्टदेवता प्रीतिन, थ्व सिंहध्वज, श्रीश्री

२, प्रतापमल्लन तया, ॥ सम्वत् ७६२ ज्येष्ठकृष्ण नवमी ॥

## १५ संख्या

## तलेजुको मन्दिरभित्र रहेको प्रतापमल्लको सानो मूर्तिको अभिलेख[1]

शुभ ॥ सम्वत् ७६५ पौषमासे शुक्लपक्षे पूर्ण्णमास्यान्तिथौ पुष्पनक्षत्रे वृहस्पतिवासरे श्रीश्री–श्वेष्टदेवताचरणकमलभवत्था सर्व्वस्मिन्जन्मन्येतत्सर्मूत्तितुलादेवीसेवार्थं देव्यग्रे स्वकीयां मूर्त्तिं श्रीश्रीप्रतापमल्लवर्म्माहं स्थापयामि ॥ शुभमस्तु ॥

## १६ संख्या

## कृष्णमन्दिरको प्रतापमल्लको अभिलेख

१. श्रीभवानीशङ्कराभ्यां नम : ।

२. आसीच्छ्रीसूर्यवंशे रघुनृपकुलजो रामचन्द्रो नृपेश–

३. स्तद्वंशे नान्यदेवोवनिपतिरभवत्तत्सुतो गांगदेवः । तत्पुत्रो

४. भून्नृसिंहो नरपतिरतुलस्तत्सुतो रार्मासह स्तज्जः श्रीशक्तिसिंहो धरणिप

५. तिरतो भूपभूपालसिंहः ॥ तस्मात्कार्णाटचूडामणिरिव हरर्युत्सिहदेवोस्य वंशे भू–

६. पः श्रीयक्षमल्लो नरपतिरतुलो रत्नमल्लोप्यमुष्मात् । तस्मात् श्रीसूर्य्यमल्लोऽवनिपतिरभ–

---

१. अप्रकाशित.

७. वत्तत्तनूजोमराख्यो मल्लोभूत्तस्य पुत्रो रिपुगणविजयी श्रीमहेन्द्राख्यमल्लः ।। तस्मात् श्रीशि–
८. वसिंहोभूद्धरिहरसिंहसुतस्तस्मात् । तस्माल्लक्ष्मीनृसिंहोपि नरसिंहपराक्रमः ।। तस्मात् श्रीमत्प्रतापो नर–
९. पतिरभवद्भूपभालावलीषु न्यसत्पादारविन्दद्वयरसविलसद्रेणुभिर्भूषणानि । योकार्षीत्कूति
१०. खासाकिरमिति सहसा भोटभूपस्य देशाज्जग्राहैवाहदीनं प्रतिदिनमपरे यं भजन्ते नरेशाः ।। भक्त–
११. ग्रामनरेशमल्लनृपतिर्द्दत्वेभमेनं भिया भेजेसौ वसुधां जहार सुदृढं संदार्य्य दुर्गं पुनः । श्रीमड्डंवरसाह
१२. भूपतिवलं विध्वस्य दन्तावलं श्रीमत्सिद्धिनृसिंहमल्लनृपतेर्ज्जग्राह दुर्गावलीं ।। ग्रास्ते काप्यमराव–
१३. तीव विलसद्दन्तीन्द्रदिव्याङ्गनायुक्ता स्वर्णमयी विहारनगरी सा राजधानी परा । श्रीमत्श्रीकम
१४. ताधिकामरुपतेरिन्द्रेण तुल्यस्य च प्रत्यर्थिव्रजनिर्ज्जितस्य नरयुन्नारायणस्यापि च ।। लक्ष्मीनारा
१५. यणस्तद्वीरनारायणस्ततः । पुत्री रूपमती तस्य प्राणनारायणः सुतः ।। सेयं रूपमती स–
१६. ती गुणवती स्वर्णद्युतिः सन्मतिर्म्मार्द्यत्कुंजरगामिनी प्रणयिनी साक्षात्परा रुक्मिणी । ग्रासीत्स
१७. र्व्वगुणस्थितेर्न्नरपतेः श्रीमत्प्रतापस्य सा पत्नी प्राणसमा यथा जलनिधेः पुत्री जगत्पायिनः ।।
१८. कार्णाटी रंगघाटी कुचकनकघटी कामलीलैकवाटी स्वर्णालंकारकोटी हरिसदृशकटी
१९. चारुदेहानुपाटी । नाम्ना राजमती महारसवती भूपप्रतापस्य सा भूता भोगवधूटिका
२०. किल हरेर्भामेव जीवाधिका । स्वर्गार्थं कृतवान्प्रतापनृपतिः सद्योषितोरेतयोः प्रा
२१. सादं वसुपत्रपद्मसदृशं शृङ्गाष्टकैः शोभितं नानाचित्रविराजितं सममयं तद्वं–
२२. जयन्तेन वै होमाद्यैरकरोच्छ्रुतिस्मृतिमतैरस्य प्रतिष्ठाविधिं ।। एतयोर्म्मास्तु वि
२३. श्लेषो रुक्मिणीभामयोरिति । जन्मान्तरेप्ययं भूपो हरिमूर्तिरिहावसत् ।। ग्रतः परं
२४. देशभाषा ।। ह्मव सूर्य्यवंशस श्रीरामचन्द्र ग्रवतार जुर, थ्वया वंशस नान्यदेव, थ्वया काय नरसिंहदेव थ्वया
२५. काय रामसिंह, थ्वया काय शक्तिसिंह, थ्वया काय भूपालसिंह, थ्वनलि हरसिंहदेव नेपाल विज्याकह्म थ्व
२६. या वंशस यक्षमल्ल, थ्वया काय रत्नमल्ल, थ्वया काय सूर्य्यमल्ल, थ्वया काय ग्रमरमल्ल, थ्वया काय महे–
२७. न्द्रमल्ल, थ्वया काय शिवसिंह, थ्वया काय हरिहरसिंह, थ्वया काय लक्ष्मीनरसिंहमल्ल, थ्वनलि प्र
२८. तापमल्लदेव दत, विहार देशया राजा नरनारायण, थ्वनलि लक्ष्मीनारायण, थ्वनलि वीरनाराय
२९. ण, थ्वया काय प्राणनारायण, म्ह्याच श्रीरूपमतिदेवी दत, थ्व रूपमतिदेवी श्रीश्री प्रताप

३०. मल्लया पत्नी, कार्णाट देशया श्रीराजमती प्रेयसी थ्वपनि नेह्मसं परलोक जुयाव श्रीश्रीप्रताप
३१. मल्लन, थ्व देवल दयक विज्याङाव, रुक्मिणी सत्यभामा स्वरूपन, नेह्मस सारिक दयकाव
३२. जन्मान्तरसं वाय मूमालके कामनान, थव नामनं वंशगोपाल मूर्ति स्थापना याङ विज्याङा
३३. जुरो ।। सम्वत् ७६६ फाल्गुण कृष्ण षष्ठयान्तिथौ, अनुराध नक्षत्र हर्षन योग वृहस्पति-वासरे ।।
३४. पुन भाषा ।। वुसाधन गुथि पूतच्छा गुथि धवनच्छा गुथि कृष्णाष्टमी गुथि दोलजात्रा गुथि कार्त्तिक
३५. आदिन पर्व्वकालस चाकल मत, नित्य पूजा आदिन मालक्व गुथिया साहासन सिजलपति तया ।।
३६. थ्व सहासन रोहो, ह्लोने वाहिक न, यिचिल थिचिल यातसा स्यनकलसा पंचमहापातक ।। ।।

१७ संख्या

## मोहनचोकको प्रतापमल्लको स्वर्णपत्राभिलेख[1]

१. ॐ स्वस्ति ।। राजराजेश्वरीष्टदेवता श्रीश्रीश्रीतलेजुस प्रसा–
२. दन नेपालभूपालचूडामणि रविकुलतिलक महा
३. राजाधिराज श्रीश्रीजयप्रतापमल्ल देव प्रभु थाकुल
४. न थ्व मनमोहन चौक नाम राजकुल दयक विज्या
५. ङाम्रो आवनलि ग्वह्म राजान जुरसन थ्वछे निदान
६. मयातसनां सेनकलसां थ्व च्वस्यंतया साहसन का
७. रसनां व्रह्महथ्या गोहथ्या वालहथ्या स्त्रीहथ्या अग
८. म्यागमन अभक्षाभक्षन शिवलिंगध्वंसन थ्वते आदि
९. न पाप राक जुरो ।। सुनान जुरसनां थ्वछे निदान या
१०. ङान भिनकरसां शिवलिंगस्थापन पृथ्वीदान सप्त
११. पुरीयात्रा आदिन समस्त यज्ञ फल राक जुरो ।।
१२. श्रेयोऽस्तु सम्वत् ७६९ फाल्गुण वदि ७ ।। शुभ ।।

१८ संख्या

## सुन्दरचोकको सानो घण्टाको प्रतापमल्लको अभिलेख[2]

**श्री ३ लक्षे प्रतापेश्वरस्त श्री २ प्रतापमल्लन थ्व गत तया सम्वत् ७७१ फाल्गुन कृष्ण अमा-वास्या : ।।**

१. अप्रकाशित.
२. अप्रकाशित.

## १९ संख्या

## मनमोहनचोकको सुनधाराको प्रतापमल्लको अभिलेख

१. स्वस्ति ।। रविकुलतिलक भूपकेशरी श्रीश्रीजयप्रतापमल्लदेव महाराजाधिराजन, स्वपत्नी विहारदेशया राजकन्या श्रीश्रीरूपमती देवी, प्रेयसी कार्णाटदेशया श्रीराजमती, स्वपुत्र श्रीसुन्दरनारायण, श्रीसुरत साहि, पुत्री श्रीश्रीमती देवी, थ्वते स्व

२. परिवार सहितन, जलविन्दुर्पात सछि द देवीलोक प्राप्तिकामनान, थ्व लुहिति दयका विज्याङा ।। जन्मान्तरस पुनर्जन्म मुमालकाव थ्वते परिवार सहितन, देवीलोकस, परमेश्वरीया चरणसेवल याव, चोने कामनान, मूलह्म सहित–

३. न सूयपेह्म ३४ थम्रो थम्रोस शक्तिसहितन, थ्वते देव दयक विज्याङा जुरो।। गोह्म राजान जुरसनोङ, सुनान जुरसनोङ थ्वहिति देव, सालिक, सकल्यं सेनकलसनोङ, काससनोङ, कोटि व्रह्महथ्या, कोटि गोहथ्या, कोटि स्त्रीहथ्या, कोटि अ–

४. गम्यागमन, कोटि अभक्षाभक्षन कोटिशिवलिंगध्वंसन, थ्वते आदिन पाप राक जुरो ।। गोह्म राजान जुरसनोङ, सुनान जुरसनोङ, थ्वहिति, देव, सालिक, सहितन निदान याङान, भिनकलसा शिवलिंगस्था–

५. पन, पृथ्वीदान, सप्तपुरीजात्रा, आदिन समस्त यज्ञ फल राक जुरो ।। आखर सेनकर सुनान जुरसनोङ, थ्वतेको पाप राक जुरो ।। सम्वत् ७७२ माघशुक्ल पूर्णमास्यान्तिथौ ।। थ्वते देवल गुथियात, वुरोव ३९ दुंता, हने यात मालको चपरी सरोहोस ।।

(यसको सबभन्दा माथि लेखिएको)

६. ह्नव सूर्य्यवंशस, श्री ३ रामचन्द्र अवतार जुर, थ्वया वंशस श्री २ हरसिंहदेव नेपाल विज्याकह्म, थ्वया वंशस श्री २ महेन्द्रमल्ल, थ्वया काय श्री २ शिवसिंहमल्ल, थ्वया काय श्री २ हरिहरसिंह मल्ल, थ्वया काय श्री २ लक्ष्मीनरसिंह मल्ल, थ्वनलि श्री २ जय प्रतापमल्ल देव दत, थ्वनलि विहार देशया महाराजा श्री २ नरनारायन, थ्वनलि लक्ष्मीनारायन, थ्वनलि श्री २ वीरनारायन, थ्वया काय श्री २ प्राणनारायन,

७. ह्मचाच श्री २ रूपमती देवी दत, थ्व रूपमती देवी श्रीश्री प्रतापमल्ल देवया पत्नी

## २० संख्या

## मोहनचोकको दलानको प्रतापमल्लको अभिलेख[1]

१. श्री ३ कालिकायै नमः ।।......संक्षप जोको तया ह्नवस....ययौ...... श्री श्री......पति......महाराजा श्रीश्री......

२. ....सेव लयाव चोने कामनान स्वह्मसिहतन सूयषुह्म ३६ थङाम्रो......दयक थ्वते कोटि गोहथ्या....कोटि अगम्यागमन, कोटि अभक्ष्याभक्षन कोटि शिवलिंगध्वंसन

---

१. अप्रकाशित.

